

**श्री ५ महाराजाधिराज वीरेन्द्रवीरविक्रम शाहदेव**

संरक्षक

**नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान**




स्वर्गीय श्री ५ महेन्द्रबाट २०१४ साल आषाढ़ ६ गतेका दिन नेपाली साहित्य, कला र संस्कृतिलाई युगानुकूल बनाउन प्रज्ञा-प्रतिष्ठानको स्थापना गरिबक्सेको हो ।

२०३१ साल वैशाख १ गतेका दिन नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानले राष्ट्र-नायक श्री ५ महाराजाधिराज वीरेन्द्रवीरविक्रम शाहदेव सरकारको कृपापूर्ण संरक्षकत्व प्राप्त गरी यसले नेपाली भाषा, साहित्य, कला, संस्कृति तथा ज्ञान-विज्ञान-का क्षेत्रमा अझ बढ़ी विकास गर्ने सौभाग्य पाएको छ ।

नेपालको कला र संस्कृतिको गौरवमय इतिहास अत्यन्त प्राचीन, विशाल र आफ्नै किसिमको छ । आज राष्ट्रनायक श्री ५ महाराजाधिराज सरकारको सुयोग्य नेतृत्वमा जसरी बौद्धिक, आध्यात्मिक, आर्थिक र औद्योगिक विकासको ढोका उघ्रन लागेको छ उसरी सिर्जनात्मक उपासनामा लागेका हाम्रा प्रतिभाशाली लेखक, कवि, कलाकार र विद्वान्हरूले पनि आफ्नो देशको कला, साहित्य र संस्कृतिको गौरवमय इतिहासलाई संसारसँग परिचय गराउन सक्ने खालका कृतिहरू सिर्जना गरी आफ्ना-आफ्ना क्षेत्रमा महत्वपूर्ण योगदान दिनेछन् भन्ने हामीलाई लागेको छ ।

राष्ट्रको गौरव बढ़ाउने र नेपालको सौरभ फिंजाउने जस्ता महत्वपूर्ण कार्यमा नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानले सबैबाट सहयोग पाउनेछ भन्ने आशा गर्दछ ।

**लैनसिंह् बाङ्गदेल**
**कुलपति**
नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान

**वैशाख १, २०३६**

# प्रकाशकीय

नेपालीमा एउटा गाउँ खाने कथा छ । त्यसमा प्रश्न गरिन्छ—सबैलाई चाहिने के हो ? कसैलाई केही चाहिन्छ कसैलाई केही । तर त्यो केहीलाई पनि चाहिने के हो ? कथाको अन्त्यमा उत्तर दिइन्छ नाम ! नाम सबैलाई चाहिन्छ । नामविना कुनै पनि पदार्थ चिन्न र चिनाउन सकिन्छ । मानिसले प्रत्येक वस्तुलाई नाम दियो र त्यसको बिम्ब आफूले लियो । यसरी ईश्वरले रचेको संसार जस्तै अर्को सुकोमल संसारको रचना गऱ्यो र मानिस त्यसैमा बोल्यो । भाषा मानिसभित्र पस्छ र मानिस भाषाभित्र पस्छ । मनुष्यजातिको जस्तै भाषाको पनि जीवन हुन्छ, परिवार र नातागोता हुन्छ, यात्रा र मोड हुन्छ, इतिहास र भविष्य हुन्छ । मानिस मरेर जान्छ, तर उसको अनुभूति र चिन्तन भाषामा संचित हुन्छ । मानिसले भाषाको सृष्टि गरेर आफ्नै अमरापुरीको रचना गऱ्यो । महाभाष्यकार पतञ्जली भन्दछन्—"तिमी शब्दलाई राम्ररी पहिचान र उचित तवरले प्रयोग गर । त्यस्तो एउटै शब्द पनि तिम्रा निम्ति कामधेनु बन्छ, त्यसबाट जे चाहन्छौ त्यही अर्थ दुहुन सक्छौ ।" शब्दको संसारमा अर्थबिम्बहरू शरद्को निर्मल आकाशमा ताराजस्तै देखिन्छन्, त्यहाँ शब्दशास्त्रीले शब्दब्रह्मको साक्षात्कार गर्छ । शब्दशास्त्र त्यस्तो शास्त्र हो, जुनविना अरू शास्त्र र साहित्य लेख्न सकिदैन । भाषाशास्त्री श्री बालकृष्ण पोखरेलको शब्दमा—

> कविता अरूले पनी कोर्न सक्छन्
> कथा ता अरूले पनी लेख्न सक्छन्
> तिमी लेख यस्तो कुरो जो अरूले–
> तिमीले नलेखे–कहाँ लेख्न सक्छन् ।

नेपाली भाषामा भाषाशास्त्रको रचना उसको एक अंग व्याकरणबाट प्रारम्भ भएको हो । त्यसपछि यतातिर चाख बढ्दै गयो र आजभोलि भाषालाई स्वतन्त्र विषयको रूपमा अध्ययन, अन्वेषण र अनुसंधान गर्ने प्रशस्त विद्वान् निस्किरहेका छन् । यस्ता अध्ययनशील विद्वान्हरूमध्ये एक हुनुहुन्छ—प्राध्यापक श्री रामराज पन्त । उहाँले नेपाली भाषाविज्ञान नामक यस पुस्तकमा पूर्व र पश्चिमका भाषासम्बन्धी सिद्धांतको विशद चर्चा गर्नुभएको छ । यस्तो उपयोगी पुस्तक प्रकाशित गर्न दिनुभएकोमा नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान उहाँलाई धन्यवाद प्रदान गर्दछ ।

**माधवप्रसाद घिमिरे**
**उपकुलपति**
**नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान**

५ जेठ २०३६

# आमुख

समाजको सिर्जना नै भाषाको आधारमा हुने भएकोले, भाषाको अनेक पक्षको ज्ञान, वैज्ञानिक मार्गबाट प्राप्त गर्नु, सामाजिक मानिसलाई ज्यादै आवश्यक छ। भाषा नभए समाज हुन सक्ने थिएन, भाषा तन्तुले नै समाजका प्रत्येक सदस्यलाई एक सूत्रमा गाँसेर राखेको छ। मानिस-समाज र गाई आदि पशुको बथान उमेरले बराबर नै बन्दछ। तर भाषा या बोली नभएकोले गाईको बथान विकसित भएर समाज बन्न सकेन र बथानको बथानमा नै रह्यो। तर मानिसले भाषाको आधारमा, आफ्नो आफ्नो विचार आदान-प्रदानद्वारा मथेर, समाज र सभ्यतामा दिन-दिनै वृद्धि गर्दै लग्यो। भाषाको मथन नभएको भए मानिसले आजको चन्द्र-सतहसम्म उडेर पुग्ने स्तरको विकास गर्न सक्ने थिएन र मानिस पनि बथानमै हुन्थ्यो। मानिसको शरीर र आत्मामा जस्तो सम्बन्ध छ, त्यस्तै सम्बन्ध भाव र भाषामा छ। विना सरीरको आत्मा समाजमा रहन सक्तैन र समाजको वास्तविक व्यवहारी कार्यमा पनि चलन हुँदैन। भाव पनि भाषामा नबाँधिएसम्म समाजको व्यावहारिक कार्यमा काम दिने हुँदैन। जसरी विनादेहको आत्मा अन्तरिक्षमा अदेख भएर अड्केर, कल्पनामा रहन्छ, त्यसरी नै भाषाबद्ध नभएको भाव, भित्री विचारमा चह-चह मात्र गरेर रहन्छ र समाजका साथ कुनै सम्बन्ध सिर्जना गर्न सक्तैन। भाव भाषामा प्रकट भएपछि मात्र भाषा जन्मन्छ र समाज सृष्टि गरी विकासतर्फ लम्कन्छ। यसैले भाषाविज्ञानलाई सबै ज्ञान विज्ञानको जननी भन्ने चलन पनि छ। भाषाको वैज्ञानिक स्वरूपको अध्ययन गरी, आफ्नो भाषाको सुधार गरे मात्र, भाषाले समाजमा एकनास सरलतासाथ भाव प्रचार गर्न सक्तछ भन्ने सर्वविदितै छ। भावभाषाद्वारा प्रचार हुने र भाषाभाव लिपिमा बद्ध भएपछि मात्र स्थायी हुने भएकोले भाषा र लिपि सरलतातर्फ मोडने बारे पनि यसमा सुझाव परेका छन्। नेपाल राष्ट्रको भाषाको मोड शुद्ध मार्गतर्फ मात्र लम्काउन र शुभ भाव प्रचार गर्नलाई यस नेपाली भाषा विज्ञानले सहायता गर्न समर्थ भए परिश्रम सफल भएको संझनेछु।

यो पुस्तक लेख्दा उचित सुझाव र सहायता दिने मेरा सबै प्राध्यापक, विद्वान मित्रहरूलाई र केही देशी, विदेशी ग्रन्थकर्ताहरूलाई समेत हार्दिक धन्यवाद नदिई रहनसम्म पनि सक्तिनँ। शुभम्।

रामराज पन्त

२० ३०।११।६।४

# विषय-सूची

# पहिलो अध्याय

# विषय प्रवेश

## भाषा

सामाजिक प्राणीलाई मात्र भाषा, ज्ञान र भाषाविज्ञान आदिको आवश्यकता पर्छ। पशुहरूको हूलमा केही ध्वनिले काम चलाएको हुन्छ। गाईहरूको बथानमा चितुवा आएको संकेत केही ध्वनिले दिइन्छ। यो ध्वनि सर्वदा करीब-करीब एकैनास रहन्छ र यसमा कुनै विकास या परिवर्तन भएको पाइँदैन। मानिसको समाज र गाई वस्तुको बथान करीब-करीब उत्तिकै प्राचीन छ। तर गाईको बथानमा भाषा ज्ञान विज्ञान विकसित भएको छैन। गाई र अरू पशुहरूको बथान मात्र हुने, र समाज सिर्जन हुन नसक्ने भएकोले, भाषा पनि सिर्जना हुन नसकेको हो। मानिसले धेरैजसो जहाँ बसोवास गरे पनि समाज सिर्जना गर्दै लैजाने र समाजलाई नै मूल आधार बनाएर जीवन यापन गर्ने र समाजको भलाइमा नै आफ्नो भलाइ संझन सक्ने भएकोले मानिसलाई आफ्नो आफ्नो विचारको आदान प्रदान गर्न भाषाको ज्यादै आवश्यकता पर्छ। विचार र सो प्रकट गर्ने भाषा नभएको मनिस पशुवत् नै हो। मानिसको भीड़ जहाँ बसोवास गरे पनि समयको क्रमअनुसार समाजको प्रबन्ध पनि गर्दै जान्छ। तर गाईको या अरू पशुहरूको बथान जति दीर्घ काल कुनै स्थलमा बसे पनि समाज सृष्टि गर्न सक्तैन र बथान अवस्थामै रहन्छ। त्यसैले पशुलाई भाषा विकास गर्ने आवश्यकता पर्दैन। मानिस समाजमा रहने हुनाले उसलाई सदा विचारको आदानप्रदान गर्नुपर्छ। आपस आपसमा विचारको लेनदेन गर्ने कारबारले नै भाषा सृष्टि गर्नुपर्ने जरूरत पर्छ। यसै विचार विनिमयको आधारमा नै समाज अडेको हुन्छ। यो विचार विनिमय गर्ने शक्ति नभएमा मानिस पनि बथाने पशुवत् नै रहन्छ। मानिस सामाजिक प्राणी भएकोले नै उसलाई आफ्नो विचार विनिमय गर्ने आवश्यकता सधैं परिरहन्छ। बथाने पशुमा संकेत वापतः प्रकट गर्ने ध्वनिलाई भाषा भनिदैन।

विचार विनिमय धेरै प्रकारबाट हुन सक्तछ। शब्दद्वारा, वाक्यद्वारा टाउको हल्लाएर, नाक फुलाएर, आँखा नचाएर, ताली बजाएर, गोडा बजाएर, झंडा हल्लाएर, खोकेर, कनेर, हातले इशारा गरेर, मुख विगारेर, र चुटकी बजाएर आदि। नेपालमा केही साहूवर्गमा लाखामरी बाँडेर निम्ता दिने र केही धनीवर्गमा ताछेको नरिवल, पान, सुपारी, फूल, दूबो, हलेदो आदि पठाए र निमन्त्रणाको सूचना दिने पहिलेदेखि चलेको

छ। यो दुवै कार्य चाड विवाह आदि मंगलको निमन्त्रणाको सूचक-भाषा मात्र केही समयअगाडिसम्म थिए। हाल यसमा निमन्त्रणा-पत्र छपाएर, थपेर, कुरो, अझ स्पष्ट पार्ने चलन पनि चलेको छ। स्काउटका मानिस झंडाद्वारा विचार आदान प्रदान गर्छन्। चोरहरू अँध्यारामा र दर्बारिया भित्रियाहरू त उज्यालैमा पनि चिमोटाचिमोट गरेर या औंला बटारेर कुरा गर्छन्। आसकहरू; घूसखोरहरू, बाह्रमासे जुवाडेहरू, गुप्तचरहरू, दलालहरू आँखा तरेर या अनेक अरू अंगको इशाराबाट आफ्नो मतलब साध्य गर्छन्। फटाहा वकीलहरू घुस्याहा जजहरूलाई टेबिलमा औंला आदि राखेर इशारा गरेर प्राप्त भएको रकमको अवगत गराउँछन्।

अर्काको विचारको या ज्ञानको पान गरेर जानकारी प्राप्त गर्ने मार्ग मानिसको शरीरमा तीन मात्र छन्ः—(१) स्पर्शद्वारा (२) आँखाद्वारा (३) कानद्वारा।

(१) स्पर्शद्वारा विचार प्रकट हुने र विचार ग्रहण गरिनेमा चिमोटाचिमोट घुच्याउनु, अंकमाल गर्नु, छुनु आदि साधन पर्दछन्।

(२) आँखाद्वारा मतलब प्रकट गरिने र ग्रहण गरिनेमा लाखामरी, नरिवल, सुपारी, निमन्त्रणा-पत्र, झण्डा, हलेदो, पान र अनेक इशाराहरू पर्दछन्। अपुंगो मन-भोगले श्री सत्यनारायणको पूजाको प्रसाद भन्ने हामीलाई स्वतः ज्ञान आँखाबाट हुन्छ।

(३) कानद्वारा भाव ग्रहण गर्ने साधनमा अनेक प्रकारको ध्वनि कानबाट ग्रहण गरिन्छ। चुटकी, चटकनी, चट्याङचुटुङ ताली, मोटरको आवाज मुखबाट निक्लने चटचट, आहा, अहो, रे, रे, कठै, ! कठै ! तार, आकाशवाणी र मानिसको बोली। मानिसको मुखबाट, अरू कुनै कुराबाट या अरू कुनै चीजबाट या चीजको संभोगबाट प्रकट हुने सबै ध्वनि कानद्वारा मानिसमा प्रवेश गर्दछ। कानद्वारा नै मानिसको बोली र अरू ध्वनि र सार्थक ध्वनिसमेत ग्रहण गरिने हुनाले र ज्यादै प्रचलितसमेत हुनाले यो महत्त्वपूर्ण छ।

स्पर्श नेत्र र कान यी तीनै साधनहरूबाट ज्ञान प्राप्त हुने भएकोले व्यापक अर्थमा तीनैलाई भाषा भने पनि हुन्छ।

नेपाली साहित्यमा पनि श्रव्य साहित्य र द्रष्ट साहित्य दुई प्रकारका हुन्छन्। कानबाट सुनेर मानिसमा ज्ञान भिजेर जाने साहित्यलाई श्रव्य साहित्य र आँखाबाट देखेर ज्ञान भित्र भिज्ने साहित्यलाई द्रष्ट साहित्य भन्ने चलन छ। यो हाम्रो साहित्यको प्राचीन परापरा हो। स्पर्शद्वारा ज्ञानको प्रकाश गराएर दर्शकलाई ज्ञान ज्ञापन गराउने केही मूक नृत्य छन्, जस्तो—नेपाली देवीनाच खड्गनाच आदि र पुराना कुँदिएका स्पर्श चित्रकलाहरूमा पनि देखिन्छ। यी चित्रहरूमा कुँदिएका मानिसका अवयवहरूका स्पर्शहरूले हामीलाई विशेष भाव अवगत गराउँछन्। कान आँखा र स्पर्शको माध्यम प्राचीन अनेक साहित्यमा पाइन्छ। वर्तमान युगमा पनि हातहरू दुईको चित्रको

मिलन स्पर्शबाट मित्रता बोध गराउने चलन देखिएकै छ। यो चित्रको भाव हामीमा आँखाद्वारा भित्र पस्तछ। तर चित्रका हातहरूको सुल्टो गाढ स्पर्शले मित्रताको ज्ञान बोध गराउँछ। त्यसकै विपरीत उल्टो हात स्पर्शले रोकारोक बुझाउँछ। यसबाट स्पर्श साधनको महत्त्व ज्ञान हुन्छ।

कानद्वारा भाव ग्रहण गरिनेमा सुन्न लायक ध्वनि उत्पन्न भएपछि मात्र कानले भाव ग्रहण गर्न सक्तछ। यही ध्वनिद्वारा भाव प्रकट गर्ने साधन नै ज्यादै प्रचलित र महत्त्वपूर्ण छ। लिपि नभएको समयमा पनि कान-कानबाट साहित्यको सिर्जना र संरक्षण भएको पाइन्छ। जस्तै प्राचीन ग्रन्थ वेदका धेरै अंशहरू कंठस्थ गरेर कान-कानको माध्यमबाटै संरक्षण भएर आएका हुन्। हाम्रो नेपाली अनेक प्रकारका साहित्यहरू कान-कानबाटै सरेर सञ्चित भएर र संरक्षण भएर आजसम्म हामीलाई प्राप्त भएका छन्। त्यस्ता कान-कान साहित्य सबै आजसम्म पनि पुस्तकको आकारमा भित्र पर्न सकेका छैनन्। केही मात्र पुस्तकमा प्रवेश गरेका छन्।

नेपाली जन-जीवनको अति लामो इतिहास र कार्यको दक्षता बताउने प्राचीन कान-कान साहित्य धेरै पाइन्छन्। वर्णमालासम्म नपढेकोले यस्ता महत्त्वपूर्ण साहित्य सञ्चय गरेर राख्नु पनि गौरवकै विषय हो। लोकगीत, उखान, टुक्का, बालुन, गाउँ खाने कथा, डाँकका वचन, भजन, जुहारी, रसिया र सोल्टी नाचका गीत जड़ी बूटी औषधि आदि आजसम्म पनि बृहत् अंश कान कानको माध्यमबाट नै प्राप्त भएका छन्। लिपि नभएको समयमा र पढ्न लेख्न नजान्ने तर व्यवहार-पटु बुद्धि भएका सज्जनहरूले यस्ता साहित्य सिर्जना गरेर नेपालका निमित्त कान-कान मार्गद्वारा संरक्षण गरेर नै राखेका छन्। यी कान-काने कुरा नै गाउँघरका पुस्तकालय भएरै रहेकाले आजसम्म प्राप्त हुँदै छन्।

विस्तृत रूपले (१) स्पर्शद्वारा विचार प्रकट हुने र विचार ग्रहण गरिने। (२) आँखाद्वारा मतलब प्रकट गरिने र ग्रहण गरिने। र (३) कानद्वारा भाव ग्रहण गरिने तीनै साधनलाई भाव प्रकाश गर्ने माध्यम मानी भाषा भने पनि हुन्छ। तर सामान्यतया सुन्न लायक ध्वनि उत्पन्न भएपछि मात्र कानले भाव ग्रहण गर्न सक्तछ। यही ध्वनिद्वारा भाव प्रकट गर्ने साधन नै ज्यादा प्रचलित र महत्त्वपूर्ण छ।

अनेक अस्पष्ट भाव प्रकट गर्ने ध्वनिलाई भाषा भन्न मनासीब छैन। दुई हातले ताली बजाएर अथवा सुसेलेर ध्वनि सिर्जना गरेर पनि भाव केही व्यक्ति या केही समयका निमित्त प्रकट गर्न सकिन्छ। तर यस्ता किसिमका क्षणिक ध्वनिले भाव जनाउँदैमा यसलाई भाषा नै हो भन्ने संज्ञा दिन मिल्दैन। लाटोले हातको इशारा र ध्वनिद्वारा आफ्नो भित्री भाव व्यक्त गर्छ। त्यस्तै ग्वाँगेले आफ्नै लठेप्रो ध्वनिले आफ्नैअनौठा प्रकार ले भाव व्यक्त गर्छ। सबै अदालतमा यस्ता लाटा र ग्वाँगेले आफ्नै

विचित्र किसिमबाट प्रकाश गरेका भाव-सूचक-ध्वनि कानूनी प्रमाणअन्तर्गत पर्दछन्। तर कानूनले समेत यस्ता भावसूचक क्षणिक ध्वनिलाई मानी भाषासरह व्यवहार गरे पनि भाषा विज्ञानले यस्ता ध्वनिलाई भाषा भन्न आँट्दैन। विज्ञानले आफ्नो बाटो सधैं वैज्ञानिक तरीकाले मात्र कोरेर र तानेर नै लैजान्छ।

कराएर निस्कने सबै ध्वनिलाई भाषा भनिदैन, जस्तो पशुको ध्वनि। मानिसका बोलिको सबै ध्वनिलाई पनि भाषा भनिदैन। जस्तो लाटो र ग्वाँगेको ध्वनि बारे माथि नै चर्चा भयो। समाजमा मानिसले परस्परमा भाव आदान-प्रदान गर्न किटिएको भाव-बोधक ध्वनि नै भाषा हो। यसको विकास पनि यसै अन्तर्गत पर्दछ। केही मनुष्यको भावबाट निस्केको सार्थक ध्वनि पनि, केही अवस्थामा भाषाको काम गरे पनि, भाषा विज्ञानको दृष्टिमा भाषा नहुने पनि, लाटो र ग्वाँगेको सार्थक ध्वनि बारेको माथिको चर्चाबाटै स्पष्ट भएकै छ।

सबै किसिमको ध्वनिलाई भाषा नभनेर साबुत र निरोगी मानिसको मुख सम्बन्धी अवयव आदिबाट र मुखबाट निस्की समाजका निमित्त सार्थक भै विचारसमेत आदान प्रदान हुन सक्ने सजिया ध्वनिलाई मात्र भाषा भन्नु उचित छ। कुनै मतमा विश्लेषण र अध्ययनसमेत हुने ध्वनि-समष्टिलाई मात्र भाषा मानिन्छ। भाषामा प्रयोग हुने टुक्रा टुक्रा पारेर पठन पाठनसमेत हुने, सजिया ध्वनिलाई मात्र भाषा भन्नुपर्छ। खास एउटै ध्वनिबाट यही अर्थ कसरी पैदा भयो भन्ने प्रश्न ज्यादै विचारिलो र जटिल छ। यसमा प्राकृतिक अर्थात् सहजात सम्बन्धबाट पैदा भएको भन्न मिल्दैन। केही थोरै शब्दलाई छोडेर धेरैजसो शब्दहरूमा परम्पराको आधार अथवा विना कारणको चलनको मात्र आधारमा अर्थ-आधार मान्नुपर्ने अवस्था पर्छ।

हरेक परिभाषा पूर्ण स्वच्छ हुँदैन। परिभाषामा कुनै न कुनै किसिमको दोष रहन्छ। अनेक भाषा वैज्ञानिकहरूले गरेका भाषाको परिभाषामा केही न केही त्रुटि देखिन्छन्।

भाषा विज्ञानले स्वस्थ मनुष्यको भाषालाई मात्र ध्येयमा राखेको हुन्छ। त्यसमा पनि बालक र महाकवि लक्ष्मीप्रसादको 'भिखारी' को मूक भाषा र इंगित भाषा आदिलाई ध्येयमा लिंदैन। अट्टहास, रुवाइ, गुन-गुन, करुण क्रन्दन आदि नबुझिने शब्दहरू कुनैसँग यसको ज्यादा मतलब छैन। यी ध्वनिहरू वाणीद्वारा प्रयोग भए पनि विश्लेषण नहुने भएकाले भाषाविज्ञानका ध्येयभित्र नपरेका हुन्। भाषा शुरूमा, बोलीको रूपमा, गोलमाल र अव्यवस्थित रूपमा पनि बिस्तारै बिस्तारै व्यवस्थित भएर एक बाटो लाग्दै जान्छ।

## भाषा र बोली

साहित्य सिर्जना नभएसम्म भाषालाई बोली भन्ने चलन छ। साहित्य

सिर्जना हुँदै विकास बढेपछि कुनै एक बोलीले भाषाको स्थान प्राप्त गर्छ। नेपाल राष्ट्रमा धेरै बोली पाइन्छन्, जस्तै :—गुरुङ बोली, मगर बोली, लिम्बु बोली, ह्यू बोली र दानुवार बोली आदि। भाषा पनि निकै छन्—जस्तै, (१) नेपाली भाषा (राष्ट्रभाषा), (२) मैथिली भाषा (३) नेवारी भाषा आदि।

## भाषाविज्ञान

प्रत्येक चेतन पदार्थमा ज्ञानको अंश कुनै रूपमा अवश्य रहन्छ। धेरै र थोरैको मात्रामा मात्र फरक हो। धेरै ज्ञान हुनेले जाँगर चलाए धेरै विकास गर्दछ। थोरै ज्ञान हुनेले धेरै जाँगर चलाए पनि विकास केही मात्र हुन्छ। यो ज्ञान दुई किसिमको हुन्छ। एक स्वतः सिद्ध ( नैसर्गिक ), दोस्रो, बुद्धिग्राह्य। स्वतःसिद्ध ज्ञान पशु पक्षीमा ज्यादा रहन्छ, जस्तो—पौडी खेल्नु, पशु पक्षीमा स्वतः प्राप्त भएको हुन्छ। पेटमा अजीर्ण आदि भै अपच भएमा कुकुर स्वतः हरियो घाँस जडीबूटीको रूपमा आफै पैलाएर खान्छ। आगो देखेपछि स्वतः पर सरेर पन्छन्छ। तर मानिसलाई पौडने ज्ञान सिकेर आर्जन गर्नुपर्छ। त्यस्तै औषधिको ज्ञान पनि प्रयत्न गरेर अनुभवबाट प्राप्त गर्नुपर्छ। मानिसका केटाकेटी आगो समात्न अघिसरीसरी समात्छन्। उनीहरूलाई पछिबाट मात्र पोल्ने भन्ने कुराको ज्ञान हुन्छ।

बुद्धिग्राह्य ज्ञान दुई किसिमका हुन्छन्—विज्ञान र कला। विज्ञान सर्वत्र सधैं र सबैमा एकैनास रहन्छ। जुनसुकै अवस्थामा पनि विकल्प र अस्पष्ट कुरालाई ठाउँ नदिई आफ्नो तत्वमा सर्वत्र व्यापक सिद्ध राख्नेलाई विज्ञान, अति शुद्ध ज्ञान भन्दछन्। जस्तै दुईमा दुई जोडदा सर्वत्र, सधैं र सबै धनी गरीब समाजमा चार मात्र हुन्छ। यस्तै किसिमसँग विज्ञानका सब सिद्धान्त समान रूपले सर्वत्र लागू र चालु छन् र कहिले केही कहिले केही र अन्यत्र अरू नै हुँदैनन्।

कला सीमित र विकल्प-आत्मक हुन्छ। नेपालीलाई एक किसिमको स्त्रीको चित्र रोचक भए फ्रान्समा स्त्रीको अर्कै किसिमको चित्र रोचक हुन्छ। नृत्यकलामा पनि यस्तै देखिन्छ। केहीलाई नेपाली सोल्टी नाच बडो राम्रो लाग्छ, तर केहीलाई उर्दूका नाच। कुनैलाई रूसी नृत्य, कुनैलाई बेलायती नृत्य। फेरि भावना पनि फरक फरक रहन्छ, अंग्रेजलाई अंग्रेजी गान र नृत्यप्रति र नेपालीलाई नेपाली गीत र नृत्य-प्रति। कलामा यही विभिन्न, विकल्पता र विप्रतिपत्ति छ।

विज्ञानको लक्ष सदा र सर्वत्र विशेष शुद्ध ज्ञानतर्फ मात्र रहन्छ। तर कलाको ध्येय व्यवहार ज्ञान, मनोरञ्जन र उपयोगपट्टि रहन्छ। शुभ कलाले मानिसलाई व्यवहारपटु बनाउँछ। दिलमा मनोरञ्जन भावले भरेर राख्छ। व्यवहारमा कलाबाट प्राप्त हुने अनेक लक्षहरू छन्। जस्तै :—यश, अर्थ, सुख र पद आदि पनि हुन्।

मानिसहरू विश्वभर किन एउटै भाषा बोल्दैनन् ? भाषाको उत्पत्ति के हो ? भन्ने यस्ता वैज्ञानिक चर्चाबाट विशुद्ध ज्ञान र त्यस्तो जिज्ञासाको तृप्ति बाहेक अरू केही लाभ हुँदैन । त्यसैले विज्ञानलाई विशुद्ध ज्ञानको क्षेत्र मानेको हो । अपवाद-रहित सत्ता स्थिर भएपछि मात्र ज्ञान विज्ञानको श्रेणीमा उक्लिन्छ । विकल्प रहेसम्म जतिसुकै उच्च गूढ ज्ञान पनि विज्ञान हुन सक्तैन । "नहि वचन, शतेनापि वस्तुतो अन्यथा करणीय" अर्थात् सयौं कुराको फाँका मिलाएर गरे पनि सत्य वस्तु ( तथ्य ) लाई अर्को कुरा बनाउन सकिँदैन ।

विज्ञान, विशुद्ध-ज्ञानलाई, बदल्न सकिँदैन । तर कलाको ध्येय, देश, समय, समाज, लक्ष, उपयोगिता र मनोरंजनको आवश्यकताअनुसार बदल्न सकिन्छ । समय र समाज-अनुसार कलामा विकल्प भै नै रहन्छ । एकै देश र समयको शास्त्र सबै देश र कालमा स्थिर सत्ता राखेर अड्छ भन्ने संझनु मानिसको सुबुद्धिको अवहेलना गर्नु हो । वर्तमान समयमा मोटा-मोटी रूपले अध्ययनका सबै विषयहरूलाई तीन वर्गमा विभाजन गरेको पाइन्छ—(१) प्राकृतिक ज्ञान, (२) सामाजिक ज्ञान र (३) मानविकी ज्ञान । प्राकृतिक विज्ञानमा खनिजशास्त्र, रसायनशास्त्र, भौतिकशास्त्र, भूगर्भशास्त्र आदिको अध्ययन हुन्छ । सामाजिक विज्ञानमा इतिहासशास्त्र, समाजशास्त्र, राजनीति, अर्थशास्त्र आदिको पठन पाठन हुन्छ । मानविकी विज्ञानमा साहित्य, कला, संगीत आदिको पढाइ हुन्छ । विचार र मनन गरेर हेरेमा भाषाविज्ञानको धेरै अंश समाज विज्ञानमा पर्दछ । मुखबाट निस्केको ध्वनि कसरी सरेर कानको प्वालभित्र पस्दछ भन्ने विषयको चर्चा प्रकृतिविज्ञानभित्र राख्नुपर्छ । उच्चारण आदि शैली विज्ञानको अध्ययन मानविकी विज्ञानभित्र छ । यसका धेरै अंगहरू विज्ञानभित्रै पर्ने हुनाले "भाषाविज्ञान" नाम उचित नै छ । अर्थशास्त्र, राजनीति समाजशास्त्र आदि विषयहरू गणित, रसायन र भौतिक विषयहरू जत्तिकै पूर्ण वैज्ञानिक कक्षाका छैनन् । तर पनि राजनीतिविज्ञान, समाजविज्ञान आदि भन्ने परम्परा र चलन विद्यमान छ । भाषाविज्ञान पनि भौतिक विज्ञान, •रसायनविज्ञान, गणितविज्ञान आदि सरह पूरै विज्ञान नभए पनि उपरोक्त अरू विज्ञान भनिने विषयहरूको हदभन्दा बर्ता नै वैज्ञानिक छ । वर्तमान समयको यसको प्रगतिको तीव्र गतिले यसलाई विज्ञानतर्फ नै जोरसंग डोर्‍याएर लगेको छ । उक्त सबै बूँदाहरूको विचार र मनन गर्दा भाषाविज्ञानलाई विज्ञान मान्नमा कुनै आपद मात्र नदेखिने होइन, सुहाउने पनि छ । उन्नाईसौं शदीका विद्वानहरूमा भाषाको तत्वको अध्ययन विज्ञान कक्षाको हो, या शास्त्र कक्षाको भन्ने हो भन्नेमा धेरै वाद-विवाद चर्चा आदि चलेको थियो । तर अब यो वादविवाद समाप्तप्रायः भएको छ ।

यस पुस्तकमा भाषा-विज्ञानसम्बन्धी सामान्य सिद्धान्तहरूको विवेचना गर्ने अभिप्राय राखिएको छ ।

वैज्ञानिक तरीकाले भाषाको अध्ययन गर्ने कार्यलाई भाषाविज्ञान भन्दछन् ।

वैज्ञानिक अध्ययनको अर्थ भाषाको भित्री र बाहिरी रूपको ठीक अध्ययन गरी त्यसैको विकासको समेत थप अध्ययन गर्नु हो ।

उन्नाइसौं शताब्दी भरि र बीसौं शताब्दीको प्रथम पादसम्म भाषाको अध्ययन दुई किसिमबाट गरिन्थ्यो । ( १ ) ऐतिहासिक मार्ग र ( २ ) तुलनात्मक मार्ग । तर १९२५ पछिका भाषा वैज्ञानिकहरूको दृष्टिकोण बदलिएको छ । समकालीन भाषाको पनि तुलनात्मक अध्ययन गर्न सकिन्छ । जस्तै वर्तमान नेपाली र वर्तमान मैथिलीको । यी दुवै भाषाहरूको वर्तमान विकासको पनि अध्ययन हुन सक्तछ । फेरि उक्त दुवै भाषाहरूको इतिहास र बितेका समयमा भएको विकास पनि तुलनात्मक मार्गबाट अध्ययन गर्न हुन्छ । तुलनात्मक र ऐतिहासिक मार्ग दुवै साथसाथै विभिन्न समय र भाषाको अवस्थामा अध्ययन चल्न सक्ने हुनाले यस मार्गप्रति दृष्टिकोण बदलिएको हो ।

भाषाविज्ञानका निकै प्रकार छन् । त्यसमध्ये केही प्रचलित चार प्रकार तल दिइएका छन् :—

( १ ) ऐतिहासिक, (२) तुलनात्मक, (३) समकालीन र (४) प्रयोगात्मक ।

तुलनात्मक भाषाविज्ञानलाई पुनः दुई भाग गरिन्छ—( क ) समकालीन र (ख) ऐतिहासिक ।

समकालीन भाषाविज्ञानलाई पनि फेरि दुई भागमा बाँडिन्छ ।—( क ) वर्णनात्मक र ( ख ) रचनात्मक ।

( १ ) **ऐतिहासिक मार्ग**—यस मार्गबाट कुनै एक भाषाको जीवनीको अध्ययन हुन्छ । अनेक समकालीन अवस्थाको अध्ययनको जोड जम्माबाट यसको रूप बनेको हुन्छ । अनेक समयको गतिले ल्याएको भाषाको परिवर्तन र विकास आदि यस मार्ग-अन्तर्गत परेको हुन्छ । ऐतिहासिक अध्ययनमा एउटै भाषाको जीवनीका अनेक अवस्थाको अथवा तुलनामा अरू भाषाका विभिन्न अवस्थाको जीवनीसँगको तुलनामा अध्ययन गर्नुपर्ने आवश्यकता प्रायः पर्दछ ।

( २ ) **तुलनात्मक मार्ग**—यसमा कुनै दुई या बढी एकै परिवारका भाषाहरू अथवा अनेक परिवारका दुई अथवा बढी भाषाहरूको तुलनात्मक अध्ययन गरिन्छ । ज्यादाजसो उक्त भाषाहरूको दँजाइको आधारबाट भाषाको आरम्भिक अवस्थाको, विकासको र ध्वनिको, शब्दरूपको र वाक्य बनावट आदिको अध्ययन हुन्छ । यसमा तुलनात्मक ज्ञानको महत्त्वमा जोड दिएको हुन्छ ।

( क ) समकालीन भाषाहरूको तुलनात्मक अध्ययनलाई समकालीन तुलनात्मक भाषाविज्ञान भन्दछन् । जस्तै—वर्तमान नेपाली भाषा र मैथिली भाषाको तुलनात्मक अध्ययन ।

( ख ) भूतकालका दुई भाषाको तुलनात्मक अध्ययनलाई ऐतिहासिक

तुलनात्मक अध्ययन भन्दछन् । जस्तै—बाह्रौं शताब्दीको नेपाली र बाह्रौं शताब्दीको मैथिलीको तुलनात्मक अध्ययन ।

( ३ ) **समकालीन**—आजको नेपाली भाषाको रूप के छ ? यसमा के प्रवृत्ति छ ? कसरी यो रूप अध्ययन हुन्छ भन्ने आदि प्रश्नहरू समकालीन अध्ययनबाट हुन्छ । थो अनेक दृष्टिकोणबाट हुन्छ । ध्वनि, शब्द, रूप, अर्थ र वाक्य गठनको अध्ययनलाई वर्णनात्मक दृष्टि भन्दछन् । भाषाको संरचनाको विश्लेषण गरेर भित्री तत्वसम्ममा विकास पार्नु आदिलाई संरचनात्मक भन्छन् ।

( ४ ) **प्रयोगात्मक भाषा विज्ञान** ( Applied Linguistics )—यसमा मातृभाषा या विमातृ भाषाको पढाइ कसरी गर्ने ? विदेशी भाषा कसरी र कुन उमेर र स्तरमा पढाउने ? कोश, पाठ्यपुस्तक व्याकरण, अनुवाद कुन मार्गले तयार गर्ने ? उच्चारण कसरी सुधार्ने ? टाइपराइटर र अरू आवश्यक यंत्र कसरी निर्माण गर्ने ? भन्ने विषयहरूको अध्ययन गरेर समस्या हल गर्ने कार्य गरिन्छ ।

## भाषाविज्ञानको अर्थ

भाषाविज्ञान शब्दको अर्थले धेरैजसो भाषाको सैद्धान्तिक पक्षलाई नै औंल्याउँछ ।

भाषाहरूको तुलनात्मक अध्ययनमा ज्यादा जोड दिने समयमा यसलाई तुलनात्मक भाषाविज्ञान ( कंप्यारेटिव फिलोलॅजी ) भनिन्थ्यो । फिलोलॅजीको अर्थ भाषाको प्रेम हो । फिलोलॅजीको अर्को अर्थ शब्दको प्रेम भन्ने पनि हुन्छ ।

श्री प्रिचर्डले १८४१ मा ग्लोटोलॅजी भन्ने शब्दबाट भाषाविज्ञानको नामकरण गरे । ग्लोटोलॅजीको अर्थ भाषाविज्ञान हो । तर यो ग्लोटोलॅजी पनि पछि धेरै समयसम्म प्रचलित भएन । श्री टकरको मतमा ग्लोटोलॅजी शब्द नै भाषाविज्ञान जनाउन उत्तम छ भन्ने थियो । तर अरू विद्वानले यो वास्ता गरेनन् । ग्लोटोलॅजीको खास सादा अर्थ जिह्वाविज्ञान हो । यसको अर्को अर्थ जिह्वा प्रेम पनि हुन्छ ।

१७१६ सदीमा ग्लासोलॅजी भन्ने नाम पनि यसको थियो । तर पछि अर्थ पूर्ण ठीक नभएकोले आफैं हटेर गयो ।

भाषाविज्ञानको अध्ययनलाई व्याकरणले शुरूमा धेरै सहायता दिएकोले केही समयसम्म तुलनात्मक व्याकरण नाउँ दिइएको थियो । पछि तुलनात्मक व्याकरण र भाषाविज्ञानमा धेरै फरक छ भन्ने थाहा भएपछि तुलनात्मक व्याकरण भन्ने नाउँ छोडियो ।

बेलायती पुस्तकहरूमा यो विज्ञानलाई 'साइन्स अब् ल्याङ्वेज' अर्थात् भाषाको विज्ञान भन्ने चलन थियो । फ्रांसमा यसलाई 'लिनगुइष्टिक' ( Linguistigue- ) भन्ने चलन चल्यो । यही नाम चलनमा छँदैछ । जर्मनीमा पनि भाषा विज्ञान नै

भनिन्छ । बेलायतमा लिंग्विस्टिक्स अथवा फिलोलॅजी भन्ने चलन छ । भाषाविज्ञानलाई कुनै विद्वानले भाषाशास्त्र भनी लेखेका छन् । अमेरिकामा पनि फिलोलॅजी भन्ने चलन छ ।

केही विद्वानहरूले फिलोलॅजी •( भाषाविज्ञान )-ले प्राचीन भाषा र प्राचीन लेखको अध्ययन मात्र गर्छ र लिंग्विस्टिक्स (भाषाशास्त्र) ले आधुनिक जीउँदो भाषाको र बोलीहरूको मात्र अध्ययन गर्छ भन्ने मत प्रकट गरी विभिन्नता प्रदर्शन गरेका पनि छन् । भाषा विज्ञान र भाषाशास्त्र दुवै शब्दलाई एकै अर्थमा लिए पनि केही हर्जा छैन भन्ने मत पनि धेरैको छ । यही नै प्रचलनमा छ ।

## व्याकरण र भाषाविज्ञान

महापण्डित पतञ्जलिले शब्दहरू र सिद्धान्तहरू ( सूत्रहरू ) को संयोजनले नै व्याकरणको प्रयोग जीवनी सिर्जना हुन्छ भनेका छन् । ( लक्ष्यलक्षणे व्याकरणम् ) ।

भाषाविज्ञान र व्याकरण दुवैको सम्बन्ध भाषाका साथ भए पनि अध्ययन को दृष्टिकोण अलग अलग छ । भाषाविज्ञानले भाषाको अध्ययन सिद्धान्त पक्षबाट गर्छ । सिद्धान्त प्रतिपादन गर्नु नै भाषाविज्ञानको ध्येय हुन्छ । यसको कुनै एक भाषाका साथ सम्बन्धभन्दा भाषाको सिद्धान्तका साथ ठोस गहिरो सम्बन्ध हुन्छ । व्याकरणको कुनै एक भाषाको ठीक र बेठीक प्रयोगसाथ ठोस सम्बन्ध रहन्छ । एक भाषालाई प्रचलित सर्वमान्य नियमबमोजिम अध्ययन गर्नु र गराउनु नै व्याकरणको ध्येय हुन्छ । व्याकरण शब्दको अर्थ भाषामा टुक्रा टुका गरेर उचित स्वरूप बताउनु हो । त्यसैले भाषाविज्ञान र व्याकरणमा अन्तर छ । भाषाविज्ञानले सिद्धान्त पक्षको अध्ययन गर्दा प्रचलित व्याकरण पक्षको वास्ता नराखी गर्छ । धेरै पहिले शुरू-शुरूमा भाषाविज्ञानले व्याकरणका प्रचलित नियमहरूलाई दृष्टिमा राखेर भाषाको सिद्धान्त पक्षको अध्ययन पनि गर्थ्यो । अब भाषाविज्ञानको आफ्नै अलग क्षेत्र बनेको छ ।

भाषाविज्ञानबाट व्यावहारिक लाभ ज्यादा हुँदैन । तर व्याकरण दैनिक कामको कुरो हो । भाषाको प्रयोगमा ठीक बाटो बताउँदै, बोल्ने र लेख्ने मानिसलाई, व्याकरणले सहायता गर्दछ । भाषाविज्ञानले विज्ञानतर्फको ज्ञानमा ज्यादा ध्यान दिन्छ । व्याकरणको झुकाव ज्यादा कलामा हुन्छ ।

दुवै विषयको सम्बन्ध भाषासित भए पनि दुवैका दृष्टिकोण अलग अलग छन् । कुनै एक भाषाको राम्ररी अध्ययन र ठीक प्रयोग गराउनु नै व्याकरणको काम हो । तर भाषाविज्ञानको कुनै एक भाषासित मात्र सम्बन्ध छैन । भाषाविज्ञानले भाषाहरूको अध्ययन गरेर सिद्धान्तहरूको प्रतिपादन गर्छ । यसले भाषाको शब्दको जडसम्म गएर अध्ययन वैज्ञानिक सिद्धान्तको आधारमा गर्दछ । व्याकरणले यो प्रयोग ठीक या बेठीक भन्ने ठोकुवा मात्र बताउँछ । तर भाषाविज्ञानले त्यस ठोकुवाभित्र पसेर, अध्ययन गरेर, व्याकरणको मूलको पूर्ण विवेचन गर्दछ । 'एकादश' शब्दलाई

व्याकरण शुद्ध भन्छ र चुप लाग्छ तर भाषाविज्ञानले किन 'एक दश' शुद्ध भएन के कारणले 'एकादश' भयो, 'द्वादशले यस 'एकादश' मा कस्तो प्रभाव पार्‍यो भन्ने इत्यादि-को खोजी गर्दै एक मूल सिद्धान्तमा पुग्न खोज्दछ । तर व्याकरणमा सिद्धान्त पक्षको वैज्ञानिक चासो हुँदैन । एकनास लेख्ने कार्य चालु गर्ने नियममा ज्यादा जोड हुन्छ ।

व्याकरण भाषाविज्ञानको अनुगामी हो । भाषाविज्ञान नयाँ प्रयोगलाई सकारण र स्वाभाविक मान्दछ । व्याकरण त्यही प्रयोगहरूलाई केही समयपछि अपनाएर प्रयोगको ठीक मार्ग ठोकुवा गर्दछ । यसै कारणले फ्रान्स आदि देशहरूमा प्रतिदश वर्षमा व्याकरण अदली बदली गर्ने चलन छ । भाषाविज्ञानले साधु मानेका कुरालाई पनि व्याकरणले धेरै समयसम्म आनाकानी गरेर पर पन्छ्याएको हुन्छ । तर व्याकरणलाई उक्त साधु कुरा स्वीकार गर्न जन प्रयोगले कर लगाउँछ ।

व्याकरण अप्रगतिवादी या पुरातनवादी छ तर भाषाविज्ञान प्रगतिवादी या नवीनतावादी छ । भाषाविज्ञानको सम्बन्ध भाषाको जीवित रूपसँग छ । तर व्याकरण यही जीवितरूपलाई प्रारम्भमा बेठीक भन्दछ । व्याकरणले भाषाविज्ञानको अगाडि बराबर झुकी बेठोक भनेकोलाई पनि फेरि ठीक भन्दै स्वीकार गर्नुपर्छ । व्याकरण 'सर्व' या 'उष्ट्र' लाई मात्र ठीक भन्दछ । तर 'सबै' या 'ऊँट लाई बेठीक भन्दछ । भाषाविज्ञान भने 'सबै' या 'ऊँट' लाई विकास बताउँदछ । यसैले भाषाविज्ञानलाई व्याकरणको पनि व्याकरण संज्ञिइन्छ । तद्भव शब्दहरूलाई अपनाउनुपरेको पनि यही कारणबाट हो । प्राकृत, अपभ्रंश आदि असंस्कृत भाषालाई स्वीकृति प्रदान गरेर प्राचीन महापण्डित कालिदास आदिले अफ्नो संस्कृत-ग्रन्थमा स्थान दिनु नै भाषा-विज्ञान को परम विजय हो ।

## भाषाविज्ञानको अध्ययनबाट हुने लाभ—

(१) भाषाको मूल आधारको ज्ञानको लाभ ।

(२) ऐतिहासिक संस्कृति र सभ्यतामा प्रकाश पारेर आधारको ज्ञान दिने स्रोत ।

(३) प्रागैतिहासिक संस्कृति र सभ्यतामा प्रकाश ।

(४) कुनै एक जातिको मानसिक विकासको परिचय ।

(५) सम्पूर्ण मानवताको मानसिक विकासको विचारधाराको स्रोत र सम्वर्धनको प्रत्यक्षीकरण ।

(६) प्राचीन साहित्यको अर्थ, उच्चारण र प्रयोगसम्बन्धी अनेक समस्या-हरूको समाधान गर्न भाषाविज्ञानले बाटो देखाउँछ ।

(७) भाषाहरूको एकता अथवा विश्वभरमा विचारको एकताद्वारा विश्व-बन्धुत्वको प्रचार र स्थापनामा सहायता ।

(८) भविष्यका निमित्त उपाय बताएर मानिसको भाषा, लिपि, मानसिक स्तर इत्यादिलाई पतनबाट बचाउने र सुधार्ने काम ।

(९) भाषाद्वारा नै सम्पूर्ण विज्ञानको र संसारभरको काम हुन्छ । यसैले भाषा-विज्ञान ज्यादै लाभकर र महत्त्वपूर्ण विषय छ । आफ्नो भाषाको कदर थाहा नपाउने जातिको उन्नति हुँदैन ।

(१०) भाषाप्रतिको जिज्ञासाको तृप्ति र सत्य ज्ञान प्राप्ति हुनेलाई दर्शनकारले ज्ञान अखण्ड, अनन्त र एक सत्य छ भनेर बताएका छन् । जस्तै—"सत्यं ज्ञानमखंड ब्रह्म, एकमेवाद्वितीयम् ।" यही ज्ञानको प्राप्ति हुन्छ ।

(११) भाषा र लिपिको सुधारको मार्ग भाषाविज्ञानले बताउँछ । संसारलाई एक भाषा र लिपिले जोड्ने काम जस्तै इस्पेरोन्तोको सिर्जना ।

लाभ बारे अगाडि र पछाडिका विषयमा बराबर चर्चा भइ नै रहेकाले विस्तृत रूपमा यहाँ चर्चा गर्नु नपर्ने ।

## भाषाको उत्पत्ति

विज्ञानले कुनै कुरा पनि कल्पनाको या अडकलको आधारमा स्वीकार गर्दैन । कल्पनाको आधारमा या अडकल आधार या दुविधाको आधारमा टेक्नुपरेमा त्यस्ता ज्ञानलाई अपूर्ण भनेर, मुलतवी राखेर, अन्वेषणपट्टि लाग्दछ । उक्त आधारमा अडेका ज्ञानका सिद्धान्त सधैं धरमर भै नै रहन्छन् । धरमरे आधार छोडेर विज्ञानले स्पष्ट र प्रमाणित आधार किटेर मात्र प्रगतितर्फ लम्कन्छ । त्यसैले विज्ञानको शुरूमा केही अपुग भए पनि प्रगतिमा अपुग र शङ्का रहँदैन । जस्तै जीव विज्ञानको आदि सृष्टिमा पहिले कुखुरा आयो होला कि कुखुरी आइहोली ? अथवा पहिले फुल पृथ्वीमा आयो होला कि कुखुरी आइहोली ? यो कुरा सदा अनिश्चित नै रहन्छ । त्यस्तै वनस्पति विज्ञानमा बीज र वृक्षको नातामा छ । पहिले आँपको कोया पृथ्वीमा आयो होला कि ? आँपको रूख आयो होला ? बीज या वृक्ष, कुन कसले पहिले सृष्टि गऱ्यो होला ? कुखुरा या अण्डामा, कसले पहिले कुन सिर्जना गऱ्यो होला ? यस्ता कुरामा जति तर्क गरे पनि यथार्थ तथ्य वस्तुको आधार नमिल्ने भएकोले विज्ञानले यस्ता अडकलबाजीको आधारलाई त्यागेर आफ्नो ठोस विशुद्ध तथ्य आधारको बलमा अध्ययन शुरू गरेर प्रगति गर्दै लैजान्छ । कुखुरा र कुखुरी पृथ्वीमा थिए र फुल पार्थे भन्ने निश्चित आधार ज्ञानमा र सो अवस्थादेखि मात्र जीव विज्ञानले आफ्नो अध्ययन शुरू गर्छ । त्यस्तै सिद्धान्तको आधारमा वनस्पति वैज्ञानिकले पनि आफ्नो अध्ययन र कार्य शुरू गर्दछ । अर्थात् अडकलबाजीलाई विज्ञानमा कुनै स्थान दिइएको हुँदैन । अडकलमा आधारित विज्ञान, विज्ञान हुँदैन, चर्चा मात्र हुन्छ ।

उक्त क्रमको अध्ययन भाषाविज्ञानको अध्ययनमा पनि केही वैज्ञानिकले

जारी नै राखेका छन् । भाषाको उत्पत्तिमा केवल अडकलको आधार मात्र अपनाउनुपरेकोले केही भाषा वैज्ञानिकले यसको अडकले उत्पत्तितर्फको विचारै नगर्नु वैज्ञानिक हो भन्ने विचार प्रकट गरेका छन् र यसतर्फको अध्ययन नै त्यागेका छन् । त्यति मात्र होइन, त्यस विषयमा १८६६ ईस्वीमा फ्रांसको राजधानी पेरिसमा स्थापना भएको भाषाविज्ञान समितिले भाषाको उत्पत्तिमा विचार गर्नसम्म पनि नियमद्वारा निषेध गरेको थियो । पेरिसको भाषा समितिको त्यस्तै नियम भए पनि भाषाको उत्पत्तिमा व्याख्या भएको र नयाँ सिद्धान्तहरू लेखेको पाइन्छ । बीसौं शदीमा पनि भाषाको उत्पत्तिमा विचार गर्ने विद्वानहरू पाइन्छन् । जस्तै—ब्रन्ट, बर्नाड शॉ, समरफेल्ट, रेवेज आदि । केही ज्ञान अपूरो छ भनेर त्यसै त्याग्नुभन्दा, त्यसको पाइने-सम्म ज्ञान प्राप्त गरेर, यति कुराले अपूर्ण छ भन्ने ज्ञान प्राप्त गरी त्याग्नु असल छ ।

भाषाको कसरी उत्पत्ति भयो भन्ने प्रश्न आजसम्म राम्ररी हल हुन सकेको छैन । अति प्राचीन कालदेखि यसमा विचार हुँदै आएको छ । यसका धेरै सिद्धान्तहरू पनि प्रतिपादन भएका छन् तर सब सिद्धान्तहरू अनुमानका आधारमा मात्र छन् । वैज्ञानिक आधारमा छैनन् ।

दैवी उत्पत्ति सबभन्दा पुरानो र सरल छ । धर्ममार्ग अवलम्बीहरू भाषा-लाई ईश्वरको वरदान भन्दछन् । ईश्वरले भाषा बनाइदिए र भाषाको चलन भयो भन्ने उनीहरूको मत छ । वेदको संस्कृत अपौरुषेय हो र श्री पाणिनिका १४ सूत्रहरू श्रीशिवजीको डमरूबाट निक्ले भन्ने लेखोट पाउँछौं । बौद्ध धर्मावलम्बीहरू मागधीलाई आदि भाषा मान्दछन् । उनीहरूको विचारमा मागधी स्वभावले मानिसमा सिद्ध छ । कुनै अरू भाषा मानिसलाई नसिकाएमा मागधी भाषा नै मानिस स्वभावैले बोल्दछ भन्ने उनीहरूको विश्वास छ । जैनहरू अर्द्ध मागधीलाई देवताहरू, मानिसहरू र पशु पक्षी पनि स्वभावैले बुझ्न सक्तछन् भन्दछन् । ईसाई कैथोलिक हिब्रूमा आफ्नो धर्मग्रन्थ पुरानो बाइबिल, लेखिएकोले यसैलाई संसारभरका भाषाहरूको मूल मान्दछन् । मुसलमान कुरानलाई त्यस्तै स्थान दिन्छन् । मिस्रमा पनि यस्तै विश्वास छ ।

भाषाको बीज मानिसमात्रमा ईश्वरले या प्रकृतिले नै रोपेको हो । अरू पशुपक्षीमा यो देन यही रूपमा छैन । तर यही अवस्थामा चलेको जस्तै भाषा ईश्वरले कुनै जातिका निमित्त तयार पारेर दिए र त्यही भाषाबाट अरू सब भाषाहरू उत्पन्न भए भन्नु ठीक होइन र वैज्ञानिक छैन ।

कुनै बालक पनि गर्भदेखि नै कुनै भाषा सिकेर आउँदैन । कुनै बालकलाई जन्मेदेखि नै मानिसको भाषादेखि अलग कुनै एकान्त स्थानमा राखेर बढायो भने सो बालक लाटो हुन्छ । मिस्र देशमा र अकबरको समयमा भारतमा समेत यो तरीकाको प्रयोगद्वारा बालकहरू लाटा हुँदा रहेछन् भन्ने सिद्ध भएको छ । स्कॉटल्याण्डका राजा

जेम्स चौथाले पनि यो कुरामा पारख गरेका थिए। यस्ता कुनै बालक पनि भाषा जानेका पाइएनन्। कोही बालक ढोकाको आवाज मात्र सुनेकाले ढोकाको आवाज जस्तो मात्र कराउँथे । कुनै बेकोस ( रोटी ) भन्ने शब्द मात्र मुखबाट निकाल्दथे। अर्थात छुटपुटमा जे शब्द या ध्वनि सुने त्यही मात्र जाने, अरू केही जानेनन्। त्यसैले भाषा अनुकरणबाट मात्र बालकले सिक्ने कुरा हो भन्ने निश्वय हुन्छ। ईश्वरले भाषा बनाएर दिएको भए शुरूदेखि नै भाषा पूर्ण विकसित हुनुपर्ने हो। सो कुरा पनि देखिंदैन। भाषा बिस्तारै बिस्तारै विकास हुँदै जान्छ। प्रचलनले यो विकास कार्यक्रम जारी राख्छ। विकासबाट भाषाको प्रगति हुन्छ।

**धातु सिद्धान्त**—जर्मनीका विद्वान प्रो० हेज्को मतको आधारमा श्री ष्टाइन्थेल र श्री म्याक्समूलर सारा भाषाहरूलाई ४।५ सय धातुहरूबाट निक्लेका हुन् भन्दछन्। मानिसमा ४। ५ सय धातुहरू स्वभावैले थिए र ती धातुहरूको विकासवाट यी सारा भाषाहरू निस्के भन्ने उनीहरूको भनाइ छ। ४।५ सय धातुबाट निस्केपछि मानिसमा सो धातुको शक्ति आफै नष्ट भयो रे। म्याक्समूलरले पछि यो मतमा शंका प्रगट गरेर त्यागिदिए ।

संसारका कति भाषाहरूमा धातुको नामसम्म पनि छैन। फेरि धातु भाषाको स्वाभाविक अंश होइन। धातु प्रयत्नबाट निस्केको हो। भाषा धातुबाट मात्र बन्दैन प्रत्येग उपसर्ग आदिको पनि जरूरत पर्छ।

**अनुकरणवाद**—यो मतअनुसार मानिसले पहिले पशुपक्षीका शब्दको अनुकरण गरेर आफ्ना शब्दहरू निकाल्यो र यिनै शब्दहरूको आधारमा अरू शब्दहरू निकाल्न थाल्यो र भाषाको सृष्टि भयो भन्ने छ। कोकिल, काग, ढुकुर र काफल-पाक्यो चरी शब्दहरू यही आधारमा बनेका हुन्। तर यस्ता शब्द ज्यादै थोरै छन्। मनुष्यले यस्तै शब्दबाट मात्र काम चलाएर भाषाको विकास गरेको देखिंदैन। फेरि मानिसमा स्वभावैले अरू पशुपक्षीको भन्दा बढी भित्री शक्ति भएकोले तिनोहरूको मात्र नकल गरेर भाषा खड़ा गऱ्यो होला भन्न सकिंदैन। निरूक्तमा पनि यस सिद्धान्तको उल्लेख छ। जस्तै—"काम इति शब्दानुकृतिः" "काम" शब्द अनुकरणबाटै भयो।

**अनुकरणवाद**—यस वादको अनुसार मानिसले निर्जीव पदार्थको अनुरणनको आधारमा शब्द बनाएको देखिन्छ। नेपालीको चट्याङ-चुटुङ, ,थ्याप्प-थ्याप्प, कल-कल, छल-छल, झर-झर गड्याङ-गुडुङ, टक-टक, खट-खट इत्यादि। यी शब्दहरू अनुरणनको आधारमा बनेका हुन्। तर यस्ता शब्दहरू बहुतै कम छन्। यी शब्दहरूबाट भाषाको उत्पत्ति सिद्ध गर्न कुनै सहायता पाईंदैन। अनुकरणवादमा पशुपक्षी आदिको अनुकरणको आधारमा शब्द सिर्जना भएको र यसमा निर्जीव ध्वनिको आधारमा शब्द सिर्जना भएको छ। अरू कुरामा दुवै वाद एकै छन्।

**मनोभावाभिव्यक्तिवाद**—मानिसमा घृणा, क्रोध, हर्ष, शोक, आश्चर्य इत्यादि पैदा हुनासाथ एक विशेष अवस्था पैदा हुन्छ जुन अवस्थामा मानिस स्वतः सो भाव प्रकट गर्न मुखबाट शब्दहरू निकाल्न थाल्दछ। उत्तेजनाको विकासले नै शब्दको प्रयोग गर्न लगाउँछ। श्री डार्विनको मत पनि यस मतमा केही मिल्दछ। नेपालीको वाह वाह, अहो, छि, छि, धिक्, धत्, च्-च् कठै-कठै इत्यादि शब्दहरू यस्तै हुन्।

यी शब्दहरू कुनै भाषामा पनि ३०।४० भन्दा बढी छैनन् र फेरि भाषाका प्रधान अंग पनि होइनन्। सबै भाषामा एकैनासका एकै भाव जनाउने र मिल्ने यस्ता शब्दहरू पनि पाइँदैनन्। सबै भाषामा खास नियमित आधार भए एकनासे शब्दहरू हुनुपर्ने हो।

**श्रम परिहरणवाद**—ज्यामीहरूले कडा काम गर्दा थकाइ मेट्नलाई कुनै किसिमको शब्दको उच्चारण बराबर गरिरहन्छन्। धोबीहरू 'हियो' मल्लाहहरू 'यो हे हो', वज्र पिट्नेहरू 'ए राम राम' र बोझा तान्नेहरू 'होस्ते हैंसे' इत्यादि भनिरहन्छन्। आदिमानिसलाई पनि यस्तै कठोर काम गर्नुपर्दा शब्दको प्रयोग गर्नुपर्‍यो होला र यसैबाट बिस्तार बिस्तार भाषाको विकास भयो होला भन्ने यस वादको मतलब हो। तर यो वाद पनि माथिका वादहरूमा भनेबमोजिम नै बेकारको छ। यस्ता शब्दहरू ज्यादै थोरै छन्। कार्यको बोझ हलुका गर्न मात्र यी उद्‌गार सिर्जिएका हुन्।

**स्वीकारवाद**—आरम्भमा सबै मानिसहरू एक ठाउँमा जम्मा भएर सब वस्तुहरूको नाम राखे। यिनै नामहरू स्वीकार हुँदै गए र भाषाको शुरू पनि हुँदै गयो। यो वाद पनि निरर्थक देखिन्छ। भाषा नै नभएको वेलामा मानिसहरू कसरी जम्मा भएर वस्तुहरूको नाम राखे? विचार प्रकट गर्ने शक्ति र नाम राख्न सक्ने शक्ति भएपछि जम्मा भएर नाम राख्ने आवश्यक किन पर्‍यो र? फेरि नाम राख्नुभन्दा अगाडि कुनै रूपको अर्को भाषा रहेछ भन्ने प्रश्न पनि उठ्तछ। प्लेटोको पनि करीब यस्तै मत छ।

**विकासवाद**—शुरूमा मानिसले पशुपक्षीको जस्तै निरर्थक शब्दको उच्चारण गर्दै गयो होला। धेरै समयमा बिस्तारै बिस्तारै अरू कुराको उन्नति जस्तै भाषाको उन्नति पनि भयो होला। यो वाद पनि सन्तोषजनक छैन। कुनै चीजमा क्रियाको त्यही नाम के कारणले भयो? ध्वनि र अर्थमा सम्बन्ध कसरी स्थापना भयो? इत्यादि प्रश्नहरू उठ्दछन्।

**सहयोगवाद**—श्री स्वीट आदि विद्वान्‌हरूको मतमा यी सबै उक्त विवादहरूको सहयोगबाट भाषाको जन्म भएको हो भन्ने छ। यो मतअनुसार भाषाको प्रारम्भिक अवस्थामा शब्द शक्ति ज्यादै सीमित थियो र बिस्तार- बिस्तार बढ्दै गयो भन्ने छ।

माथि दिइएका अनेक श्रोताहरूले भाषा सिर्जना गरेर प्रगति गर्दै लगे भन्ने स्वोटको मत छ ।

श्री पाणिनिभन्दा करीब एकसय वर्षअगाडिका 'व्याकरणाचार्य यास्कले भाषा जेठा पिंढीहरूले कान्छा पिंढीहरूलाई दिंदै गए भन्ने विचार प्रकट गरेका छन् । यसको मतलब, अगाडिका समाजका बुज्रुक मानिसले भाषा अलि अलि आवश्यकतानुसार रच्तै गए र पछाडिका मानिसलाई दिंदै गए भन्ने स्पष्ट हुन्छ । यही क्रमिक विकासले भाषा पनि अलि-अलि गरेर बन्दै गयो । यही लौकिकी कुरो नेपाली भाषाको दिव्य-उपदेशमा पनि पाइन्छ । "बुढ़ा मरे भाषा सरे ।" बूढा मानिस मरेर गए पनि उनीहरूको असल स्थिर कुरा ( भाषा ) मर्दैन र पछि पछि आउने अनेक पिंढीमा सरेर आइरहन्छ । यो क्रम कालान्तरसम्म चलि नै रहन्छ । यी मतहरू वैज्ञानिक आधारका नजीक छन् ।

**इंगितवाद**—इंगितवादमा श्री डार्विन, श्री रिचर्ड र श्री अलेकजेन्डर आदिले विवेचना लेखेका छन् । यी विवेचना अनेक भाषाहरूका तुलनात्मक आधारमा लेखिएका छन् । यस वादको भनाइअनुसार मानिसले पहिले डर, रिस, दुःख, सुख, भोक, तिर्खा आदिमा कुनै किसिमको ध्वनिद्वारा आफ्नो भाव जनाउँछ । जस्तो आजकल पनि बाँदरले क्रोध, भोक, भय आदिमा आफ्नो भाव इङ्गित र ध्वनिद्वारा जनाउँछ । पहिलो अवस्थापछिको दोस्रो अवस्थामा अरूको ध्वनि सुनेर अनुकरण गरेको भरमा शब्द बनेको हुनुपर्छ । तेस्रो अवस्थामा हात जीउ आदि बाहिरी अंगले इङ्गित गरेर भित्री भाव संकेत गरेको हुनुपर्छ ।

टा-टा वाद पनि यस्तै छ । शुरूको अवस्थामा मानिसले आहारको खोजीमा, जस्तै माछा मार्न जाँदा र आउँदा, अथवा कुनै खाने कुरो जम्मा गर्न जाँदा र आउँदा, मानिसले आफ्नो भाव अर्को मानिसलाई हात आदिको गतिको अनुकरण गरेर प्रकाश गर्दै गयो । पछि यसै ववसरमा केहो ध्वनि पनि पैदा हुन्थ्यो । र अझ पछि कहिलेकाहीं शब्द पनि बनेर प्रकाश हुन्थ्यो । शुरूको यही ध्वनि र शब्दबाट भाषाको बिस्तारै बिस्तारै विकास भयो । यो सिद्धान्त पनि इङ्गित सिद्धान्तसाथ मिल्दछ । असभ्य, जंगलमा बसोवास गरेका मानिस आज पनि देखिन्छन् । तिनीहरूमा यस्तो चलन छैन । बाँदर आदि पशुमा पनि हात आदिले इशारा गर्ने चलन देखिंदैन । फेरि शुरूका निरर्थक ध्वनिले कसरी भाषाको विकास भयो ? यो पनि स्पष्ट छैन ।

**सुसेलोवाद**—यस वादमा शुरूमा मानिस ज्यादै भावुक रहँदो होला र हर समय वृक्षका चिरबिरे चराहरू जस्तै सुसेलिरहँदो हो र गुनगुनाइरहँदो हो भन्ने छ । डार्विन, स्पेंसरले पनि यो वादलाई केहो मान्यता दिएका छन् । जेस्पर्सन पनि भाषा खेल-खालको समय पैदा भएको ध्वनि हो र गुनगुनाइरहने बानीबाटै समयको क्रमले

भाषामा अर्थ घुस्यो भन्छन् । यसलाई प्रेमवाद भन्छन् । गुनगुनाउने कुरा केवल अडकलको आधारमा छ । सुसेल्दा र गुनगुनाउँदा आदि मानिसलाई आनन्द त प्राप्त हुँदो हो तर गुनगुनाउँदाको ध्वनिबाट भाषा कसरी बन्यो ? यो स्पष्ट छैन । यसलाई अंग्रेजीमा सिङ्ग-सॉङ्गवाद भन्छन् (गीतसितवाद भन्छन्) ।

**बच्चूवाद**—बाल्य अवस्थामा एक बालकले जसरी भाषा सिक्तछ, त्यस्तै गरी मानव जातिले पनि सिक्यो । केही विद्वानले यसैको आधारमा भाषाको प्रारम्भ मानेर व्याख्या लेखेका छन् । बालकले बनेको भाषा सिक्तछ । तर आदि मानिसले पहिले शुरूमा नभएको भाषा कसरी सिर्जना गर्‍यो ? यो प्रश्न यसबाट सुल्झँदैन । भइ नै रहेको भाषा सिक्नु र हुँदै नभएको भाषा सृष्टि गर्नु बिलकुलै फरक कुरा हुन् ।

## भाषाको प्रकृति

भाषा पैतृक सम्पत्ति होइन । केही मानिसहरू यसलाई पैतृक सम्पत्ति हो भन्ने संझन्छन् । बाबु बाजेको भाषा छोराले स्वभावैले सिक्तछ र कुनै प्रयत्नको जरूरत छैन भन्दछन् । तर यो कुरा होइन । कुनै नेपाली एक दुई वर्षको बालकलाई नेपाली नभएको बेलायतको कुनै ठाउँमा राखेर हुर्काइयो भने त्यसले त्यही ठाउँको अंग्रेजी भाषा नै बोल्दछ; नेपाली बोल्न जान्दैन । यदि भाषा पैतृक सम्पत्ति भएको भए त्यो बालकले आफ्नै नेपाली भाषा बोल्न थाल्दथ्यो । एक दुई वर्षको अवस्थादेखि जंगलमा बसेर बढ़ेको मानिस जंगली जनावरको जस्तो शब्द मात्र निकाल्दछ । नेपालमा फेला परेको बनवीर भन्ने जंगलमा बढेको ठिटो रूख चढ्न खोज्थ्यो र जनावरको जस्तो शब्द मात्र निकाल्दथ्यो । १९९० सालको महाभूकम्पको हतपतमा जंगलको बाटो फर्कन लागेका केही सिपाहीले त्यो केटोलाई रूखमा फेला पारी श्री प्र० मं० जुद्धशमशेर राणालाई बुझाएका थिए । मास्टर हरि बाबूले पछि यसको रक्षा गरेर राखेका थिए । यसका गोडा रूख चढ्ने बानीले सनासो जस्ता भएका थिए । यो केटो 'कुहू, कुहू' गरेर कराउँथ्यो । फल र पात मात्र खान्थ्यो । पछि सिकाउँदा सिकाउँदा केही थोरै शब्द मात्र एकोहोरो फाट्ट फुट्ट बोल्थ्यो । समाजको या चारैतर्फको वातावरणबाट बालकले भाषा सिक्तछ । यसैले भाषालाई अर्जित सम्पत्ति भन्नुपर्छ ।

भाषा सामाजिक वस्तु हो । भाषाको शुरू र विकास समाजमा हुन्छ । आर्जन र प्रयोग पनि समाजैमा हुन्छ । समाज नभए भाषाको दरकार थिएन । भाषाले शुरू-देखि अन्तसम्म समाजसँग गाढा सम्पर्क राखेको हुन्छ । एकलो मानिस बोल्यो भने उही मानिसलाई अनौठो लाग्छ ।

अनुकरण साधन हो । हामी अनुकरणद्वारा भाषा सिक्तछौं । केटाकेटी 'माम' ( भात ), 'बुबू' ( दूध ), 'आमा', 'बा' इत्यादि भन्न अरूले भनेको सुनेर मात्र सिक्तछ ।

भाषा परिवर्तनशील छ। लिखित भाषाको रूप मौखिक भाषाको रूपको आधारमा बन्दछ। मौखिक भाषा अनुकरणको आधारमा हुन्छ। भाषा अनुकरणको आधारमा भए पनि दुई मानिसको बोली बिलकुलै एकनास हुँदैन। अनुकरणको कला मानिसपीछे फरक फरक हुन्छ। जस्तो मानिसको अनुहार एकनास भए पनि अलग अलग हुन्छ उस्तै अनुकरण कला र शब्द पनि अलग अलग हुन्छन्। शारीरिक र मानसिक परिस्थिति सधैं एकनास नरहने हुनाले प्रत्येक अनुकरणमा विभिन्नता आउनु स्वाभाविक हो। यही विभिन्नताले भाषामा क्रमिक परिवर्तन ल्याउँछ।

भाषाको अन्तिम स्वरूप छैन। पानीको गति जस्तै भाषाको गति पनि सदाकाल चल रहिरहन्छ। यो भाषाको पूर्णरूप हो भन्नु गलत हो। मृत भाषाको मात्र अन्तिम र पूर्णरूप हुन्छ। भाषाको जीवन जनाउने दुई कुरा छन्। (१) परिवर्तन, (२) अस्थैर्य।

भाषा सदा सरलतातर्फ झुक्छ। भाषाको इतिहासमा यो कुरा स्पष्ट देखिन्छ कि भाषा सदा कठोरबाट सरल हुँदै जान्छ। सोख, सयल, सरलता इत्यादि खोज्नु मानिसको स्वभावै हो। यही स्वभावले मानिसलाई भाषामा पनि सरलता खोजी प्रयोग गर्न लगाउँछ। जस्तै—'लेफ्टेन्यान्ट' बाट 'लपटन', 'क्याप्टेन' बाट कप्तान, 'एसिस्टेन्ट' बाट असिटन्ट, 'कम्याण्डर-इन-चीफ' बाट 'कमाड्-चीफ', 'जनरल साहेब' बाट जरसाहेब, सीतारामबाट सीयाराम, नारायणबाट नारान, पुरोहितबाट पुरेत, 'विवाह' बाट बिहे, 'विधवा' बाट विध्वा, 'श्राद्ध' बाट सराद्ध, 'चन्द्रेश्वर' बाट चंडेश्वर, 'मेकेड्जी' बाट 'मखंजी' इत्यादि। अलंकारको स्वाभाविक प्रचार पनि यसैलाई झल्काउँछ। त्यो मानिस 'गोरू' हो भनेर हामी छोटकरीमा र सरलतामा कति कुरा भन्दछौं, यो व्याख्या गर्ने आवश्यक देखिदैन। 'गोरू' भनेर नै मनको सबै भाव व्यक्त गर्छौं। गोरूको प्रकृतिको संकेतले सबै कुरा बुझाउँछ। यो मानिस गाई प्राणी हो भन्दा ठीक अर्कै सरल र शुद्ध भन्ने अनेक अर्थ झल्कन्छ।

कृत्रिम भाषा मात्र कठिन हुँदै जान्छ। स्वाभाविक भाषा सधैं सरलतातर्फ झुक्तछ। साहित्यिक भाषा कृत्रिम भाषा हो। भाषा जनभाषाबाट जति पर गयो उति कृत्रिम हुँदै जान्छ। जीवित नेपाली भाषा कुनै अवस्थामा पनि गाह्रो हुँदै जाँदैन। अंग्रेजीबाज र पंडितबाजेले 'लेफ्टेन्यान्ट' वा 'विवाह' भनुन् तर नेपाली भाषाको स्वाभाविक गतिमा यी शब्दहरू 'लप्टन' र 'बिहे' अवश्य हुन्छन्। बाजे र बाजहरूको बुझक्कडपनले यो गतिलाई रोक्न सक्तैन। दरबारी भाषा ज्यादै कृत्रिम भएकोले बनावटी हो। दर्बारिया कृत्रिम भाषा ज्यूनार भयो, आराम भै बक्स्यो, पाउपोश, शिर-पोश, आदि ज्यादै कृत्रिम छन्। साधारण समाजमा यो भाषा चल्न सक्तैन। केही धनको गर्वले नक्कली श्रृंगार गर्ने मानिसले यसको चलनको प्रयत्न परिवारभित्र गरे पनि धेरै समय चलेको देखिदैन र बोलाइमा हास्यप्रद सुनिन्छ।

प्रचलित भाषामा सूक्ष्म भाव प्रकट गर्ने शब्दहरू थपिंदै जान्छन् । पहिलेको अवस्थामा स्थूल कुरा प्रकट गर्ने शब्द धेरै हुन्छन् । भाषा जति विकसित हुँदै जान्छ उति नै गहिरो भाव प्रकट गर्ने शक्ति आर्जन गर्दै जान्छ । यही क्रमले भाषा दिन प्रतिदिन विकसित भएर पाको अवस्थामा पुग्छ । यो पाको अवस्थाबाट अझ परिपक्व अवस्था प्राप्त गर्दै जान्छ । भाषा पूर्ण जीवित रहेसम्म यो क्रम चलि नै रहन्छ । तर कुनै दुई भाषाको क्रम एउटै हुँदैन । प्रत्येक भाषाको आफ्नो रचना ढंग अलग अलग हुन्छ । विकासको ढंगमा केही या धेरै विभिन्नता अवश्य रहेको हुन्छ । शब्द, ध्वनि वाक्य र अर्थमा समेत असर परेको हुन्छ ।

भाषा विकसित हुँदै गएपछि जोडिने प्रवृत्ति छोडेर अलग अलग हुने प्रवृत्ति लिंदै जान्छ भन्ने आधुनिक मत छ । संयुक्त अवस्थालाई त्यागेर वियुक्त अवस्थातिर ढल्कन्छ । जस्तो नेपालीमा चलेको जान्छ, खान्छ आदि पछि गएर जान छ, खान छ, हुन्छन् । केही यस्ता रूप देखा परिसकेका छन् । जस्तै पिउँ छ, बताउँ छ, सिउँ छ । पिउन्छ, सिउन्छ बताउन्छ, प्रचलनबाट हटेका बुझिन्छन् । कुनैले बोले पनि कानमा ठक्कर लागेको जस्तो हुन्छ । संस्कृत भाषाले संयुक्त अवस्था त्यागेको छैन । जस्तै— सः पचति जनभाषाबाट टाढा गएकोले संस्कृतले वियुक्त अवस्था प्राप्त गर्ने मौका पाएन । यसको कठिन व्याकरणका नियमले यो क्रममा बाधा सिर्जना गर्‍यो । तर नेपाली जनभाषामा "पचाउँ छ" रूपमा प्रयोग भएको छ ।

## ऐतिहासिक र भौगोलिक बन्देज—

हरेक भाषाको जीवनीमा उदय, मध्याह्न र अस्त हुन्छ । जस्तो मानिसको या जातिको जीवनीमा हुन्छ । जस्तै संस्कृत भाषाको अवस्था ( ऋगवेदको पहिलो अवस्था उषा ऋचा ) ( कविता ) लेखिएको अवस्था ) । त्यसपछिका अरू दुइ अवस्था छन् । तीन अवस्था सामवेदभित्र पनि छन् । तीन अवस्थाहरू यजुर्वेदभित्र पनि छन् । ब्राह्मण ग्रन्थहरू ( वेदको टीका ) लेखिएका पद्यमय अति सरल गद्य पनि करीब ई० पू० सातौं शताब्दीसम्म मात्र सीमित छन् । त्यसपछि अर्के नयाँ शैलीको शुरू हुन्छ ।

भास र कालिदासको सरल सुमधुर, सांकेतिक, सुन्दर र शास्वत मीठा अंगूर सरहका शैलीको समय केवल ३०० शदीदेखि ई० पू० २०० शदीसम्म मात्र पाइन्छ । त्यस्तै गरेर कठोर भाषामा भाव भित्रभित्र लुकेका कवि भारवी आदिको जटावाल नरिवल जस्ता शैली ७०० शदीदेखि पछि मात्र देखिन्छन् । पालीको प्रचार र विकासको समय ई० पू० करीब ४०० देखि १०० सम्म देखिन्छ । त्यसपछि प्राकृतहरूको ( लौकिक भाषाहरूको ) काल करीब ८०० ईस्वीसम्म मान्न सकिन्छ । करीब आठौं ईस्वीदेखि अपभ्रंशको काल शुरू भएर करीब १०-११ रौं शताब्दीसम्म चलेको अनुमान हुन्छ । करीब त्यसको साथ साथै र अलि पछि आधुनिक भाषाहरूको पूर्वरूप

शुरू भएको छ । नेपाली भाषाको ऐतिहासिक कालिकाको अनेक रूप पनि यस्तै सीमा-बद्ध देखिन्छ । हरेक भाषाको आफ्नो सच्चा रूप आफैं जन्मेको स्थलमा हुन्छ । यही थलोमा विकसित भएको रूप नै खास रूप मानिन्छ । अथवा उक्त भाषा जन्मेका थलोका त्यही भाषा बोल्ने मानिस अन्यत्र बसोवास गरी भाषाको विकसित रूपलाई पनि प्रतिष्ठित र पुष्ट गर्न सके पनि त्यही भाषाको विकसित रूप मानिन्छ । उक्त मानिसको समूह या उक्त स्थलो नाघी पर गएको भाषाको क्षेत्रमा धेरै विकार आउने संभव हुन्छ । यस्तो विकार पैदा भएको पनि धेरै देखिन्छ । जस्तै अफ्रिकाको केही भाग का पश्चिमी भाषाहरू । १८१६ सन्को सुगौली सन्धिभन्दा अगिको नेपाली भाषाको क्षेत्र पूर्वतर्फ तिष्ठा नदीसम्म र पश्चिमतर्फ अर्की र गढवालसम्म थियो । ऐतिहासिक सीमा, प्रत्येक अर्ध शताब्दीको नेपाली भाषामा फरक पाइन्छ ।

## भाषा विज्ञान र अरू विषयको सम्बन्ध—

समाजमा रहेको मानिसको सबैजसो कार्य भाषाद्वारा नै हुने हुनाले भाषा विज्ञानको सम्बन्ध सबै विषयसाथ नै हुन्छ । भाषा नै मानिसको प्रमुख मुख हो । भाषा जति धेरै विस्तृत भयो समाजका मानिसहरूको विचार विनिमय गर्ने साधनरूपी भाषा मुख पनि त्यति नै विस्तृत हुन्छ ।

भाषा विज्ञानको राम्रो ज्ञानको आधारमा लेखिएको व्याकरण नै ज्यादै उपयोगी र सरल हुन्छ । श्री पाणिनिको व्याकरण आजसम्म कायमै रहनाको कारण पनि वैज्ञानिक आधारमा लेखिएकोले हो । पाणिनिले लेखेको समयमा उनको "अष्टाध्यायी" यति धेरै कठिन थिएन, बिस्तारै बिस्तारै दीर्घ समयको परिवर्तनले मात्र यो ज्यादै कठिन भएको हो । करीब २६०० वर्षसम्म कुनै व्याकरण पनि एकनास रहन सक्तैन । वर्तमान युगमा एक दुई दशकमै व्याकरणमा हेरफेर गर्ने पश्चिमी विकसित राष्ट्रको चलनले नै यो कुरा स्पष्ट गर्छ । व्याकरण र भाषा विज्ञानमा परस्परको प्राकृतिक संबन्ध छ । भाषा विज्ञानको आधारमा व्याकरण बनेको हुन्छ र व्याकरणले भाषामा समानता र एकता ल्याएर विचार र शिक्षा प्रचारमा सबका निम्ति एक मार्ग किटानी गर्छ । एक मार्गको प्रचलनले कार्यमा एकरूपता र सरलता कायम गर्छ । ज्ञानको संरक्षण पनि दीर्घ कालसम्म गर्छ । व्याकरण पुरातनवादी छ तर भाषाविज्ञान प्रगतिवादी छ । व्याकरण भाषामा प्रयोग गर्ने शुद्ध र अशुद्ध रूपसाथ मात्र सम्बन्ध निर्धारण गर्छ । यसभन्दा बढी वैज्ञानिक आधारको खोजी गर्नु र पत्ता लगाउनु भाषाविज्ञानको कार्य हो । यो आधार प्राप्त नभएमा भाषाविज्ञानतर्फको ज्ञान अपूर्ण मानिन्छ । प्राचीन भाषाविज्ञान जान्नलाई प्राचीन साहित्य र भाषाविज्ञानको सम्बन्ध ज्यादै घनिष्ठ हुन्छ ।

भाषाविज्ञान विशेष गरेर प्राचीन साहित्यबाट आफ्नो पठन पाठनको सामग्री जुटाउँछ । फेरि साहित्यको अर्थ, उच्चारण, प्रयोग आदि प्राचीन शंका समाधान गर्न

पनि भाषाविज्ञानले आफ्नो तर्फबाट साहित्यलाई मद्दत गर्छ। भाषाविज्ञान र साहित्य परस्परमा पूरक छन्। हिन्दूको अति प्राचीन वैदिक संस्कृतको भाषाविज्ञानतर्फको ज्ञान प्राप्त गर्ने साधन केवल बचे खुचेका वेदका पानाहरूमा मात्र छन्। त्यस्तै पारसीको प्राचीन साहित्य केही आवेस्ता ग्रन्थको ज्ञानबाट मात्र पारसीहरूको प्राचीन भाषा-विज्ञानको ज्ञान जान्न सकिन्छ। प्राचीन पश्चिमी भाषाविज्ञानको ज्ञान पनि प्राचीन ग्रीक साहित्यबाट मात्र आर्जन गर्न सकिन्छ। जीवित भाषाको ज्ञान मात्र बोलचाल चलनमा कायम रहेको भाषा बोली आदिबाट प्राप्त गर्न सकिन्छ। जीवित बाहेक अरू सबै भाषाको ज्ञान साहित्यबाट नै जान्नुपर्छ।

**भाषाविज्ञान र मनोविज्ञान** :—भाषाविज्ञान र मनोविज्ञानको घनिष्ठ सम्बन्ध छ। भाषाको काम विचार प्रकट गर्नु नै हो। विचारको सम्बन्ध सोझै मस्तिष्क र मनोविज्ञानसंग हुन्छ। विचारसम्बन्धी आन्तरिक कुरा हल गर्न भाषाविज्ञानले मनोविज्ञानको सहायता लिनै पर्छ, खास गरेर अर्थ विचारमा र परिवर्तनमा।

प्राचीन मनोविज्ञान जान्न भाषाविज्ञानको सामग्रीले ज्यादै मद्दत गर्छ। प्राचीन मनोविज्ञान प्राचीन भाषाबाटै मात्र पत्ता लगाउनुपर्ने भएकोले भाषाविज्ञानको ज्ञान जरूरत परेको हो। ध्वनि परिवर्तनको कारण पनि यसैबाट पत्ता लाग्छ। मनोविज्ञानले पनि भाषाविज्ञानको सहायता लिन्छ। जस्तै बौलाहाले बेहोशमा बकेको वचनबाटै उप-चार गर्नेले उसको मनोविज्ञानको ज्ञान प्राप्त गर्छ र उपचारार्थ प्रयोग गर्छ।

**शरीरविज्ञान** :—शब्द शरीरबाटै निक्लने हुनाले भाषाको र शरीरको घनिष्ठ सम्बन्ध छ। शरीरको बनावटअनुसार शब्दको विभिन्नता हुन जान्छ। ध्वनिको अध्य-यन गर्दा ध्वनि निकाल्ने रुद्रघंटी र अरू अवयवहरूको अध्ययन गर्नुपर्छ। भाषा कसरी सुनिन्छ या ध्वनिको ग्रहण कसरी हुन्छ इत्यादि जान्नका निमित्त कान र अरू अवयवका बनावटको अध्ययन गर्नुपर्छ। संस्कृतमा नाभिदेखि ध्वनिको लहर बने बाहिरी आकाशसम्म यसको संबन्ध बन्छ भन्ने मत छ।

**भूगोल** :—भूगोलको र भाषाविज्ञानको नाता परस्परको छ। जलवायुको र प्रकृतिको असर ध्वनि र भाषामा पर्दछ। यही असरको अध्ययनका निमित्त भाषाविज्ञानले भूगोलको शरण लिनुपर्छ। "सैन्धव" को माने घोडा र नून कसरी भयो भन्ने विचारमा भूगोलको ज्ञानको आवश्यकता छ। "जुम्ली" "डोटेल" र "पारकोटे" "बाजुरेल" "थलारी" "गोर्खाली" "लिम्बू" इत्यादि शब्दको अध्ययन गर्दा पनि भूगोलको ज्ञानको आवश्यकता पर्छ। फेरि प्रागैतिहासिक कालको भूगोलको खोजीमा भाषाविज्ञानले पनि भूगोलको अध्ययनलाई मद्दत गर्दछ र भूगोल अध्ययनले पनि भाषाविज्ञानलाई सहायता गर्छ। कुनै एकै प्रदेशमा धेरै भाषा हुने कारणहरू पनि भौगोलिक नै हुन्छन्। उच्च पहाडी प्रदेशमा धेरै बोलीहरू आवतजावतको कठिनाइले सिर्जना हुन्छन्। प्राचीन सम-यमा ठूला नदीको वारपारमा पनि विभिन्न भाषा भएको पाइन्छ। डाँफे चरा, खुकुरी,

कस्तूरी मृग आदिको राम्रो अध्ययन गर्दा पनि नेपालको भौगोलिक स्थितिको अध्ययन गर्नुपर्छ। अग्राखको काठको जात छुट्ट्याउँदा पनि नेपालको पहाडी प्रदेश, भित्री मधेश र तराईतर्फको पूर्ण ज्ञान प्राप्त गर्नुपर्छ। उक्त तीन जातका अग्राख फरक फरक हुन्छन्। यस्तै मानिसको आकारमा पनि पाइन्छ र आँपको स्वादमा पनि छ, विभिन्न स्थलका चामलहरूमा पनि।

**इतिहास** :— देवानां प्रियः शब्द अशोकले आफ्नो शिलालेखमा प्रयोग गरेका छन्। अशोकले सबै प्रजावर्गलाई सुख शान्ति दिई अनेक उपकारी कार्यसमेत गरेकाले अशोकको समय र केही पछिसम्म यो शब्दको शुरूको उचित अर्थ कायम रहेर चलि नै रह्यो। तर पछि अशोकपछिका शासकहरू भ्रष्ट, शण्ठ, शण्ड लोभी र अयोग्य भएकाले "देवानां प्रियः" को अर्थ घृणाले मूर्ख जनाउने बनेको पछिका संस्कृत ग्रन्थहरूमा पाइन्छ। पहिले "असुर" शब्दको अर्थ देववाची थियो। पछि शण्ठहरूले पनि शक्ति हात लगाई उपद्रव गर्न लागेपछि यसको अर्थ "राक्षस" जनाउने भयो। वैदिक कालमा छोराहरूले बाहिरको काम गर्ने र छोरीहरूले घरगिर्दाभित्रको काम गर्ने प्रायः चलन थियो। छोराहरूले बाहिरबाट गाई चराएर घरगिर्दाभित्र ल्याएपछि छोरोहरूले दूध दुहुने गरेकोले, छोरीलाई जनाउने शब्द "दुहिता" भएको हो। वर शब्दको माने अति असल केटो भन्ने हो। देवरको अर्थ असल दोस्रो केटो भन्ने मात्र हो। अरू कुरीतिबाट विकास भएको भन्ने होइन। यस्ता प्राचीन शब्दहरूको स्पष्ट ज्ञान प्राप्त गर्न भाषा विज्ञानले प्राचीन इतिहासको सहायता लिनुपर्छ। शब्दको खास अर्थ त्यागेर समाज नीच मार्गमा लागेको पनि छ।

नेपाली भाषाको मध्यकालीन समयका शब्दहरू जस्तै थर्पू (पाल हालेको छाउनी) खेत पऱ्या (युद्धमा मारिए) भन्ने यस्ता अनेक शब्दहरूको अर्थ थान्न श्री ५ बड़ा महाराजकन समयको इतिहासको ज्ञान आवश्यक छ। त्यस्तै राणा शासनकालमा रोलवाला र बेरोलवाला, भत्तावाला, भित्रिनी, बाहिरिनी, हजुरिया, गजुरिया आदि शब्दहरूको स्पष्ट अर्थ जान्न राणाकालोन बृहत् भित्री इतिहासको ज्ञान ज्यादै आवश्यक छ।

नेपाली भाषामा फारसी र अरबी शब्दहरू जस्तै-अदालत, देवानी, फौजदारी, काजी, सुब्बा आदि कसरी घुसे भन्ने पूर्णरूपले ज्ञान प्राप्त गर्न नेपाल र मुगलानको (मुगलहरूको अधीनको भारत) सम्बन्धको इतिहासको ज्ञान आवश्यक छ। त्यस्तै अंग्रेजी शब्दहरू जस्तै कोट, टेबिल, बिस्कुट, रेडियो, मीटर आदि शब्दहरू कसरी घुसे भन्ने ज्ञान प्राप्त गर्न ब्रिटिशको अधीनको भारतको र बेलायतको र नेपालको संबन्धको इतिहास राम्ररी अध्ययन गर्नुपर्छ। नेपाली शब्दहरू पनि त्यस्तै गरी अंग्रेजी शब्द कोषमा घुसेका छन्। जस्तै गोर्खा, हिमाल, मुक्ति, भक्ति, लोटा, खुकुरी; आत्मन् आदि। यही क्रमका पोर्चुगीज शब्द जस्तै गमला, पाउरोटी, अलकत्रा, बाल्टीन,

आलमारी आदिमा पनि जारी छ । यी सब जान्न राजनैतिक इतिहास र भाषाविज्ञानको दृढ़ सम्बन्धको ज्ञान अति आवश्यक छ । यी कुरा उक्त सफा उदाहरणहरूले स्पष्ट देखाउँछन् । साधु, चकई, राहु मुखभेदन, मिसाखत, खाल आदि नेपाली शब्दहरूको अर्थ राम्ररी जान्न नेपालको पुराना मुलुकी ऐनको इतिहासको यकिन ज्ञान प्राप्त गर्नुपर्छ । साधुको माने असल लोग्ने हो । चकईको माने साधुले त्यागेकी तर विधवाको चलन नभएका वर्गकी नारी भन्ने हो ।

राहु मुखभेदन भनेको सुत्केरो परेपछि सूतक बाँधेर राख्ने पोको हो । मिसाखत को अर्थ स्त्री अपराध हो । खालको अर्थ अड्डा हो । जस्तै चारखाल (डिल्ली बजार का. जि. को ) अड्डा आजसम्म प्रचलितै छ ।

धार्मिक संबन्धले पनि भाषामा प्रभाव पार्छ । बुद्ध धर्मको प्रभावबाट संस्कृत नेपाली ग्रन्थहरूमा अनेक शब्दहरू घुसेका छन् । जस्तै नेपालीमा चिबहाल, भिखु, चैत्य ( श्री पशुपतिनाथको ) बौद्धावतार आदि । त्यस्तै अरू धर्महरूका प्रभाव पनि छन् । जस्तै मुसलमानी धर्मबाट तकिया ( ताजिया ) मौलवी, हलाहली आदि । क्रिश्चियन धर्मबाट घुसेका शब्दहरू जस्तै पोप, गिरजाघर, पादरी, फादर, सिस्टर आदि । यसैबाट धार्मिक इतिहास र भाषाविज्ञानको राम्रो सम्बन्ध छ भन्ने देखिन्छ ।

सती शब्दको अर्थ के हो ? प्राचीन कालमा सती दाह गर्ने चलनको के मतलब थियो ? कसरी भयो ? यसको खास भित्री बाहिरी अर्थ के हो ? कमारा कमारीको अर्थ के हो ? कस्तो प्रचलनले अर्थ बन्यो ? कमारा कमारी बेच बिखनको के मतलब थियो ? धर्मपुत्रको अर्थ के हो ? र कुन मतलब भयो ? दोलाजियाको अर्थ के हो र किन सिर्जना भयो ? औरस पुत्र ठ्या र मठ्या छोराको अर्थ के हो ? इत्यादि शब्द-हरूको राम्ररी ज्ञान प्राप्त गर्न सामाजिक इतिहासले भाषाविज्ञानलाई पूर्ण सहायता दिन्छ । प्रागैतिहासिक कालको इतिहास लेखनमा भाषा विज्ञानले पनि मद्दत गर्छ । इतिहास लेख्न अरू केही सामग्री नमिलेमा भाषाविज्ञानबाट प्राप्त गरेको ज्ञानको आधारमा लेख्नुपर्छ ।

**पुरातत्व:**—भाषाविज्ञानले पुरातत्वबाट धेरै सहायता लिन्छ र उत्तिकै मात्राका पुरातत्व विभागलाई पनि सहायता दिन्छ । अनेक प्राचीन वस्तुहरूको अध्य-यनबाट भाषामा लुप्त भएका शब्दहरू पुनः प्राप्त हुन्छन् ।

**भौतिक शास्त्र:**—प्रयोगात्मक ध्वनि विज्ञानमा ध्वनि मुखबाट निक्लेपछि कानसम्म लहर बन्दै कसरी पुग्दछ भन्ने कुराको अध्ययन हुन्छ । यो अध्ययनमा भौतिक शास्त्रले भाषाविज्ञानलाई पूरा मद्दत गर्दछ । भाषा-भाषा, ध्वनि र अरू ध्वनिमा के फरक छ भन्ने कुरा भौतिक शास्त्रमा अध्ययन हुन्छ । ध्वनिलहर कस्तो हुन्छ भन्ने पनि यसैमा अध्ययन हुन्छ । स्वर व्यञ्जनको तात्विक रूपको अध्ययन पनि गरिन्छ ।

**तर्कशास्त्र :**—अर्थ विचारमा तर्कशास्त्रले भाषाविज्ञानलाई मद्दत दिन्छ। श्री यास्कले पनि तर्कको सहायता लिएका छन् । तर्क भाषाद्वारा मात्र हुन्छ ।

**ध्वनिविज्ञान:**—शब्द ध्वनिको संयोगबाट बन्दछ । त्यसैले शब्दको अध्ययन गरेपछि ध्वनिको अध्ययन गर्नु आवश्यक छ। ध्वनि-विचारभित्रै ध्वनि-विज्ञान ( फोनेटिक ) पर्छ । ध्वनि अध्ययन गर्दा ध्वनि निक्लने अवयवहरूको ( नाक-विवर; मुख-विवर, स्वर तंत्री ) इत्यादि ध्वनि पैदा हुने क्रियाको, ध्वनिको लहरको र सुनिने कारणको समेत अध्ययन गर्नुपर्छ । ध्वनि-विचारमा पनि ध्वनि-परिवर्तन र ध्वनि विकासको पनि अध्ययन हुन्छ । ध्वनि प्रक्रियाको पनि यसैमा अध्ययन हुन्छ ।

ध्वनि-विचारका पनि तीन रूप छन्:—

(१) **तुलनात्मक:**—एक वंशका भाषाहरूका ध्वनिको अध्ययन गरेर त्यसको आधार नियम निकाल्नु । अग्रिम नियमको सम्बन्ध यसै सँग छ ।

(२) **ऐतिहासिक:**—एक भाषाको ध्वनिको अध्ययन गरेर ध्वनि कसरी र कहिले परिवर्तन भयो भन्ने कुरा पत्ता लगाउनु ।

यी दुवै दृष्टिबाट अध्ययन गरेपछि मात्र ध्वनिसंबन्धी साधारण नियमहरू बन्दछन् ।

समकालिक ध्वनिको अलग अध्ययन पनि गरिन्छ । प्रसिद्ध ध्वनि नियमहरू-अन्तर्गत पढ़ाइ हुन्छ । जर्मनीका भाषा वैज्ञानिक श्री ज्याकब ग्रिमको "ग्रिम-नियम' "ग्रासम्यान नियम" बर्नर नियम "र तालव्य नियम' आदिको यसअन्तर्गत अध्ययन हुन्छ । यी नियमहरू बारेका विभिन्न मत पनि पाइन्छन्,—जस्तै ग्रिम नियमको ध्वनि परिवर्तनको सारांश यस प्रकार छः—

| मूल भाषा ( भारोपीय ) मा । | आदि जर्मनीमा । | उच्च जर्मनीमा |
|---|---|---|
| ध्, व्, भ् | ग्, द्, व, | क्, त्, प्, |
| ग्, द्, ब्, | क्, त्, प, | ख् (ह) थ्, फ, |
| क, त्, प | ख्, (ह) थ्, फ् | ग्, द्, ब |

ग्यासम्यान र बर्नर नियमहरूमा ग्रिम नियममा कालक्रमको प्रयोगबाट हुन गएका परिवर्तन मात्र छन् । नेपालीहरूको ध्वनि विषयमा प्राचीन कालदेखि नै गहिरो अध्ययन देखिन्छ र यसका धेरै अंश निर्विवाद पनि छन् ।

नाभिमनि तर मूल आधारमाथि कुण्डली चक्र छ । त्यस कुण्डली चक्रमाथि परावाक ( वाक्को बीज ) सुप्त अवस्थामा रहेको हुन्छ। त्यही बीज नाभिनिर पुगेपछि समेत सम्म हुन्छ र त्यसलाई सचेत अवस्थामा "पश्यन्ति वाक्" भन्दछन् । हृदयनिर पुगेपछि त्यही "पश्यन्ति वाक्" क्रियाशील हुन्छ र यसलाई क्रियाशील अवस्थामा

"मध्यमा वाक्" भन्छन् । "यही मध्यमा वाक्" मानिसको मुखबाट निस्केपछि "बैखरी वाक्" ( ध्वनि ) हुन्छ र ध्वनि रूपमा प्रकाश हुन्छ ।

परावाक्‌लाई केही विद्वान बिन्दु भन्दछन् र केही शब्द ब्रह्म पनि भन्छन् । सो अवस्थामा वाक् कुनै रूपमा पनि क्रियाशील हुँदैन । बिस्तार बिस्तारै अरू अवस्था पार गरेर, क्रियाशील रूप धारण गरेर मुख बाहिर निस्कन्छ र प्रसार हुन्छ ।

श्री भर्तृहरि आदि विद्वानहरूले ध्वनिलाई भित्री र बाहिरी सास फेर्ने क्रमको भिन्न रूप मात्र हो भन्ने मत प्रकट गरेका छन् । छान्दोग्य उपनिषदमा यस्तै विचार जनाइएको छ । महाभारतको ब्रह्म गीतामा पनि यही मत छ—"प्राणापानान्तरे देवी वाग् वै नित्यं हि तिष्ठति" । वाक्य प्रदीप'मा भर्तृहरिले यही मत समर्थन गरेका छन् ।

लब्धक्रियःप्रयत्नेन वक्तुरिच्छानुवर्तिना ।
स्थानेष्वभिहता वायुःशब्दत्व प्रतिपद्यते ॥

पाणिनीय शिक्षामा पनि करीब यही राय पाइन्छ–

मनः कायाग्निमाहन्ति, स प्रेरयति मारुतम् ।

**मानव विज्ञान**—समाजमा अन्धविश्वास आदि कसरी पस्यो ? भन्ने विषय मानव विज्ञानमा अध्ययन गरिन्छ । यही विषयले भाषामा पनि प्रभाव पार्दछ । छोरा छोरी मरी मरी गएमा कान छेडेर मुन्द्रो लगाउने चलन केही परिवारमा गरेको हुन्छ । यस्ता छोराको नाम मुन्द्रे पनि हुन्छ । कुनैले नाक छेडेर नत्थ लगाइदिने गरेका पनि हुन्छन् । यस्तालाई नत्थे भनेर नाम राखेको पनि हुन्छ । विवाहिता स्त्रीले आफ्नो पतिको नाम मुखले उच्चारण नगर्ने चलन हाम्रो समाजमा चलेकै छ । यसको कारण पतिको आदरका निम्ति हो । दिसा जानुको सोझो अर्थ अर्कै हुन्छ तर यसलाई हाल नेपाली समाजमा घुमाउरो अर्थ बनाउने गरेर मात्र प्रचलन गरिन्छ । यस्तै गरी अनेक शब्दको अर्थ परिवर्तन हुँदा मानव विज्ञानले असर पारेको हुन्छ । इन्द्रको अर्थ वेदमा साधारण शक्तिमान पुरुष थियो । तर पछि-पछि यसको अर्थ सर्वशक्तिमान स्वर्गको राजा भन्ने भयो । यो विकासको अध्ययन गर्दा मानव विज्ञानले भाषाविज्ञानमा कसरी प्रभाव पार्दो रहेछ भन्ने स्पष्ट हुन्छ ।

दर्शनले, शिक्षणले, विज्ञानले, गणितले, काव्य शास्त्रमा खास गरेर अलङ्कारको प्रयोग आदिले र अरू ज्ञान विज्ञानले पनि भाषाविज्ञानमा प्रभाव पार्छ ।

सबै ज्ञान विज्ञानका विषयले भाषाको माध्यमद्वारा अध्ययन गर्नुपर्छ । तर भाषाविज्ञानले भाषाको नै वैज्ञानिक अध्ययन गर्छ । त्यसैले यसलाई भाषाको मूल आधार मान्नुपर्छ ।

यी बाहेक भाषाविज्ञानले भाषाको प्रकृति, विकास र एक भाषाबाट अर्को भाषा कसरी बन्दछ या विकास हुन्छ भन्ने इत्यादि विषयहरूको पनि अध्ययन गर्दछ ।

फेरि भाषा-विज्ञानले आफ्नै इतिहास पनि लेख्नुपर्छ । अरू अनेक विषयहरू पनि यसै अन्तर्गत पार्न सकिन्छ ।

तथ्यांक प्रतिवेदनको अध्ययनबाट पनि भाषाको प्रचलन र आयुको ज्ञान प्राप्त हुन्छ । भाषिक भूगोलमा नेपापलमा पहाडतर्फ या भित्री मधेशतर्फ या उपत्यकाभित्र या तराईतर्फ आर्य भाषा परिवारका भाषा कति छन् र अरू बोलीहरू आदि कति छन् भन्ने विषय अध्ययन हुन्छ । उक्त भाषाहरू र बोली आदिहरूका क्षेत्रहरूका सीमाहरू पनि किटानी हुन्छन् । भाषे नक्शा आदि बनाउने कार्य पनि यसैमा पर्छ । भाषा र समाजको सम्बन्ध आदिको पनि विचार गरिन्छ, शैली विज्ञानको अध्ययन हुन्छ । खास गरेर एकै भाषामा लेख्ने विद्वानहरूको एकै शैली नहुने हुनाले शैलीगत विशेषताहरूको अध्ययन शैली विज्ञानमा हुन्छ । भाषाको सुरको अध्ययन पनि गरिन्छ । तुलनात्मक अध्ययन मार्गले दुई या दुईभन्दा बर्ता भाषाको तुलनात्मक अध्ययन गरेर निचोड निकाल्छ । भाषाविज्ञान र दर्शनको पूरा संबन्ध छ । भाषाविज्ञानको आफ्नै अनेक पक्षका पनि आफ्नै दर्शन छन् ।

## भाषाविज्ञानको अध्ययनको विभाग

वैज्ञानिक तरीकाले अध्ययन गर्दा भाषासम्बन्धी सबै पक्ष र प्रश्नमा विचार गर्नुपर्छ । केही पक्ष साधारण र केही महत्त्वपूर्ण हुन्छन् ।

वाक्यविज्ञानमा वाक्य नै भाषाको मुख्य अंग मानिएको छ । वाक्यको वैज्ञानिक अध्ययनलाई वाक्यविज्ञान भन्दछन् । यसमा वाक्यको गठनको पठन पाठन हुन्छ । यसका रूपहरू :—

( १ ) ऐतिहासिक वाक्यविज्ञान ।

( २ ) तुलनात्मक वाक्यविज्ञान ।

ऐतिहासिक वाक्यविज्ञानले कुनै एक भाषाको शुरूदेखि हालतकको वाक्य बनाउने अनेक विषयहरूको पठन पाठन गर्छ ।

तुलनात्मक वाक्यविज्ञानमा दुई या दुईभन्दा बढता भाषाको तुलनात्मक रूपले वाक्यहरूको गठनका अनेक नियमहरूको अध्ययन आरम्भदेखि वर्तमान काल-सम्मको हुन्छ ।

प्राचीन कालको वाक्यको अध्ययनका निमित्त त्यसै समयका मानिसहरूको मनो-विज्ञान सामाजिक अवस्था र भौगोलिक परिस्थिति आदिको ज्ञान अति आवश्यक छ । त्यस्ता ज्ञान नभै वाक्यविज्ञान पूरा हुँदैन, र समकालिक वाक्यको पनि अध्ययन गर्नुपर्छ ।

धेरै विद्वानहरूको मत, वाक्यबाटै भाषा शुरू हुन्छ र पद वाक्यबाट पछि फुटेर सिर्जना हुँदै जान्छ भन्ने छ । यो विषयको अध्ययन पनि यसै विज्ञानले गर्दछ । पाणिनिको

मत पनि वाक्यबाटै वाक्यमा बोली आदि शुरू हुन्छ र पछिपछि ती शुरूका वाक्य टुक्रिएर पद बन्दै जान्छन् भन्ने छ। पाणिनिका टीकाकार प्राचीन पुण्यराजले यस विषयमा राम्ररी प्रकाश पारेका छन्। भर्तृहरिको पनि यही मत छ। धेरै पश्चिमी विद्वानहरूको पनि यही मत छ। तर केही विद्वान पहिले पद सिर्जना हुन्छ र पछिबाट वाक्य बन्दछन् भन्ने मत पनि प्रकट गर्दछन्। तर यी पदवादिनको मत वैज्ञानिक छैन। वाक्यवादिन-को मत नै वैज्ञानिक छ। नेपालीमा वाक्यबाट 'पद' बनेको पाइन्छ। जस्तै "ल है,[१] अब मलाई पुग्यो है त"। पूरा एक या दुई वाक्यबाट "लौत" एक पद बनेको छ।

**रूप-विचार**—वाक्य शब्दबाट बन्ने भएकोले वाक्यको अध्ययनपछि शब्दको रूपमा विचार गर्नु आवश्यक छ। रूप-विचार ( मर्फोलॅजी ) मा धातु, उपसर्ग, प्रत्यय र विभक्ति आदि सबै शब्द बनाउँदा प्रयोग हुने कुराहरू ( उपकरणहरू ) मा विचार गर्नु आवश्यक छ। यसको पनि ऐतिहासिक, तुलनात्मक र समकालिक, तीन किसिमका अध्ययन हुन्छन्।

**ध्वनि-विचार**—शब्द ध्वनिको संयोगबाट बन्दछ। त्यसैले शब्दको अध्ययन गरेपछि ध्वनिको अध्ययन गर्नु आवश्यक छ। यसलाई अंग्रेजीमा फोनोलॅजी भन्दछन्। ध्वनि-विचारभित्रै ध्वनिविज्ञान ( फोनेटिक् ) पर्छ। ध्वनि अध्ययन गर्दा ध्वनि निस्कने अवयवहरूको ( नाक-विवर, मुख-विवर, स्वर-तन्त्री आदि , ध्वनि पैदा हुने क्रियाको, ध्वनि लहरको र सुनिने कारणको समेत अध्ययन गर्नुपर्छ। ध्वनि-विचारमा ध्वनि परिवर्तन र ध्वनि विकासको पनि अध्ययन हुन्छ। ध्वनि प्रक्रिया पनि यसैमा अध्ययन हुन्छ।

ध्वनि-विचारका पनि तीन रूप छन् :—

( १ ) तुलनात्मक।
( २ ) ऐतिहासिक।
( ३ ) समकालिक।

तुलनात्मक ध्वनि-विचारले एक वंशका भाषाहरूका ध्वनिको अध्ययन गरेर त्यसका आधार-नियम सिद्ध गर्दछ। ग्रिम-नियम, ग्रासम्यान र बर्नर नियम आदिको सम्बन्ध यसै साथ छ।

ऐतिहासिक ध्वनि-विचारले एक भाषाको ध्वनिको अध्ययन गरेर ध्वनि कसरी र कुन कुन समयमा परिवर्तन भयो भन्ने ऐतिहासिक क्रम पत्ता लगाउँछ।

समकालिक ध्वनिको अध्ययन पनि गरिन्छ। ( हेर्नुहोस् ध्वनि विज्ञान र ध्वनि नियमहरू )।

---

१. "ल, अब मलाई भयो है त"—यो एक वाक्यबाट फुटेर 'लहैत' आएको हो। पछि 'लहैत' बाट 'लहै' भयो। यस्तै अरू पनि—भो त, हो·त, आदि।

**अर्थ विचार**—भाषाको बाहिरी अंग, वाक्य, शब्द र ध्वनिको अध्ययन गरी सकिएपछि भाषाको आत्मा ( अर्थ ) को विचार गर्नुपर्ने अति आवश्यक हुन्छ । यो अध्ययनले मानिसको मस्तिष्कसाथ ज्यादै सम्बन्ध राख्दछ र ज्यादै सूक्ष्म पनि छ । यसलाई अंग्रेजोमा सेमान्टिक्स भन्दछन् । यो विषय ज्यादै सूक्ष्म र जटिलसमेत भएकोले विशेष ठोस प्रगति हालसम्म भएको छैन ।

यसलाई तीन भाग गर्न सकिन्छ :—

( १ ) शब्दको अर्थ परिवर्तन—शब्दका अर्थहरू कसरी र कुन कारणहरूले परिवर्तन हुन्छन् भन्ने तथ्यको अध्ययन ।

( २ ) कुनै एक शब्द या ध्वनिको एक निश्चित अर्थ कसरी हुन्छ भन्ने कुराको अध्ययना "लेखनी" को अर्थ कलम कसरी भयो ? लेखनी माने मसी किन भएन ? "अश्व" माने घोडा नै कसरो भयो ? हात्ती किन भएन ? भन्ने इत्यादि पूर्ण वैज्ञानिक रूपको विचार हुन्छ । हामीले देखेको कुराको मात्र आकार शब्दले जनाउनासाथ हाम्रो आँखा र विचारसामुन्ने जानकारी हुन्छ । तर नदेखेको कुराको चित्र हाम्रो कल्पनासम्ममा आउन सक्तैन । यो कुरा ज्यादै गहन र सूक्ष्म भएकोले 'श्री यास्क' र 'श्री प्लेटोको समयदेखि नै यसमा विचार भएको छ' तर यथार्थ पत्ता केही लागेको छैन । थोरै शब्दलाई छोडेर अरू सब शब्दहरूको यही आश्चर्यजनक हालत छ । वैज्ञानिक आधार पत्ता छैन । कुनै तर्क पनि संतोषप्रद छैन । आजसम्म निश्चय पनि केही छैन । यो अर्थ-विज्ञान दर्शनशास्त्रसँग धेरै सरोकार राख्तछ । तर्कशास्त्र र मनो-विज्ञान साथ पनि सम्बन्ध छ । जे भए पनि भाषाविज्ञानको अध्ययन अर्थविज्ञानको अध्ययन पूर्ण नभएसम्म पूरा पनि मान्न सकिन्न र हालसम्म पूरा छ भन्न पनि हुँदैन ।

( ३ ) अर्थ विस्तार र संकोच आदि पनि अर्थ विचारले नै अध्ययन गर्दछ । "प्रवीण" र "कुशल" आदि शब्दहरूको अर्थ विचार कसरी भयो र "मृग" र "भार्या" को अर्थ कसरी संकोच भयो; "वर" को अर्थ "श्रेष्ठ" बाट "दुलाहा" भएर कसरी अर्थादेशमा पुग्यो, भन्ने इत्यादि विषय पनि अर्थ विचार ( सेमान्टिक्स ) भित्रै अध्ययन गर्नुपर्ने विषय हुन् ।

**शब्द समूह**—यसमा भाषाको शब्द समूहको अनेक दृष्टिबाट अध्ययन हुन्छ । ( क ) नयाँ शब्द कसरी बन्छन् । ( ख ) शब्द समूहमा परिवर्तन कसरी हुन्छ । ( ग ) विदेशी शब्दहरू कसरी घुस्तछन् । ( घ ) कोश कसरी बन्छ । ( ङ ) शब्दको व्युत्पत्ति र तुलनात्मक अध्ययन पनि हुन्छ ।

**प्रागैतिहासिक खोजी**—यसबाट हामी प्रागैतिहासिक कालको संस्कृतिमा प्रकाश पार्दै नयाँ इतिहास लेख्न सक्तछौं । कुनै अरू साधन नपाइने समयको नयाँ इतिहास यसबाट लेख्न सकिन्छ । ऋग्वेद कालको भन्दा अगाडिको संस्कृतिमा प्रकाश पार्न

ऋग्वेदको भाषा, शैली, विषय र भाव समाजको अध्ययन र लेखनबाट सकिन्छ। आबेस्ताबाट पारसीहरूको प्रागैतिहासिक अध्ययन गर्न सकिन्छ।

**लिपि**—भाषाविज्ञानले लिपिको उत्पत्ति, विकास र उपयोगिताको अध्ययन पनि गर्दछ। भाषाविज्ञानले ध्वनिको आधारमा लिपिको वैज्ञानिक सुधार गर्दै लिपिलाई ज्यादै उपयोगी बनाउन पनि सक्तछ। लिपि सुधार्नुपरे भाषाविज्ञानको मद्दत लिनुपर्दछ। ज्यादा कठोर लिपि र कठोर व्याकरण बनेको भाषाको प्रयोग कम हुँदै जान्छ। लिखित भाषा लिपिकै आधारमा चलेको हुन्छ। यसैले भाषाविज्ञानमा लिपिको सिर्जना, विकास, उपयोगिता र सुधारको अध्ययन हुन्छ।

उक्त विषयहरू बाहेक भाषाविज्ञानले भाषाको प्रकृति, विकास र एक भाषाबाट अरू भाषा कसरी निस्कन्छन् भन्ने इत्यादि विषयहरूको पनि अध्ययन गर्दछ। भाषाविज्ञानले आफ्नै इतिहास पनि लेख्नुपर्दछ। अरू अनेक विषयहरू पनि यसै अन्तर्गत पार्न सकिन्छ। वाक्, वाक्य, पद, समास, विभक्ति, धातु आदि सबैको आफ्ना आफ्नै दर्शन स्कूलहरू पनि छन्। यसमा पक्ष विपक्ष दुवै पाइन्छन्। भाषाहरूको वर्गीकरणको अध्ययन पनि भाषाविज्ञानभित्रै पर्छ। असभ्य जातिहरूको बोली र उपबोली आदि पनि अध्ययन गर्नुपर्छ। यसको गाढ अध्ययनले भाषाको शुरूका आकारहरू र अवस्थाहरू थाहा हुन्छन्।

## शुरूमा भाषाको रूप

**ध्वनि**—भाषाको शुरूमा ध्वनिहरू ज्यादै कठिन रहन्छन् र बिस्तारै बिस्तारै सरल हुँदै जान्छन्। लम्बे-लम्बे शब्दहरू छोटा छोटा हुँदै जान्छन्। वैदिक संस्कृत र नेपाली भाषाको तुलनाबाट यही पत्ता लाग्दछ। फेरि अफ्रिकाका प्राचीन तर पिछडिएका भाषाहरूको अध्ययनबाट पनि यही थाहा हुन्छ। आरम्भमा भाषा गीतको लयमा हुनुपर्छ भन्ने विचार पनि छ। यसका प्रमाणहरू पनि पिछडिएका भाषाहरूमा प्रशस्त पाइन्छन्।

**व्याकरण**—एकै शब्द एकै अर्थका निमित्त अनेक रूपका चलन हुन्छन् र बिस्तारै बिस्तारै सादृश्यबाट या ध्वनि परिवर्तनबाट अनेक रूप घट्तै जान्छन्। अपवाद धेरै हुन्छन्। व्यवस्थित कुनै नियम नभएकाले व्याकरण हुँदैनन् भने पनि हुन्छ। नेपाली भाषामै आज औषधि शब्द अनेक रूपको देखिन्छ; जस्तै ओखादि, ओखति, औषधि औसधि, औसति, औसथि, औसदि, ओसदि, ओसति, ओसधि आदि। जनजिब्रोपिच्छेको शब्दको व्याकरणको नियम कुनै पनि राष्ट्रमा देखिदैन, न यो कुरा संभव पनि छ।

**शब्द समूह**—क्षारंभिक भाषामा अभिव्यंजना शक्ति ज्यादै कम रहन्छ र सूक्ष्म र सामान्य भावना बुझाउने शब्दहरू कम हुन्छन्। टस्मानियाको मूल भाषामा हरेक रूखलाई बुझाउने नाम छ तर 'रूख' शब्द छैन। यो भाषामा कडा र नरम, चिसो र

तातो बुझाउने शब्दहरू पनि छैनन् । जुलु जातिको भाषामा 'राती गाई' 'काली गाई' बुझाउने शब्दहरू छन् तर 'गाई' बुझाउने शब्द छैन ।

**वाक्य**—शुरूमा सब शब्दसमूह जकडिएर एक वाक्य बनेको हुन्छ र शब्द अलग अलग गर्ने नियम हुँदैनन्, यस्तो एक वाक्यले पूरा एक विचार प्रकट गर्छ । उत्तरी अमेरिकाका केही भाषाहरूमा आजसम्म पनि वाक्यबाट शब्दहरू अलग-अलग हुन सकेका छैनन् ।

**विषय**—शुरू समयमा मानिसमा तर्क ज्यादै कम रहँदो हो र मानिस धेरै भावुक रहन्थे होलान् । संगीतात्मक भाषाको चलन, प्रेम, भय, जोश आदिबाट निक्ल्यो होला । यसै कारणले संसारमा गीत र पद्यकाव्य ज्यादै प्राचीन, धेरै भाषामा पाइन्छन् तर गद्य पाइँदैनन् । शुरूमा भाषा संगीतात्मक रहन्छ । पश्चिमी विद्वान श्री डार्विनले बानर विकसित हुँदै गएर सुध्रेर नर भएको हो भन्ने मत प्रकट गरेका छन् । बानरको अवस्थाको नरले इंगित भाषाबाट आफ्नो भित्रको वेग प्रकट गर्थ्यो । जस्तै आजकाल कुकुरले प्यार गरेको समयमा मालिकनिर जोरिन गएर अथवा कुनै अरू भाव अगाडिका नंग्राले या थुतुनोले भैं खोस्रेर प्रकट गर्छ । बानरले मुख बिगारेर क्रोध प्रकट गर्छ । बिरालो पनि मुख बिगारेर नै क्रोध जनाउँछ । त्यस्तै गरेर बानर अवस्थानजीकको मानिसले पनि त्यस्तै इंगित भाषाबाट भाव प्रकट गऱ्यो होला । पछि मानिसले अनेक प्रकारका ध्वनिद्वारा मनको भाव र वेग प्रकट गर्न थाल्यो र हालका भाषाहरूको शुरू वात भएर विकास भयो । हाल पनि मानिस भाषण दिंदा, नाच्ता ध्वनिमा या भावमा जोश थप्दा र क्रोध क्षोभ जनाउँदा शुरूको इंगित भाषाको प्रयोग शरीरद्वारा गर्दै छ भन्ने मत छ । भाषाको अन्तिम रूप लिखित भाषा हो । लिखित भाषाले भाषाको स्थिरता, उपयोगिता र प्रचार बढायो । छापाखानाले र अरू यन्त्रले यो स्थिरता, उपयोगिता, प्रचार र प्रसारलाई ज्यादै वृद्धि गरे ।

## भाषाको आधार

भाषाका मुख्य दुई आधार छन् :—

( १ ) मानसिक र ( २ ) भौतिक ।

( १ ) मानसिक आधारलाई भाषाको प्राण अथवा आत्मा भन्दछन् । यसको सम्बन्ध अर्थ र मानिसको मगजका साथ हुन्छ जहाँ विचार उत्पन्न हुन्छ । भौतिक आधारभन्दा मानसिक आधारको अध्ययन कठिन हुन्छ ।

( २ ) भौतिक आधार भाषाको शरीर हो । यसले विचार प्रकट गर्न मानिसलाई सहायता दिन्छ । यसको सम्बन्ध ध्वनिको लहर साथ छ । मुख, कान आदिको सम्बन्ध र कार्य पनि यसैको अन्तर्गत पर्दछन् । वक्ता र श्रोता दुवैका निमित्त यी दुवै आधारहरू आवश्यक छन् ।

## भाषाको प्रगतिका कारणहरू

भाषाको प्रकृति नै परिवर्तनशील छ। यस कुराको चर्चा भाषाको प्रकृति प्रकरणमा नै भइसकेको छ। विकास या परिवर्तनशीलताको प्रभाव ध्वनि, शब्द, रूप, अर्थ र वाक्य सबैमा पर्दछ। यस विषयमा कायायन, पतञ्जलिदेखि आजसम्म पश्चिमी भाषा वैज्ञानिक अध्ययन गर्दछन्।

भाषाको विकास दुई किसिमबाट हुन्छ :—

( १ ) स्वाभाविक गतिबाट या ( आभ्यन्तर कारण ) र ( २ ) बाह्य कारण। तर धेरैजसो परिवर्तनहरूलाई यो दुवै वर्गभित्रका अनेक कारणहरू मिलेर ल्याएका हुन्छन्।

( १ ) आभ्यन्तर वर्ग :—

प्रयोगको घसेटिबाट खिइनु—

ज्यादा प्रयोगबाट भाषाका शब्दहरू खिएर पातला र छोटकरी बन्दछन्। यसरी घसेटिएर आएको परिवर्तनलाई स्वयंभू विकास भन्ने चलन छ। जस्तो संस्कृतको ‘अहम्’ बाट नेपाली भाषामा ‘म’ हिन्दीमा ‘हम’, सप्ताहबाट ‘हप्ता’। ‘मध्य’ बाट ‘माझ’ फेरि ‘मा’। ‘विवाह’ बाट ‘बिहे’। पछि फेरि यही ‘बिहे’ घसेटिएर ‘बिए’ हुन्छ। ‘अम्मा’ बाट आमा अनि ‘मा’, ‘हस्त’ बाट हात, ‘अंगुलि’ बाट ‘औंला’, श्रेष्ठ बाट ‘सेठ’।

कुनै अंशमा जोड दिएबाट—

कुनै ध्वनि या अर्थमा ज्यादा जोड दियो भने सो ज्यादा जोड दिएको ध्वनिले या अर्थले अरू आसपासको ध्वनि या अर्थलाई दुर्बल बनाइदिन्छ या खतम गरिदिन्छ। जस्तै ‘तत्स्थाने’ बाट ‘त्यहाँ’ पछि ‘त्याँ’ हुन्छ। ‘लेफटेन्यान्ट’ बाट ‘लप्टन्’। पुरानो ‘सुबेदार’ बाट ‘सुबा’। ‘सु’ र ‘ब’ मा परेको जोड ( बल ) ले अरू अक्षर खतम भयो कप्तान—‘क’ र ‘प’ मा परेको जोडले ‘ट’ खतम भयो।

प्रयत्न लाघव—

भाषा सरलतातर्फ झुक्तछ भन्ने कुरा अगाडि नै चर्चा भएको छ। यही सरलताको खोजमा मानिसहरूले सकेसम्म कम प्रयत्नले अधिकाधिक भाव व्यक्त गर्ने कोशिश गर्दछन्। यसैले लम्बे लम्बे शब्दहरूका ध्वनि घटेर छोटा छोटा हुन आउँछन्। ‘कम्याण्डर-इन-चीफ’ बाट ‘कमाड् चीफ’ उपाध्यायबाट ‘झा’, ( उबज्झा बाट उझा ‘ओझा’, ओझाबाट ‘झा’ )। ‘आइजेन्हावर’ बाट ‘आइक’, ‘एट् सेट्रा’ बाट ‘इटिसी’ ( etc ) ; ‘अथवा’ बाट पछि नेपालीमा ‘या’ ( वा )। पाली, प्राकृत ( लौकिक ) भाषाहरूमा तीन श, ष, स मध्ये एक मात्रको प्रयोग पनि यसै सरलताबाट भएको हो।

अद्यबाट आज । कुनै शब्द सरल गर्दा केही लामो पनि हुन्छ । जस्तै स्कूलको इस्कूल, स्नानबाट असनान । विश्वकेतुबाट विस्केट ( जात्रा ) र चारुमती बहालबाट चावेल ( स्थान ) सरलताका निमित्त छोट्याइएका हुन् ।

अनुकरणको अपूर्णता—

अनुकरणको अपूर्णता, शरीरको अवयवको विभिन्नता, ध्यानको कमी र अशिक्षाबाट हुन्छ । कुनै जातिका मानिसहरू अवयवका विभिन्नताले या ध्यानको कमीले गर्दा 'त' र 'ट' 'द' र 'ड' र 'ढ' इत्यादि राम्ररी छुट्ट्याएर उच्चारण गर्न नसक्ने हुन्छन् । अनुकरणको अपूर्णता अज्ञानले र भ्रमले हुन्छ । जस्तै ब्राह्मण शब्द 'बाह्मन्' अनि बाहुन भयो । पछि बाहुनबाट 'बाउन' हुन्छ, फेरि 'बाअन' हुन्छ ।

मानिसको मानसिक स्तरमा परिवर्तन हुनासाथ विचारमा परिवर्तन हुन्छ । विचारको परिवर्तनले अभिव्यंजनाको ढंग बदलिन्छ । यही बदलीले भाषामा प्रभाव पारेर अदलीबदली ल्याउँछ । यो परिवर्तनका दुई परिणाम हुन्छन्—( २ ) अर्थ परिवर्तन र ( २ ) ध्वनि परिवर्तन । अर्थ परिवर्तन ज्यादा हुन्छ र ध्वनि परिवर्तन कम हुन्छ । जस्तै 'पत्र' शब्दको इतिहास पहिले पत्रको माने 'पात' मात्र थियो । पातमा लेखिन थालेपछि अर्थ बदलिँदै गयो र पछि भोजवृक्षको बोक्रामा लेखिन थालेपछि पनि 'भोजपत्र' या 'भूर्जपत्र' ( नेपालीमा पछि भूजपत्र ) भन्ने चलन भयो । पातलो शिला या तामाको पाता या सुनको पातामा लेखिन थालेपछि पनि यही पत्र शब्द प्रयोग हुन थाल्यो । जस्तै शिला-पत्र, तामा-पत्र, सुवर्ण-पत्र । हाल यही परिवर्तन 'दृष्टि' शब्दमा भएको हाम्रो भाषामा देखिन्छ । दृष्टिले श्री पशुपतिनाथको नेत्राकार श्रीखण्ड चन्दनको टीका पनि बुझाउँछ ।

राष्ट्रिय प्रेरणा

राष्ट्रिय वादले प्रेरित भएर मानिसले विदेशी शब्दको सट्टा आफ्नै पुराना र स्थानीय बोलीका शब्दहरू पनि प्रयोगमा ल्याउँछ । जस्तै कलेजको सट्टा महाविद्यालय, प्रिंसिपलको सट्टा प्राचार्य र होटेलको सट्टा भट्टी र म्युनिसिप्यालिटीको सट्टा नगरपालिका, पदपेटी, बस बिसौनी आदि ।

( २ ) बाह्य वर्ग

भौतिक वातावरण—

यसको प्रभाव धेरै किसिमबाट पर्दछ । गर्मी या सर्दीको आधारमा मानिसको शरीरको अवयव, रहन सहन, स्वभाव, आचार इत्यादि बनेका हुन्छन् । भाषा फेरि यी सबैको आधारमा बनेको हुन्छ ।

मैदानी देशमा आवतजावतको बाटो सरल हुने भएकोले टाढा टाढासम्म एकै

रूपको भाषा धेरै कालसम्म चलिरहन्छ। पहाड़ी प्रदेशमा बाटो घाटो सरल नहुने र आवतजावत थोरै नै हुने हुनाले र संसर्गको कमीले एकै भाषाबाट अनेक भाषा र धेरै बोली निस्कन्छन्। पहाड़ी देशमा धेरै भाषा र बोली हुनाको एक विशेष कारण यही हो। एक ठूलो नदी वारपारमा भिन्न भिन्न बोली हुनाको कारण पनि यही हो। ग्रीसमा यही कारणले धेरै नगर जनपदहरू खडा भएर धेरै बोलीको चलन भयो। यही कुरा नेपालको पुरानो परिस्थितिसंग पनि मिल्छ। नेवारी भाषाको विभिन्नता काठमाडौं, ललितपुर, भक्तपुर साँखु आदि शहरमा हुनाको कारण पनि राजनैतिक कारणमा आधारित छ। ज्यादा साना साना राज्यहरू खडा भै सीमा निर्धारित भएकाले उक्त विभिन्नता सिर्जिन गएको हो।

**उपजाउ भूमिः**—अन्न प्रशस्त पैदा हुने देशका मानिसहरूलाई गूढ सोच-विचार गर्ने समय धेरै मिल्दछ र सो गूढ सोच-विचारको प्रकट गर्नका निमित्त भाषा पनि गंभीर बन्दै जान्छ—जस्तै नेपाल र भारत। नेपालको सप्तरी महोत्तरी आदि जिल्लामा जनक जस्ता दार्शनिक र याज्ञवल्क्य जस्ता कानून प्रवीण जन्मेर सारा हिन्दू जातिलाई धर्म ग्रन्थ र कानूनी ग्रन्थ दिन सक्नु यही उर्वरा भूमिको देन हो। प्राचीन कालमा यो भूमि ज्यादै उर्वरा थिए।

## सांस्कृतिक प्रभाव

**संस्कृतिः**—कुनै देशको प्राचीन संस्कृतिले भाषामा बराबर घचघच्याएर नयाँ प्रभाव पार्दछ। जस्तै नेपालमा प्रजातंत्र घोषणा भएपछि फेरि प्राचीन संस्कृतिको प्रभाव 'गृह विभाग', 'अर्थ-विभाग', 'मन्त्री' 'सचिव', 'विधान' इत्यादि शब्दहरूका प्रयोगले देखाउँछ।

**व्यक्ति :**—ज्यादै प्रतिष्ठित या शक्तिशाली व्यक्तिको लेख या वचनबाट पनि भाषामा प्रभाव पर्दछ। जस्तै भानुभक्तको रामायणले उनको समयको नेपाली भाषाले र श्री ५ बडामहाराज पृथ्वीनारायण शाहका हुकूमले खास गरेर पुराना सनद पत्रहरूका शब्दहरूमा ज्यादै प्रभाव पारेको छ। दिव्य उपदेशहरूले पनि प्रभाव पारेका छन्। साधारण मानिसहरूलाई दैनिक जीवनको व्यवहार चलाउन अति सरल लेखद्वारा शिक्षा दिने लेखकको लेखले पनि प्रभाव पारेको हुन्छ। जस्तै शिखरनाथको अनेक लेखहरूको प्रभाव पहाडी जीवनमा रक्सौल्, राम् गडुवा, सुगौली, सिमरा फेर.... आदि लेख, अर्ध शिक्षित पहाड़ी नेपालीको मुखबाट विदेशमा बराबर सुनिन्छ। औषधि-तर्फ पनि सुनिन्छ।

**प्रसंग :**—अनेक किसिमको संसर्ग, व्यापार, राजनीति, धर्म, प्रचार साहित्य आदिबाट पनि भाषामा शब्दहरू सरेर आउँछन्। जस्तै नेपाली भाषामा 'ठ्या' 'मठ्या' दुरूखवां' 'बिनाभो' 'ट्याफो' 'फौजदारी' 'जुजुधो', सिकर्मी' 'गुरुमापा' 'लाखा'

'चटामरी' 'देवानी' 'काजो' 'सुब्बा' 'कोट' 'बूट' 'फी' 'ग्यालरी' 'बैठक' 'लूड्गन्' 'इष्ठेगन्' 'राष्ट्रिय' 'कन्सुल' 'जनरल' 'बाइबिल' 'कुरान' 'ब्याले' 'ब्याण्ड' 'मार्चपाष्ट' 'अर्डर' 'समन' 'वारेन्ट' 'सिनेमा' 'ब्यांक' 'होटेल' 'कालेज' 'स्कूल' 'भाउचर' 'रसीद' 'डलर' 'यान' 'रुबल' 'फ्यांक' 'पादरी' 'फादर' आदि ।

**घृणा** :—भित्री घृणाले—जस्तै बड़ाहाकिमबाट बूराहाकिम । राणा कालमा केही टाट पल्टन लागेका भारादारलाई बड़ाहाकिम नियुक्त गरी पठाउने चलनले बाहिरी जिल्लाका प्रजाले अत्यन्तै दुःख घृणा देखाएर बूराहाकिम शब्द सिर्जना गरी प्रयोग गरे ।

## सामाजिक अवस्था

**तितरबितरबाट**—एक भाषा बोल्ने मानिसहरू तितरबितर भएर अनेक वर्गमा बाँडिएर बेग्ला बेग्लै जातिको रूप धारण गरेपछि कुनै शुरूको एक शब्दको अर्थ पनि अलग अलग जातिमा भिन्न भिन्न मानेमा प्रयोग हुन्छ । जस्तै 'वाटिका' को संस्कृतमा बगैंचा माने हुन्छ । भोजपुरीमा यही शब्द 'बारी' हुन्छ र यसको अर्थ बगैंचा नै हुन्छ । तर नेपालीमा 'बारी'बाट 'बगैंचा' र बारी दुई शब्द विकास भएर, दुवैका बेग्ला बेग्लै माने हुन्छन् । जस्तै "बगैंचाको अर्थ फल-फूलवारी र बारीको माने केवल पाखो–बिरुवा नभएको बारी भन्ने हुन्छ । तर फेरि यही शब्द बंगालीमा 'बाड़ी' हुन्छ र घर भन्ने अर्थ हुन्छ ।

**पूर्णता**—अंग्रेजी कॉर्नको माने अन्न हुन्छ । तर अमेरिकामा पहिले मकै ज्यादा हुने हुनाले र आदिवासीले ज्यादै त्यही मकै खाने हुनाले 'कॉर्न' को अर्थ मकै हुन्छ । उहिले चौबीसीहरू 'दाङलाई' 'पारकोटे भन्थे तर काठमाण्डूमा 'पारकोटे' शब्दले एक जातिको भैंसी मात्र बुझाउँछ, जहाँबाट पहिले भैंसी ज्यादा आउँथे । त्यस्तै घरबुना माने खास एक थरी ज्यादा प्राप्त हुने स्थानीय सस्तो कपड़ा । त्यस्तै भात खायो ? भनेर सोध्ने चलन । पहिले उपत्यकामा चामल प्रशस्त हुन्थ्यो र सबैले भात खान्थे । अझ पनि, जे खाए पनि "भात खायौ ?" भनेर सोध्ने चलन छँदैछ । मीठो या पीठो जे खाने वर्गले पनि भात खायौ भन्ने प्रयोग गर्दै छ ।

**वातावरण**—एकै शब्द समाजको वातावरणअनुसार भिन्न भिन्न अर्थमा प्रयोग हुन्छ । जस्तै अंग्रेजीका 'मदर र सिस्टर' शब्दहरू । घरमा 'मदर' र 'सिस्टर' को एक माने हुन्छ, चर्च र अस्पतालमा विशेष अर्कै अर्थ हुन्छ । सभामा नेपालीमा भाषण गर्दा दाजुभाई दिदी बैनीको माने भिन्नै हुन्छ र घरमा भिन्नै हुन्छ । 'बाजे'को माने घरमा बाको 'बा' भन्ने हुन्छ तर अन्यत्र बाजे माने बाहुन (बाजे) पनि हुन्छ । वैदिक शब्दमा 'यजमान' को खास अर्थ यज्ञ गर्ने मानिस भन्ने हुन्थ्यो तर हालमा दक्षिणा दिनै सबै यजमान ( जजमान ) भनिन्छन् । फेरि 'नाउको जजमानी' इत्यादिले

खालि पेशासम्मको अर्थ मात्र बुझाउँछ । यो जजमानी खरीद विक्री पनि हुन्छ। 'दण्ड' माने 'लौरो' हुन्छ तर ऐनमा दण्ड माने जरिवाना या सजाय हुन्छ । एउटै शब्द भकारी, नेपाली भाषामा प्रयोगले अनेक अर्थ जनाउँछ, जस्तै—भकारी गइन भन्नाले भकारी जस्तो मोटी स्त्री भन्ने अर्थ हुन्छ । भकारी मानिसले धनी मानिस, भकारामा राख भन्नाले चोयाको भकारी, सड़कको भकारी भन्नाले रूख रक्षा गर्न बनाएको इँटको गोलाकार पर्खाल, वागमती नदीको भकारीले नदीको वेग रोक्न बनेको ढुंगा या सिमेन्टको भकारी जस्तै गोलाकार बड़े लट्ठा, विद्या क्षेत्रमा भकारी भन्नाले प्रवीण भन्ने अर्थ हुन्छ । आकाशमा घ्याम्पो उड्यो भनेमा अर्कै अर्थ हुन्छ, विवाह आदि चाडमा उडाउने घ्याम्पो हुन्छ । भण्डारको घ्याम्पो माने चामल हाल्ने घ्याम्पो हुन्छ । "बाटाको पानी घ्याम्पो" भन्नाले अर्कै मतलब हुन्छ । सिमेन्टको चौपाटे टंकी समेत जनाउँछ । मसला तरकारीमा हाल्न छैन भन्नाले जोरा मरीच आदि मसला हुन्छ । खीरको मसला छैन भन्नाले त्यसै खाने छोहरा किसमिस आदि मसला हुन्छ । सलाईमा मसाला छैनको अर्थ सलाई नबल्ने भएछ भन्ने हुन्छ । बन्दूकको मसला भन्नाले अर्कै अर्थ हुन्छ । मसलाको रूख भन्नाले एक जातको वृक्ष मात्र जनाउँछ । त्यसको बुद्धिमा मसला नहालिछोड्दिनँ भन्नाले अर्ती दिएर बुद्धि ठीक गर्नु भन्ने मतलब हुन्छ ।

## (५) सादृश्य

सादृश्यले पनि भाषाको परिवर्तन या विकासमा धेरै प्रभाव पार्छ । आजकालका धेरै नेपाली रचनाहरू अंग्रेजीको सादृश्यमा मिल्छन् । यसको आधार पनि सरलता र सुविधा हो । जस्तै अंग्रेजीको प्रभाव जब र तब प्रयोग आधुनिक नेपाली भाषामा कलेजका स्नातकहरूमा देखिनु । त्यस्तै 'कि' को प्रयोग ऊ भन्छ कि ऊ भोलि घर जान्छ उद्धरण चिन्ह " " को ज्यादा नचाहिने प्रयोग पनि अंग्रेजीको प्रभाव हो । नेपाली भाषामा उक्त तीनै कुराको प्रयोग नगरे पनि काम राम्ररी चल्छ । यो चलन अंग्रेजी नपढेकाको भाषामा प्रायः पाइँदैन र केही अंग्रेजी नपढे पनि बुझ्की देखाउन प्रयोग गर्छन् ।

भाषाविज्ञानमा विकासको अर्थ परिवर्तन मात्र हो । परिवर्तन हुँदा भाषा उठ्न पनि सक्तछ या गिर्न पनि सक्तछ । तर दुवै अवस्थामा भाषा सरलतातर्फ झुक्तछ । समाजका अनेक अंगहरूको विकाससाथै विकास भएको भाषामा ओज गुण आदिको पनि वृद्धि हुन्छ ।

## भाषाको विकासमा रोकावटहरू

कुनै भाषाको आश्चर्यजनक उन्नति थोरै समयमा नै हुन्छ, तर कुनै भाषाको धेरै समयमा पनि अलिकति उन्नति हुँदैन । जुन कारणहरूले भाषाको उन्नति हुन्छ, तिनै कारणहरू उल्टो हुन गएमा भाषाको उन्नतिमा रोकावट हुन्छ । रोकावटहरूः—

**भौगोलिक परिस्थिति**—भौगोलिक परिस्थिति या अरू कारणले अरू देशसँग कम संपर्क राख्ने देशको भाषाको उन्नति चाँडो हुँदैन । जस्तै—आइसलयाण्ड र अरू अविकसित पहाड़ी देशहरू–लिथुआनिया आदि—जहाँ बाहरी संपर्क ज्यादै कठिन छ ।

**खाने कुराको कमी**—कम उपजाउ हुने देशका मानिसले ज्यादा समय खाने कुराको खोजीमै बिताउनुपर्दछ र उनीहरूलाई भाषाको या साहित्यको विकासमा ध्यान दिने समय हुँदैन । गरीबीले मेधाको विकासमा ज्यादै बाधा गर्छ र अनेक विकासलाई तगारो हुन्छ ।

**सामाजिक भय**—समाजमा चलेको भाषाको शब्ददेखि फरक शब्द प्रयोग गरेमा समाजमा हँसी हुने हुनाले मानिसले चलेको शब्दको मात्र प्रयोग गर्दछ र नयाँ सुहाउने शब्दको खोजीमा लाग्दैन । जस्तै "ग्यालरी बैठक" को सट्टा 'कलात्मक बैठक', 'सिनेमा' को सट्टा 'चलचित्र', 'भिटामिन' को सट्टा 'पुष्टकारी', 'फाउन्टेन् पेन' को सट्टा 'भल-कलम', 'नेकटाइ' को सट्टा 'गलौटी', प्यान्ट' को सट्टा 'धोक्रे सुरुवाल', 'चियाको कप' को सट्टा चियाको पाला वा कचौरी', 'होटेलको सट्टा 'भट्टी', 'बङ्गलो' को सट्टा 'चट्टे घडेरी' र 'जुजुधौ' को सट्टा 'शाही-दही' प्रयोग गर्न मानिस सर्माउँछ । तर कुनै शब्दहरू सर्माउँदा सर्माउँदैको प्रयोगबाट पनि साधारण प्रयोगका शब्दहरू बन्दछन् । जस्तै 'जरसाहेब', 'माकल टोपी', 'भ्याट्भ्याटे' ( मोटर साइकल ), 'हवाइ अड्डा' ( एरोड्रम ), 'कट्टू' ( हाफ प्यान्ट ) इत्यादि । भाषामा यस्ता शब्दको विकासमा अशिक्षित मानिसहरू नै अग्रसर हुन्छन् र भाषालाई सहायक बन्दछन् । नेपालको अशिक्षित वर्गले हाल हेलिकप्टरलाई फिरफिरे जहाज भनेको सुनिन्छ र यो सहायक पनि बनेको छ ।

शिक्षा–खास गरेर व्याकरणले केवल आदर्श प्रयोग गर्न मात्र मानिसलाई प्रेरित गर्ने हुनाले यो भाषाको उन्नतिमा बाधक हुन्छ र भाषामा विकास रोकी स्थिरता ल्याउँछ । चलेको शुद्ध भाषा प्रयोग गर्नाले र लेख्नाले भाव सरलतासाथ प्रकट हुन्छ । नयाँ भाषाको प्रयोगमा भाव राम्ररी नबुझिने हुने डर हुन्छ । मानिसपिच्छेको नयाँ भाषा भएमा या स्थलपिच्छेको नयाँ भाषा भएमा सर्वत्र खिचडी हुन्छ । एकता भन्ने प्रश्न नै रहँदैन ।

## भाषाको विविध स्वरूप

माथि वर्णन गरिएका विषयहरू प्रमुखतः ऐतिहासिक हुन् । तर अब भाषाको विविध स्वरूप-वर्णन प्रमुखतः भौगोलिक रहन्छ । हामीले 'कुण्ड कुण्ड पानी मुण्ड मुण्ड बानी' भन्ने सुनेकै छौं । जसरी पानी मूलपिच्छे फरक हुन्छ त्यसरी नै बोली र बुद्धि पनि मुण्डपिच्छे फरक नै हुन्छ । एकदम एकैनास हुँदैन । बोली र बुद्धिको फरकले भाषाको शैली पनि फरक हुन्छ । यस्तै तरहले स्थानपिच्छे एकै बोली

या भाषा पनि केही हदसम्म फरक हुन सक्तछ। संस्कृत भाषा या प्राकृत भाषा भारतका अनेक क्षेत्रहरूमा बदलिएर पंजाबी, हिन्दी, मराठी, गुजराती, बंगाली आदि बने। यी भौगोलिक रूपका भाषाहरू हुन्। ऐतिहासिक रूप बारे माथि नै चर्चा भै सकेकै छ। प्रयोगको तरीकाले पनि भाषा बाँडफाँट गर्न सकिन्छ। जस्तै—शुद्ध भाषा, अशुद्ध भाषा, कानूनी भाषा, साहित्यिक भाषा, गद्य भाषा, पद्य भाषा, नाटकीय भाषा, व्यावसायिक भाषा, राजभाषा, राष्ट्रभाषा, प्रचलित भाषा, अल्प प्रचलित भाषा, जीवित भाषा, मृत भाषा, विकृत भाषा, गुप्त भाषा, व्यक्ति भाषा, बनावटी भाषा, पारिवारिक भाषा, व्यङ्ग भाषा आदि।

स्वरूप—( १ ) मूल भाषा, ( २ ) बोली ( उपभाषा )
( ३ ) आदर्श भाषा, ( ४ ) राष्ट्रभाषा
( ५ ) विशिष्ट भाषा, ( ६ ) कृत्रिम भाषा।

( १ ) मूल भाषा—मानिसहरूले कुनै मूल स्थानमा केही शताब्दी बसेपछि त्यहाँको जनसंख्या ज्यादै बढदै गयो होला र त्यहाँका केही मानिसहरूलाई खाने कुरा र अरू चाहिने कुराको कमीले गर्दा सो मूल स्थानबाट अरू देशमा अनेक शाखाहरू बन्दै गए। मूल स्थानको विषयमा अनेक मतहरू छन्। पहिलो शाखा फुटेको समयमा सबै शाखाको एउटै मूल भाषा थियो। तर नयाँ ठाउँमा अड्डा जम्दै गयो र त्यही ठाउँमा शताब्दीहरू बित्दै गएपछि मानिसको भोगोलिक परिस्थितिले पनि त्यहाँका मानिसको भाषामा परिवर्तन ल्याउन ज्यादै जोड गऱ्यो। धेरै समयपछि शाखाहरूका प्रदेशका मानिसका भाषाहरूमा र मूल भाषामा समेत ज्यादै विभिन्नता हुन थाल्यो। शाखामा जनसंख्या धेरै बढेपछि यी शाखाहरू फुटेर प्रशाखा बनेर फेरि अरू नयाँ ठाउँमा अड्डा जमाउँदै गए। र फेरि यी नयाँ प्रदेशहरूमा नयाँ भाषाको विकास भयो। यी विकसित भाषाहरूका भौगोलिक रूपहरू हुन्।

यो परिवर्तन तलको चित्रबाट स्पष्ट ज्ञान हुन्छ—



माथिको चित्रमा 'क' मूल भाषाबाट दोस्रो तेस्रो र चौथो पिढीका भाषाहरू विकास हुँदै गए । एक मूल पुरुषबाट जसरी मानिसको वंशवृक्ष बन्दछ उस्तै किसिमबाट भाषाको वंश-वृक्ष पनि बन्दछ । यही मतलबमा नेपाली हिन्दी, अंग्रेजी फ्रेञ्च इत्यादिलाई नेप-भारोपीय परिवार ( Nep-Indo-European family ) भने पनि हुन्छ। नेपाल राष्ट्रको हिमालतर्फको भाषा र बोलीहरूको आफ्नै पारा छ ।

( २ ) बोली ( उपभाषा )

माथिको चित्रबाट यो देखिन्छ कि पहिले शुरूमा एक भाषा थियो पछि ख, ग, घ हाँगाहरू 'क' बाट फुटेर आए । समयको र दूरताको कारणले गर्दा यी शाखा-भाषाहरूमा संपर्क हुन सकेन र तीन शाखा भाषाहरूमा तीन किसिमको विशेषताको विकास हुँदै गयो र तीन अलग अलग बोली बने । कुनै कारणबाट एक परिवारका भाषाहरूमा संबन्ध विच्छेद धेरै समयसम्म कायम रह्यो भने बोलीहरूको विकास हुन्छन् । कुनै ज्यादै कठोर पहाडको वारपार र ज्यादै ठूलो नदीको वारपारमा पनि फरक फरक बोली रहेका पाइन्छन् ।

राजनैतिक या आर्थिक कारणबाट केही मानिसहरूले आफ्नो देश छोडेर अर्को दूर देशमा गएर बसेमा पनि एक नयाँ बोलीको विकास हुन्छ । मध्य यूरोप जर्मन भाषाको क्षेत्र थियो । मध्य यूरोपबाट बेलायतमा बसाइँ बस्ने मानिसहरूले केही पछि अंग्रेजी बोलीको विकास गरे । बोली पनि अनेक किसिमका छन् । जस्तो मानिसको अनुहार फरक हुन्छ, त्यस्तै बोलीको लय पनि मानिसपिच्छे फरक हुन्छ । यो समयअनुसार परिवर्तन भइ नै रहन्छ । यस्ता बोली व्यक्तिगत हुन् । एक बोलीका उप-बोलीहरू पनि हुन्छन् । भाषा विज्ञानको विशेष धेरै संबन्ध स्थिर भाषा र बोलीका साथ हुन्छ ।

बोली नै महत्व प्राप्त गरेर फेरि भाषातर्फ लम्कन्छ । महत्व पाउनाका कारणहरू:—

( १ ) साहित्यको विकासबाट बोली महत्वपूर्ण हुन्छ । जस्तै अंग्रेजी भाषा, प्राचीन कालमा 'संस्कृत भाषा' ।

( २ ) धार्मिक श्रेष्ठताले पनि बोलीको महत्व बढाइदिन्छ । श्री रामसंबन्धी प्रधान तीर्थ अयोध्या र श्री कृष्णसंबन्धी मथुरा भएकोले अवधि र व्रज भाषाहरूले महत्व प्राप्त गरेका हुन् । धेरै शताब्दीसम्म यी दुई भाषा साहित्यका भाषा पनि बनेका थिए । तर पछि बेचलनले उक्त भाषा बोलीकै अवस्थामा रहे ।

( ३ ) देश ज्यादै उन्नतिशील भएमा पनि त्यो देशको बोलीले संसारभरको भाषाको रूप दिंदै जान्छ । जस्तै माल सामान, जापान, चीन, रुस, जर्मनी, फ्रान्स इत्यादि जहाँ बने पनि "मेड इन" ( Made in ) अंग्रेजीमै लेखिन्छ ।

( ४ ) बोलीले ज्यादै महत्व राजनैतिक कारणबाट प्राप्त गर्दछ । शासकवर्गको बोलीले अरू बोलीले भन्दा ज्यादै बर्ता महत्व र विकास प्राप्त गरेको सारा

देशको इतिहासमा पाइन्छ । जस्तै—पेरिसको फ्रेन्च बोली, लण्डनको अंग्रेजी बोली, भारतको खडी बोली आदि पछि राष्ट्रभाषा बने ।

अर्को बोलीको दबावबाट, या आफ्नै लिपिको कठोरताबाट, भाषा नै स्वभावैले कठोर वा अस्पष्ट भएर पनि बोली ( या भाषा ) नाश भएर जान्छ र त्यसको स्थानमा सरल र विकसित भाषा आउँछ । जस्तो—भारतीय परिवारको हिट्टाइट् भाषाहरू । बोली महत्व प्राप्त गरेर भाषा बन्दछ तर कुनै बोलीले महत्व प्राप्त गरेर पनि भाषा बन्ने अवसर पाउँदैन, जस्तै—अवधीले साहित्य इत्यादिबाट महत्व प्राप्त गरे तापनि भाषाको स्थान लिन सकेन । भारतीय परिवारको हिट्टाइट् भाषाहरू आफ्नै कठोरताले मरेर गए ।

## (३) आदर्श भाषा

सभ्यताको विकासले सम्पर्कको जरूरत बढ्दै जान्छ र एकै भाषाबाट निवलेका बोलीहरूमध्ये कुनै एक बोलीलाई आदर्श मानेर एकै परिवारका भिन्न-भिन्न बोली बोल्ने मानिसहरूलाई त्यही आदर्श मानिएको बोलीलाई अपनाएर आफ्नो व्यवहार चलाउने जरूरत पनि पर्छ । उच्चवर्गमा यही आदर्श बोलीले आफ्नो स्थान कायम गर्दै जान्छ र बिस्तार-बिस्तार साहित्यको भाषा पनि बन्दछ । एक बोलीले आदर्श भाषा बनेपछि अरू दिदी बैनी बोलीहरूमाथि ज्यादै प्रभाव पार्दछ र कहिलेकाहीं करीब करीब खतमै पनि गरिदिन्छ । पहिले ल्याटिन रोमको एक बोली मात्र थियो । तर बिस्तारै बिस्तारै जरूरतले गर्दा इटालीको आदर्श भाषा बन्यो र अरू दिदी बहिनी बोलीहरूलाई खतमै गरिदियो । खडी बोलीले पनि ब्रज, अवधी, भोजपुरीमा यही खतमी शुरू गरेको देखिन्छ । आदर्श भाषा बन्न व्याकरणका केही नियमको जरूरत हुन्छ । व्याकरणको नियम जस्तो केही नियम बनेर बोलीमा प्रयोग हुन थालेपछि उच्चारण र प्रयोगमा समानता आउँछ । यही समानताले स्थिरता ल्याउँछ र निश्चित रूप बोली-लाई दिई आदर्श भाषा बनाउँछ । आदर्श बोलीमा अरू बोलीको प्रभाव पनि पर्छ र सो प्रभावले पनि बिस्तार बिस्तार निश्चित रूप लिन्छ । नेपाली भाषाको विकासको इतिहास पनि यस्तै छ । करीब समस्त दक्षिण हिमालमनिका अनेक प्रदेशहरूमा नेपाली व्यापारिक भाषा भएर प्रयोग भएको थियो । नेपाली भाषा बन्नुभन्दा अगाडि नै व्यापारिक आदर्श भाषा धेरै प्रदेशहरूमा बनिसकेको थियो । अनेक प्रदेशका शिला पत्रहरूमा श्री ५ बडामहाराजको विजयअगाडि नै नेपाली भाषाको प्रचलन हुनु नै यसको स्पष्ट प्रमाण हो । अकारणमा शिलापत्रहरूमा विदेशी भाषा लेखिंदैन । कुनै विशेष प्रभावले मात्र लेखिन्छ । जस्तै—राणा शासनमा अंग्रेजी भाषा नेपालका शिला-पत्रमा लेखिने चलन टुँडिखेलवरिपरिकै सार्वजनिक भवनहरूमै छन् ।†

---

† कौटिल्य अर्थशास्त्रमा पाखी र खाग व्यापारबारे पाइन्छ । : २०३० भदौ २३ को गोरखापत्र शनि प. अ. हेर्नुहोस् ।

## ( ४ ) राष्ट्रभाषा—

आदर्श भाषाले अगाडि बढेर, अरू भाषा-क्षेत्र र अरू भाषा-परिवारक्षेत्रमा समेत सार्वजनिक कामका निमित्त ढाकेपछि राष्ट्रभाषाको मान पाउँछ । सारा यूरोपमा पहिले फ्रेन्चले यही स्थान प्राप्त गरेको थियो । व्यापार क्षेत्रमा वर्तमान समयमा अंग्रेजीले विश्वको राष्ट्रभाषाको पद प्राप्त गरेको छ । हिन्दी भाषाले करीब करीब यही स्थान हिन्दुस्तानभरका हिन्दी र अहिन्दी प्रान्तहरूमा प्राप्त गरेको छ । नेपाली भाषाले पनि नेपालका सब जिल्लाहरूमा धेरै अगाडिदेखि नै यही स्थान प्राप्त गरेको छ ।

## (५) कृत्रिम भाषा—

(क) **गुप्त भाषा**—गुप्तचर, जङ्गी जवान, चोर, डाँकू, घुस्याहा, नाफाखोरहरूमा र कूटनीतिमा यसको प्रयोग ज्यादा पाइन्छ । शब्दहरूको पहिले नै विशेष अर्थ आउने गरी माने ठेकिराखेको हुन्छ । जस्तै 'पूजा गर' = पिट, परसाद देउ = ठग, शिक्षा देउ = कुबाटो लाउ । आतंकवादी र क्रान्तिकारीहरूमा पनि यस्ता शब्दहरूको ज्यादा प्रयोग हुन्छ ।

साधारण मानिसहरूले पनि केही अनौठा शब्दहरू जोडेर धेरै समयसम्म कुरा गरेको देखिन्छ । जस्तै—

(अ) 'शि' कस्तूरी पंजा वीरे कस्तूरी 'व' कस्तूरी मासा = 'शिव' । 'जा' कस्तूरी पंजा वीरे कस्तूरी 'न्' कस्तूरी मासा 'छ' = जान्छ ।

(आ) फुलरा फुलम फुलना फुलथ=रामनाथ ।

गुप्त भाषाको अलग गुप्त लिपि पनि देखिन्छ । यसको रूप पनि कृत्रिम नै हुन्छ । यसको मुख्य उद्देश्य भाव र भाषा राख्नु नै हो ।

(ख) **सामान्य-बनावटी-भाषा**—गुप्त भाषाको अध्ययनबाट हामीलाई ज्ञात हुन्छ—कृत्रिम भाषा मानिसको बनावटी भाषा हो र स्वाभाविक होइन । कृत्रिम भाषा स्वाभाविक नभएकोले धेरै समयसम्म जीवित रहन सक्दैन । सामान्य बनावटी भाषा पनि कृत्रिम नै हो तर यसको उद्देश्य गुप्त कामका निमित्त नभई सार्वजनिक कामका निमित्त हुन्छ ।

यी सबै चलतीका भाषाहरूको सामान्य रूपसाथ सकेसम्म मिल्ने गरेर बनाइन्छ र यसको खास उद्देश्य सरलता र शीघ्र प्रयोग नै हुन्छ । जस्तै एस्पिरेन्तो र हिन्दुस्तानी एस्पिरेंतो डा० जमेन हाफले बनाएका हुन् । यो धेरै देशहरूमा प्रचार पनि भएको छ । उनको उद्देश्य यो भाषा विश्वभर प्रचार गर्ने थियो । तर हालसम्म सफल भएको छैन ।

## (५) कृत्रिम भाषा—

### (ग) विशेष भाषा—

कुनै विशेष समाजका निमित्त मात्र विशेष भाषाको चलन हुन्छ । जस्तै दरबारी भाषा—बाहुली, जिवनार, पाउपोस, शिरपोस, सवारी, सुकला र मर्जी । यी शब्दको

प्रयोग गरेमा मध्यवर्गमा हँसी देखिन्छ, किनकि यो ज्यादै कृत्रिम छ । पहिले जापान राजदरबार—सेवा—मा भर्ना हुन, पहिले दरबारी भाषामा उत्तीर्ण हुनुपर्थ्यो। साहित्यको भाषा र बोलचालको भाषाको फरक सबैलाई विदितै छ। कुनै कुनै स्थलमा स्त्री जाति र पुरुष जातिको भाषामा पनि धेरै फरक देखिन्छ। जस्तै क्यालिफोर्नियाको यन नामक जातिमा। यो युद्धको कारणले भएको हो भन्ने मत पनि छ । विजेताले पुरुष सबै मारी घर घर पसेकोले स्त्री र पुरुषमा फरक भाषा भएको हो ।

## संसारका भाषाहरूको वर्गीकरण

संसारभरका भाषाहरू भिन्न-भिन्न भए तापनि कुनै अंशमा यी भाषाहरूमा समता या एकता देखिन्छ। यही समताको आधारमा संसारभरका भाषाहरूको वर्गीकरण गर्न सकिन्छ। वर्गीकरण दुई प्रकारबाट हुन सक्छ।

**(क) आकृतिमूलक वर्गीकरण (Synthetical or Morphological )**

**(ख) ऐतिहासिक या पारिवारिक वर्गीकरण (Historical)**

**आकृतिमूलक वर्गीकरण**—आकृतिमूलक वर्गीकरणमा शब्दको अर्थ, तत्व, को रूप, आकृति या सामान्य रचनालाई ध्यानमा राखेर वर्गीकरण गरेको हुन्छ। यसमा वर्गीकरण सम्बन्ध-तत्वको समतामा गरिन्छ।

यस वर्गीकरणको आधार वाक्य र शब्दको रूप बनाउने शैलीमा छ । (१) वाक्यमा शब्दहरूको पारस्परिक सम्बन्ध कसरी प्रकट भएको छ। "मैले कलमले लेखें" यस वाक्यमा 'मैले''कलमले' 'लेखें'यी तीन शब्दहरूलाई भित्री अर्थ तत्वले कसरी परस्पर-बाँधेको छ। (२) फेरि "मैले" "कलमले" "लेखें" यी तीन शब्दहरूमा धातु, प्रत्यय इत्यादि जोडेर यिनीहरूको रूप कसरी बनेको छ। वाक्यविचार र रूप—विचारमा यो वर्गीकरण आधारित भएको छ।

## आकृतिमूलक वर्गीकरणको भेद—

आकृतिमूलक वर्गीकरणको आधारमा भाषाहरू दुई वर्गमा बाँड्न सकिन्छ । जस्तै :— (१) आयोगात्मक भाषाहरू (**Isolating language**) (२) योगात्मक भाषाहरू (**Agglutinative languages**)

(१) **आयोगात्मक भाषा**— आयोगात्मक भाषामा प्रत्येक शब्दको आफ्नो स्वतंत्र सत्ता कायम रहन्छ । एक शब्दले अर्को शब्दमा कुनै किसिमको विकार या परिवर्तन ल्याउन सक्दैन। प्रत्येक शब्दको अलग अलग सम्बन्ध तत्व या अर्थ तत्व व्यक्त गर्ने शक्ति हुन्छ। वाक्यभित्रको शब्दस्थानबाट मात्र शब्दहरूको परस्पर संबन्ध थाहा हुन्छ। जस्तै चीनियाँ भाषामा व्याकरण कुनै अलग चीज हुँदैन । वाक्यमा एउटै शब्द स्थान र प्रयोगको अनुसार संज्ञा, विशेषण, क्रिया र क्रिया विशेषण इत्यादि हुन सक्छ र त्यस शब्दमा कुनै अवस्थामा पनि कुनै किसिमको विकार उत्पन्न हुँदैन ।

उदाहरण—

(१) 'ता जिन' = ठूलो मानिस ।
'जिन ता' = मानिस ठूलो (हो) ।
(२) 'न्गो त नि' = पिट्छु तिमीलाई ।
'नि त न्गो' = तिमी पिट्छौ मलाई ।

अफ्रिकाको सूडानी, एशियाको मलयी, वर्मी; स्यामी, तिब्बती इत्यादि भाषाहरू पनि करीब करीब यस्तै छन् ।

यो भाषाहरूलाई स्थान प्रधान ( **Positioned** ) या निरवयव ( **Inorganic** ) पनि भन्दछन् । तर आवश्यकताअनुसार सुर स्वर र निपात आदिको पनि सहायता लिइन्छ ।

## (२) योगात्मक भाषा—

योगात्मक भाषा आयोगात्मक भाषाको ठीक उल्टा हुन्छ । योगात्मक भाषामा शब्दको स्वतन्त्र सत्ता कायम रहँदैन र 'धातु' या 'मूल शब्द' ( अर्थतत्व) मा प्रत्यय (संबन्धतत्व) जोडिएको हुन्छ । अर्थ तत्व र संबन्ध तत्वको योगबाट भाषा बनेकोले योगात्मक भाषा भनेको हो । संसारका अधिकांश भाषाहरू योगात्मक नै छन् ।

योगको प्रकृतिको आधारमा योगात्मक भाषाहरूको तीन फाँट गर्न सकिन्छ ।

( क ) प्रश्लिष्ठ ( **Incorporating** )

( ख ) अश्लिष्ठ ( **Simple Agglutinative** )

( ग ) श्लिष्ठ ( **Inflacting** )

## ( क ) प्रश्लिष्ठ योगात्मक भाषा

प्रश्लिष्ठ योगात्मक भाषा सम्बन्ध-तत्व र अर्थ-तत्वको योग अलग गर्न सकिन्न । जस्तै नेपालीमा 'घर' बाट घरेलु बन्दा र सुन्दरबाट सुन्दरी बन्दा । प्रश्लिष्ठ भाषाको पनि दुई वर्ग गर्न सकिन्छ—

( अ ) पूर्ण प्रश्लिष्ठ ( **Completely Incorporative** )

( आ ) आंशिक प्रश्लिष्ठ ( **Partly Incorporative** )

( अ ) पूर्ण प्रश्लिष्ठ भाषामा सम्बन्ध-तत्व र अर्थ-तत्वको योग ज्यादै जोडिएको हुन्छ । पूरा वाक्य नै करीब करीब एउटै शब्द बन्दछ । विशेष यस भाषामा हरेक शब्दको केही अंश मात्र लिएर शब्दहरू जोडिएका हुन्छन् र वाक्यले केवल लम्बे-शब्दको रूप मात्र लिएको हुन्छ । ग्रीनल्याण्ड र अमेरिकाका आदि निवासीहरूका भाषाहरू यस्तै छन् । जस्तै—ग्रीनल्याण्डको भाषामा—

अउलिसर=माछा मार्नु ।

पेर्तोर्=काममा लाग्नु ।

पिल्ने सु अर्पोक्=त्यो चाँडै गर्दछ ।

यी तीनै मिलेर एक शब्द-वाक्य बन्दछ—'अउलिसारी अर्तोरसुअर्पोक्'—ऊ माछा मार्ने कामका निमित्त चाँडै जान्छ ।

( आ ) आंशिक प्रश्लिष्ठ—यस भाषामा सर्वनाम र क्रियाको संमिश्रण हुन्छ र क्रिया अस्तित्वहीन भएर सर्वनामको पूरक मात्र बन्दछ । अफ्रिकाको बंटू परिवारका केही भाषाहरू यस्तै छन् । वास्क भाषामा जस्तै—

नकारसु = तिमी मलाई लैजान्छौ ।

हकारत=म तिमीलाई लैजान्छु ।

## ( ख ) अश्लिष्ठ योगात्मक भाषा

यसमा संबन्ध-तत्व ( प्रत्यय र अर्थ-तत्वको जोडाइ सफासाथ देखिन्छ । जोडाइको सत्ता स्पष्ट थाहा हुने भएकोले यो भाषाको रूप रचना ज्यादै सरल हुन्छ । भाषा वैज्ञानिकले कल्पना गरेर बनाएका आदर्श र कृत्रिम भाषाहरू पनि यही आधारमा बनेका छन् ।

अश्लिष्ठ योगात्मक भाषालाई चार फाँट गर्न सकिन्छ ।

( अ ) पूर्व योगात्मक ( **Prefix agglutinative** )—

यस भाषामा प्रत्ययको स्थानमा उपसर्गको प्रयोग हुन्छ । शब्द वाक्यभित्र अलग अलग राखिएका हुन्छन् । शब्दको रूप बनाउँदा संबन्ध-तत्व शब्दको शुरूमा मात्र जोडिने भएकोले यसलाई पूर्व योगात्मक भनेको हो । बंटू भाषामध्ये नै यसको उदाहरण विशेष पाइन्छ । जस्तै काफिरी भाषामा—

कु = लाई ( सम्प्रदान कारकको चिन्ह )

ति=म

नि=उनी

यसको योग—कुति=मलाई; कुनि = उनीलाई ।

जुलु भाषामा—

न्तु=मानिस । उमु=एकवचनको चिह्न ।

न्ग=बाट । अब=बहुवचनको चिह्न ।

यिनीहरूको योग यस्तो हुन्छ—
न्ग उमुन्तु=एक मानिसबाट ।
न्ग अवन्तु=मानिसहरूबाट ।

( आ ) मध्य योगात्मक ( **Infix agglutinative** ) र पूर्वान्त योगात्मक ( **Prefix suffix agglutinative** ) ।

यो वर्गका भाषाहरू हिन्द महासागरका टापूहरूमा र अफ्रिकाका नजीक म्याडा-गास्कर आदि टापूहरूमा फैलिएका छन् ।

यी भाषाहरूमा सम्बन्ध तत्व र अर्थ तत्वको जोड दुई किसिमबाट हुन्छ—

( १ ) दुई अक्षरको शब्दमा संबन्ध-तत्व बीचमा जोडिन्छ ।

(२ ) दुई अक्षरभन्दा बढ्ता अक्षरको शब्दमा संबन्ध तत्व शुरूमा र अन्त्यमा जोडिन्छ ।

जस्तै —

( १ ) मध्य योगात्मक—मुंडा परिवारको संथाली भाषामा 'मंझि'=मुखिया, 'पं०'=बहुवचनको चिह्न ।

जोड 'म पंझि'=मुखियाहरू । ( 'पं०' बीचमा जोडिएको छ ।

( २ ) पूर्वान्त योगात्मक—। मकोर भाषामा—ज—म्नफ—उ = म तेरो कुरा सुन्दछु । ( यसमा पूर्वमा 'ज' र अन्त्यमा 'उ' जोडिएको छ । )

( इ ) अन्त्य योगात्मक ( **Suffix Agglutinative** )—

यो वर्गको भाषामा संबन्ध तत्व अन्त्यमा मात्र जोडिन्छ, यूराल अल्टाइक र द्राविड परिवारका भाषाहरू यस्तै छन्—

( १ ) तुर्की—
एव=घर । एवलेर = कुनै घर ।
एवलेरइम=मेरो घर ।

( २ ) हंग्री भाषा—
जार=बन्द गर्नु । जारत् = बन्द गराउँछ ।
जारतगत् = धेरैजसो बन्द गराउँछ ।

( ई ) आंशिक योगात्मक ( **Partly Agglutinative** )—

यो वर्गको भाषामा योग र अयोग दुवै चिह्न पाइने हुनाले यसलाई आंशिक योगात्मक भनेको हो । न्यूजील्याण्ड र हवाई द्वीपका भाषाहरू यस परिवारभित्र पर्दछन् ।

## ( ग ) श्लिष्ठ योगात्मक भाषा ( Inflacting )—

यस परिवारको भाषामा संबन्ध-तत्व ( प्रत्यय ) जोडेपछि अर्थ तत्वको भागमा विकार पैदा हुन्छ। तर विकार पैदा भए पनि संबन्ध तत्व प्रष्ट रूपले थाहा हुन्छ। विकारले संबन्धतत्वलाई दबाई लुकाउन सक्तैन। जस्तै–वेदबाट वैदिक, पुराणबाट पौराणिक। 'वेद,' 'पुराणमा' 'इक' प्रत्यय जोड्दा केही विकार पैदा भएको छ। तर विकारले संबन्ध-तत्वलाई पूर्ण दबाउन सकेको छैन र प्रष्ट छ। जस्तै—काली, राती, सेतै, दुधालु, अड्डालु, सिकारू इत्यादि नेपालीमा।

यो वर्गका भाषाहरू ज्यादै उन्नत पाइन्छन्। सामी, हामी र नेपभारोपीय परिवार यही वर्गभित्र छन्।

श्लिष्ठ भाषाहरूको पनि दुई भाग गर्न सकिन्छ। ( क ) अन्तर्मुखी ( **Internal Inflection** ) र ( ख ) बहिर्मुखी ( **External Inflection** )। यो विभाजनमा केही सत्यता मात्र पाइन्छ।

( क ) अन्तर्मुखो श्लिष्ट—यस किसिमको भाषामा जोड ( संबन्ध-तत्व ) अर्थ-तत्वको बीचमा घुस्छ र त्यसैमा हेलमेल भएर रहन्छ। सेमेटिक र हेमेटिक परिवारका भाषाहरू यस्तै छन्। अरबी भाषाको क् त् व् (लेख्नु) धातुको उदाहरण लिएर हेरूँ।

कातिव—लेख्ने मानिस
किताब—लेखिएको कुरा
कतुव—धेरै किताबहरू
मकतव—किताब पढाउने ठाउँ।

( ख ) **बहिर्मुखी श्लिष्ट**—यस विभागको भाषामा थपुवा भाग ( सम्बन्ध-तत्व ) प्रधानता मूल भाग ( अर्थ-तत्व ) को पछाडि जोडिन्छ। जस्तै संस्कृतको 'पठ्' धातुबाट 'पठन्ति', नेप-भारोपीय परिवारका धेरैजसो भाषाहरू यही विभागभित्र पर्दछन्। नेपालीमा जान्छ, खान्छ, सुत्छ, आदि।

बहिर्मुखी श्लिष्ठ परिवारका भाषाहरूलाई दुई भाग गर्न सकिन्छ—

( अ ) संयोगात्मक र ( आ ) वियोगात्मक।

( अ ) **असंयोगात्मक**—भारोपीय परिवारका पुराना भाषाहरू सबै ( ग्रीक, ल्याटिन, संस्कृत, आवेस्ता इत्यादि ) संयोगात्मक थिए। यी भाषाहरूमा सहायक क्रिया र परसर्ग इत्यादिको आवश्यकता थिएन। शब्दभित्रै सम्बन्ध तत्व घुसेको हुन्थ्यो जस्तै, सः गच्छति = त्यो जान्छ। नेपाली भाषा पनि यही वर्गभित्र देखिन्छ। जस्तै—त्यो जान्छ; राम सुत्छ; म हिंड्छु; तिनी रुन्छिन्।

**( आ ) वियोगात्मक**—भारोपीय परिवारका धेरै भाषाहरू आधुनिक कालमा वियोगात्मक भएका छन् । जस्तै—"वह पढता है" ( हिन्दी 'है' सहायक क्रिया जोड्नु परेकोले र 'पढता' ले मात्र 'पढ्दछ' भन्ने नबुझाएकोले यसलाई वियोगात्मक भनेको हो । नेपालीमा यो प्रभाव पनि केही हदसम्म देखिन्छ । जस्तै ऊ गर्दछ । गोपाल कराउँछ ।

समयको चलनले गर्दा एउटै भाषा संयोगात्मकबाट वियोगात्मक र वियोगात्मक-बाट संयोगात्मक बन्दै रहन्छ । "ऊ जान्छ" यो संयोगात्मकलाई "ऊ गमन गर्छ" भन्ने प्रयोग गरेर वियोगात्मक बनाउन पनि सकिन्छ । राम भोजन गर्छ आदि ।

## आकृतिमूलक वर्गीकरणको रूपाकार तेरिज




## ( ख ) पारिवारिक या ऐतिहासिक वर्गीकरण

**आधार**—अर्थ तत्व अथवा धातु आदिको समानताको आधारमा भाषाहरूलाई एक परिवारको भन्न सकिन्छ । यो समानता पत्ता लगाउन शब्दको व्युत्पत्ति, ऐतिहासिक र तुलनात्मक व्याकरणको सहायता लिनुपर्छ । यो वर्गीकरणले भाषाका समस्याहरू धेरै नै समाधान गर्दछ । यसका निमित्त शब्दसमूह व्याकरण ( सम्बन्ध-तत्व ) र ध्वनि, यी तीन कुराको निकै खल गरेर निष्कर्ष निकाल्नुपर्छ ।

## संसारभरका मूल भाषा परिवारहरू

( १ ) नेप–भारोपीय परिवार ( २ ) सेमेटिक ( ३ ) हेमेटिक ( ४ ) यूराल अल्टाइक ( ५ ) चीनी वा एकाक्षरी ( ६ ) द्राविड ( ७ ) मलय-पॉलिनिसियन ( ८ ) वान्टू ( ९ ) वुसमेन ( १० ) सुडानी ( ११ ) आष्ट्रेलियन-पापुअन ( १२ ) रेड–इन्डियन ( १३ ) काकेसियन ( १४ ) जापानी ( १५ ) कोरियाली छन् । संसारभरका सबै बोली भाषाहरूको राम्रो अध्ययन हालसम्म भएको छैन, तर संसारभरका भाषा

परिवारहरू दुई सयभन्दा बढी छन् भन्ने अनुमान छ। संसारभरका भाषा र बोली-हरूको जम्मा संख्या २७९६ छ भन्ने मत पनि छ।

## भाषा खण्ड

( १ ) अफ्रिका खण्ड ( २ ) यूरेशिया खण्ड ( ३ ) प्रशान्त महासागर खण्ड ( ४ ) अमेरिका खण्ड।

### ( १ ) अफ्रिका खण्डमा पाँच प्रधान भाषा परिवार छन्

( क ) बुसमेन ( ख ) बन्टू ( ग ) सुडान ( घ ) हेमेटिक ( हामी ) र ( ङ ) सेमेटिक ( सामी ) (सामी भाषाको क्षेत्र एशियामा पनि पर्छ)।

### ( क ) बुसमेन

यस परिवारभित्र नामा खोरा इत्यादि होरेन्टोट भाषाहरू पर्दछन्।

( ख ) वन्टू परिवार—
- —पूर्वी वर्ग—काफिर, जुलु, किकांवा इत्यादि।
- —मध्यवर्ग—सेचुना, सेसुतो, तेकोजो इ०।
- —पश्चिमी वर्ग-हरेरो, वुन्दा, कांगो इ०।

( ग ) सुडान परिवार—
- —सेने भाषाहरू ( वोलोफ इ० )
- —ईव भाषाहरू ( ईव, आशानी इ० )
- —मध्यवर्ती भाषाहरू ( हौसा, सोघराई ई० )
- —निलोत्तरी भाषाहरू ( बारी, डेंका इ० )

( घ ) हेमेटिक परिवार—
- —मिश्री शाखा—प्राचीन मिश्री र काण्टिक इ०
- —एथीओपिक शाखा—वेदौय, खामीर, सोमाली, गल्ला, साहो, वेजा इत्यादि।
- —लिबियन शाखा-शिल्हा, लामाशेफ, नुमिदिअन इ०।
- - मिश्रित—मसाइ, नम, इत्यादि।
- - फुला।

( ङ ) सेमेटिक परिवारको भाषा मरक्को प्रदेशदेखि स्वेज नहरसम्मका प्रदेशहरूमा बोलिन्छन्। यी भाषा-शाखाको प्रधान क्षेत्र एशिया नै भएकोले यूरेशिया खण्डमा यसको विचार भएको छ।

### ( २ ) यूरेशिया खण्डको भाषा परिवार

- —(क) सेमेटिक
- —(ख) काकेशस
- —(ग) यूराल अल्टाइक
- —(घ) एकाक्षर
- —(ङ) द्राविड
- —(च) आग्नेय
- —(छ) अनिश्चित ( एत्रुस्कन, सुमेरी, कोरियाई, वास्क इत्यादि )
- —(ज) नेप-भारोपीय ( नेपालको उत्तरका क्षेत्रहरूका, मध्यम क्षेत्रहरूका र दक्षिण क्षेत्रहरूका सब बोली भाषाहरूसहित। )



( क )
सिमेटिक
परिवार
—उत्तरी
— कैनाअनिटिक
—हिब्रू
—समारितन
—फोनिशियन
असिरियो-आर्मेइक—
—असिरियन
—आर्मेइक
—दक्षिणी —
—जोक्तानिट्
—एबिसिनियन
—हिम्यारिटिक
—प्राचीन अरबी—साहित्यिक अरबी—
—अरब
—बार्बरी
—मरक्की
—मिश्र
वर्तमान,




( ख )
काकेशस
परिवार
—उत्तरी
—सिर कैसियन
—किस्तियन
—लोस्दीअन
—दक्षिणी
—जर्जियन
—सुआनियन
—मिग्रोलियन




( ग )
यूराल
अल्टाइक
परिवार
—फिनो-उग्रिन—
—फिनिक
—कुलगैरिक
—उग्रिक
—समोएडिक
—दुंगुज
—मंगोलियन
—शाश
—वरिअट
—कलमुक
—तातारिक
—याकूट
—किरचिज
—नोगो
—उदगुरिक
—तुर्की







* यो पुरानो चीनको भाषा बारे हो। नयाँमा अदली बदली र प्रगति छ।




( छ ) अनिश्चित भाषामा एत्रुस्कन, सुमेरियन, मितानी, कोसी, बन्नी, एलामाइट, कप्पदोसी, कोरियाई, जापानी, एनु र वास्क इत्यादि पर्दछन् । यिनीहरूलाई कुनै परिवारभित्र आजसम्म निश्चितरूपले राख्न सकिएको छैन । केही विद्वानले कल्पनाको आधारमा लेखेका छन् ।

( ज ) नेप-भारोपीय परिवार—( १ ) केन्टुम वर्ग ( २ ) सतम् वर्ग ।















(ङ) हिट्टाइट—विद्वान्हरूको यसमा मत निश्चय छैन ।

(च) तोखारी ।

(२) सतम् वर्ग—


सतम्—
—इलिरियन ( क )
—बाल्टिक ( ख )
—स्लेवोनिक ( ग )
—अर्मेनियन ( घ )
—आर्य ( ङ )


( क )
इलिरियन—
—इलिरियन—
—वेनेटियन
—लिर्वानियन
—एपिराट—
—अल्बेनियन
—मेस्सापीयन


( ख )
बाल्टिक —
– प्राचीन प्रशन
—लिथुयानियन
—लैटिट्श


( ग )
स्लेवोकिक–
—पूर्वी शाखा—
—महारूसी
—श्वेत रूसी
—लघु रूसी
—पश्चिमी शाखा—
—जेक—
—सर्बिअन
—बुहेमिअन
—स्लोवेकिअन
—लेकिश—
—पोलिस
—पोलाविश
—दक्षिणी शाखा—
—बल्गेरिअन
—इलेरिअन —
—सर्वोक्रोरिअन
—स्लोविनिअन


( घ )
आर्मेनिअन–
—फ्रीजिअन
—प्राचीन आर्मेनिअन


( ङ )
आर्य—
—इरानी ( अ ) ( आर्याणाम् = अइराण = ईरान )
—दरद ( आ )
—नेप-भारतीय ( इ )


( अ ) ईरानी –
—पूर्वी—
—पामीरी बोली
—आवेस्ता
—पश्चिमी—
—मीडिअन
—प्राचीन फारसी

- (आ) दरद
  - चित्राली इत्यादि
  - काफिर
    - शीना
    - काश्मीरी
    - कोहिस्तानी
- (इ) नेप-भारती
  - दरद
  - प्राचीन
  - मध्यकालीन
    - पैशाची प्राकृत
    - खेतानी प्राकृत
    - केकय प्राकृत
    - खस
      - नेपाली
      - गढवाली
    - पाली मागधी प्राकृत
    - शौरसेनी प्राकृत
    - अर्द्ध मागधी प्राकृत
    - मागधी प्राकृत
    - महाराष्ट्री प्राकृत
  - वर्तमान

( ३ ) प्रशान्त महासागरीय खण्ड

- (क) इण्डोनेशिया परिवार
- (ख) मलेनेशिया परिवार
- (ग) पालेनेशिया परिवार
- (घ) पापुआ परिवार
- (ङ) आष्ट्रेलिया परिवार

( ४ ) अमेरिका खण्ड

- उत्तरी अमेरिका
  - इन्यूट ( ग्रीनल्याण्ड र लेप्रोडरको)
  - अथवस्कन (क्यानाडा र यूनाइटेड स्टेट्स्)
  - अल्गोनकिन ( हडसन खाडीतिर यूनाइटेड स्टेट्स् )
  - मेक्सिकन ( नहु अल्ल, सोनोरा, शेशोन )
- मध्य वर्ग
  - क्यूबा इत्यादि
- दक्षिणी अमेरिका
  - गालिवी ( पनामा पूर्वपट्टि )
  - तेरुविन ( अपमारा इत्यादि )
  - अरौकनियन ( चिली इत्यादि )
  - तुपी गुअर्नी ( लापलसातिर )
  - तेराडेल फ्यूगोका भाषाहरू ।

भारोपीय भाषालाई, अस्कोलीले १८७० मा लेखेको ध्वनिको आधारमा, ब्रेडकेले सतम् र केन्तुम वर्गमा विभाजन गरेका छन् । सतम् र केन्तुम दुवै शब्दको माने सय ( १०० ) हो । सतम् शब्द संस्कृत, पारसी आदिमा प्रयोग भएको छ । केन्तुम ग्रीक ल्याटिन आदिमा प्रयोग भएको छ । ब्रेडकेले सय ( १०० ) जनाउने

शब्द 'स' बाट शुरू हुने भाषाहरूलाई 'सतम् वर्ग' र 'क' बाट सय ( १०० ) जनाउने शब्द शुरू हुने भाषाहरूलाई 'केन्तुम वर्ग' भनेका छन् । जस्तै :—

| सतम् वर्ग | केन्तुम वर्ग |
|---|---|
| १. संस्कृत—शतम् ( १०० ) | १. ल्याटिन—केन्तुम ( १०० ) |
| २. अवेस्ता—सतम् ( ,, ) | २. ग्रीक–हेक्टोन (कबाट ह भएको) (,,) |
| ३. फारसी—सद ( ,, ) | ३. फ्रेञ्च—केन्त ( ,, ) |
| ४. रुसी—स्तो ( ,, ) | ४. वृटिश—केन्ट ( ,, ) |
| ५. नेपाली—सय ( ,, ) | ५. इटालियन—केन्टो ( ,, ) |
| ६. हिन्दी—सौ ( ,, ) | ६. तोखारी—कन्ध ( ,, ) |

अस्कोलीको मतमा भारोपीय मूल भाषाको कंठस्थानीय ध्वनिहरू कहीं बदलिए र कहीं बदलिएनन् भन्ने छ ।

भारोपीय भाषा, संस्कृत भाषा र जेन्द आवेस्ताको भाषामा समानता :—

| भारोपीय | संस्कृत | आवेस्ता |
|---|---|---|
| याग | यज | यज |
| एपो | आपः | अप |
| ओस्थ | अस्थि | अस्ति |
| पते | पिता | पिता |
| स्थिस्थामि | तिष्ठामि | हिइतौती |
| जि उस्तर | ज्येष्ठ | जओशो |

संस्कृत भाषा र जेन्द आवेस्ताकको भाषामा समानता ( आदि )

| नेपाली | संस्कृत | जे आवेस्ता |
|---|---|---|
| पुत्र | पुत्र | पुथ्र |
| हप्ता ( सप्ताह ) | सप्त | हप्त |
| असी | असि | अहि |
| वशिष्ठ | वसिष्ठ | वहिश्त |
| असुर | असुर | अहुर |
| दिन्छु | ददामि | ददामि |
| अनि | अनु | अनु |
| अर्को ( अन्य ) | अन्य | अन्य |
| विश्व | विश्व | विस्प |
| शूर | शूरं | सूरं |

| | | |
|---|---|---|
| तरुनो | तरुणं | तडरुनम् |
| ( मानिस ) मर्ने | मर्त्यः | मश्यो |
| ऋतु | ऋतौ | रतुम् |
| ( वृक्ष ) रूख | बृक्षम् | वरेशेम् |
| भूमि | भूमि | बूमि |
| भाइ | भ्राता | व्राता |
| दीर्घ | दीर्घम् | दरंगम् |
| म | अहम् | अजेम् |
| ओज | ओजस् | ओजः |
| | शविष्ठम् | शविस्तम् |
| हिंदू | सिंधु | हिंदू |

( आदि ) ।

## संस्कृत, प्राकृत ( लौकिक भाषा ) र नेपालीमा समानता

| संस्कृत | प्राकृत | नेपाली |
|---|---|---|
| अद्य | अज्ज | आज |
| घट | घड | घडा |
| नाम | नांव | नाम । नाउँ |
| जगत् | जग | जगत् |
| होति | हो | हो |
| लग्न | लग्ग | लाग |
| रक्ष | रक्ख | राख |
| राजा | राआ, राय | राजा |
| तस्मिन् | तहि | त्यहीं |
| यस्मिन् | जहि | जहाँ |
| छाया | छाआ | छायाँ |
| गाव | गाइ | गाई |
| दधि | दहि | दहि ( दही ) |
| गृह | घर | घर |
| घृतम् | घिअं | घिउ |
| शृङ्गम् | सिङ्ग | सीङ |
| तृषा | तिसा | तिर्खा |
| द्धः | गिद्धो | गिद्ध ( गिद्द ) |

| | | |
|---|---|---|
| भ्रातृकः | भाइओ | भाइ |
| तृणम् | तणं | तृण |
| सिन्दूरः | सिन्दूरो | सिन्दूर |
| मूल्यम् | मोल्लं | मोल |
| गुच्छः | गोच्छो | गुच्छा |
| कीटकः | कीडओ | कीरा |
| कीलकः | कीलओ | कीला |
| चूडकः | चूडओ | चूरा |
| भवन | भवण | भवन |
| नवनीत | नवणीअ | नौनी |
| सपत्नी | सवत्ती | सौता |
| भ्रातृजाया | भाउजाआ | भाउजू |

## नेप–भारोपीय शब्दहरू

| संस्कृत | अंग्रेजी | जर्मनी |
|---|---|---|
| पितृ | parent ( प्यारेन्ट ) | peter ( पिटर ) |
| मातृ | mother ( मदर ) | meter ( मिटर ) |
| दुहित | Daughter ( डटर ) | Deter ( डिटर ) आदि । |

भारोपीय परिवार ( Indo–European ) का भाषाहरू भारत र यूरोप देशहरूमा प्रचलनमा छन् । तर अमेरिका आॅष्ट्रेलिया र अफ्रिका आदिका देशहरूमा पनि येही परिवारका भाषाहरू केही शताब्दीअगाडि मात्र घुसेर चलतीमा रहेका छन् । जस्तै :—अंग्रेजी, फ्रेंच, स्पेनिश र डच आदि । उक्त नयाँ क्षेत्रहरू फरक भए पनि भाषाको मूल घरको आधारमा अमेरिका, आॅष्ट्रेलिया र अफिकामा बोलिने भारोपीय भाषाहरूलाई भारोपीय परिवारभित्रै मान्ने र नामकरण गर्ने चलन छ । यसैले भारोपीय भाषाको अर्थ विस्तार भएको छ ।

## नेपाली भाषाको प्राचीन पुरुखौली

ऋग्वेद संहिताको धेरैजसो भाषालाई प्राचीन संस्कृत भन्नुपर्ने देखिन्छ । चार वेदका भाषा र ब्राह्मण ग्रन्थहरूका भाषालाई वैदिक साहित्य भन्ने चलन छ । सरल रोचक र छोटा-छोटा वाक्यहरूमा वेदका अर्थ खुलाउन लेखिएका गद्य ग्रन्थलाई ब्राह्मण ग्रंथ भन्दछन् । उपनिषदको भाषालाई पनि वैदिक भाषा भनिन्छ । वैदिक कालको निर्धारण गर्नमा अनेक मतहरू पाइन्छन् । आठ या पाँच हजार वर्ष ई० पू० केही

विद्वानहरू भन्छन् र कुनै ई. पू. ७०० वर्षअगाडि भन्छन् । नेपाली भाषामा वैदिक संस्कृत भाषाबाट सोझै आएका शब्दहरू पनि पाइन्छन् । जस्तै—चन्द्रमा, पुरुषा, वर्षा [ वरेखा, वरखा, ( शुक्ल यजुर्वेद ) ] आदि । उक्त शब्दहरू लौकिक संस्कृत, प्राकृत, अप्रभंश आदिका पिंढी हुँदै आएका होइनन् । सोझै वेदबाट आएका हुन् ।

इतिहास ग्रन्थ, रामायण, महाभारत आदि महाकाव्यहरूका 'संस्कृत भाषा' । पाणिनिले करीब ई. पू. ५ सय वर्षअगाडि नै अति संमार्जित ( संस्कृत ) साहित्यिक भाषाको प्रचलन गराए । कालिदासको विश्वप्रसिद्ध संस्कृत भाषा र ग्रन्थहरू । त्यही पाराका अरू आजतकका संस्कृत ग्रन्थहरूका भाषाहरू विदितै छन् ।

संस्कृत जस्तो संमार्जित भाषा बोलचालमा पूर्णरूपले सर्वत्र चलेको थियो भन्न ज्यादै कठिन पर्छ । भाषाको शाश्वत गतिसाथ यो चलन मिल्दैन । वैदिक संहिताको अवस्थामा या अरू कुनै साहित्य सिर्जनाको अवस्थामा नै बोलचालका अरू लौकिक भाषा हुनुपर्छ । वेद, रामायण महाभारतहरूमा पनि यस कुराका संकेत पाइन्छन् । कालिदासका नाटकहरूमा प्रयोग भएका प्राकृत, अपभ्रंशहरूले यो विषय स्पष्ट नै गर्दछन् । ई. पू. पाँचौं शताब्दोदेखि पाली भाषा चलेको देखिन्छ । बौद्ध ग्रन्थहरू पाली भाषाहरूमा लेखिन थाले । पाली ( पाल्ले ) शब्दको अर्थ गाउँले भन्ने हो । पाटलीपुत्र ( पटना ) मा बोलिने भाषा हुनाले यसलाई पाली भनिएको हो भन्ने मत पनि छ । अरू मत पनि छन् । बुद्धले मागधीमा उपदेशहरू दिए । पछि यी उपदेशहरू प्रचारका निमित्त पालीमा अनुवाद गरिए । बौद्धिक साहित्यले पालीलाई निकै उकास्यो ।

केही विद्वानको मतमा वाल्मीकीय रामायणको भाषा त्यस समयको लौकिक भाषा नै हो र त्यस समयको संस्कृत भाषा वेदका भाषाहरू मात्र हुन् भन्ने पनि छ । वेदहरूको भाषा ज्यादै कठिन हुँदै गएकोले रामायण सरल लौकिक भाषामा लेखिएको हो भन्ने मत पनि छ ।

प्राकृत भाषाहरू खास पहिलेका भाषाहरू हुन् र संस्कृतभन्दा पनि पहिलेका हुन् भन्ने मत पनि छ । ( पाक् + कृत ) यो मतले पालीलाई पनि यही प्राकृतभित्रै गणना गर्छ । पश्चिमी विद्वानहरू र पूर्वी आधुनिक विद्वानहरू धेरै यस मतका पक्षमा छन् । संस्कृत भाषालाई दैवी भाषा मान्नेहरू संस्कृत नै सर्वप्रथम भाषा हो र यसैबाट पाली प्राकृतहरू जन्मे भन्दछन् । ( प्रकृतिः संस्कृतं तत्र भवं तत आगतं वा प्राकृतम् ) प्राकृत भाषा संस्कृतकै समयको सहचरी र सगोत्री जनभाषा हो । पछि पछि साहित्यहरू यसमा पनि लेखिँदै गए । हेमचन्द्र, अश्वघोष आदिले यसमा साहित्यको विकास गरे । महाराष्ट्री, शौरसेनी, मागधी र पैशाची प्राकृत भाषाहरू प्रसिद्ध छन् । वररुचि र हेमचन्द्रका प्राकृत व्याकरणहरू प्रसिद्ध ग्रन्थ मानिन्छन् । प्राकृत भाषाका अरू रूपहरू पनि छन् । जस्तै—अर्धमागधी । जैन, महाराष्ट्री, जैन शौरसेनी, आर्ष, चूलिका-पैशाची शाकारी, ढक्की, शावरी, चांडाली, आभारी, अवन्ती, दक्षिणात्य, गौडो आदि ।

प्राकृत भाषामा र संस्कृत भाषामा विशेष विभिन्नता पाइन्छन् । प्राकृत भाषामा संस्कृत भाषाको भन्दा रूप रचना धेरै सरल भएर गएको छ । विभक्ति र लकार रूप-हरूका संख्या कम भएका छन् । संयुक्त व्यञ्जनहरूमा प्रायः समानादेश हुन्छ । जस्तै— रक्त=रक्त, भक्त=भत्त, खड्ग=खग्ग, सुप्त=सुत्त आदि । त्यस्तै ल्याटिन भाषाको 'फ्रुक्तुस' (Fructus) शब्द इटालियन भाषामा 'फ्रुत्तो' (Frutto) हुन्छ । 'सप्त' को 'सत्त' हुन्छ । त्यस्तै ल्याटिन भाषाको 'सेप्तेम' (Septem) इटालियनमा 'सेत्त' (Sette) हुन्छ । प्राचीन केही वर्णहरूको प्रयोग छैन । जस्तै—ऋ, ॠ, ऌ, ॡ, ऐ, औ, य, श, ष, र विसर्ग । मागधी प्राकृतमा 'य' को प्रयोग देखिन्छ र 'ज' को सट्टा पनि 'य' आदेश हुन्छ । 'श' मागधीमा मात्र देखिन्छ र स, ष को सट्टा 'श' प्रयोग हुन्छ । 'न' को सट्टा 'ण' प्रयोग हुन्छ । ट्, ठ् को स्थानमा ड्, ढ् हुन्छ । जस्तै—वट=बड, पठन= पढण । मागधीमा 'र' को 'ल' हुन्छ । जस्तै राजा=लाजा हुन्छ । तर अरू प्राकृतमा कहीं कहीं हुन्छ, जस्तै—दरिद्र=दलिद्द, ( महा० शौ० ) पालीमा पनि यस्तै किसिम-का विभिन्नता पाइन्छन् ।

**अपभ्रंश**—महाकवि कालिदासको समयभन्दा अगाडिको अपभ्रंशको विषयमा किटानीसाथ लेख्न मुश्किल छ । कालिदासको 'विक्रमोर्वशी' नाटकको चौथो अंकमा अपभ्रंशमा केही छन्द लेखिएका छन् । क्रमिक विकास हुँदै हुँदै १३ रौं र १४ धौं शताब्दीसम्म अपभ्रंश चलनमा रहेको देखिन्छ । डा० ज्याकोवोले अपभ्रंशका ४ भेद मानेका छन् । पूर्वी, पश्चिमी, उत्तरी, दक्षिणी । प्राकृत भाषा र आधुनिक नेपाली आदि भाषाको बीचको योजिका भाषा अपभ्रंश भाषा हो । अपभ्रंश अगाडि बढेर हालको नेपाली मैथिली आदि भाषा बने । स्थानीय अपभ्रंशहरू पनि धेरै बनेका देखिन्छन् । जस्तै—सिंहाली, केकय, दरद आदि ।

मूल अपभ्रंशहरूको वंशवृक्ष



बाह्रौं र तेह्रौं शताब्दीमा आधुनिक भाषाहरू प्रचलनमा अगाडि बढ्दै आए। १५ रौं शताब्दीसम्ममा आफ्नो स्थान कायम गरे।

खस अपभ्रंशबाट मूल भाषा नेपाली र अरू हिमाली भाषाहरू र बोलीहरू विकास भए। नेपाली भाषा चलनले साझा भाषा बनी प्रमुख भाषाको स्थान प्राप्त गरेकोमा अगाडि नै व्याख्या भएको छ। नेपालको हिमालको उत्तरी भेगका बोलीहरूमा तिब्बती आदि भाषाको प्रभाव पनि परेको छ।

संस्कृत भाषा, प्राकृत भाषा, अपभ्रंश भाषा र नेपाली भाषाका शब्दहरूमा समानताको एक झलक :—

| **संस्कृत** | **प्राकृत शब्द** | **अपभ्रंश शब्द** | **नेपाली शब्द** |
|---|---|---|---|
| आमलक | आमल अ | आवँलअ | अमला |
| पक्षी | पक्खी | पच्छी | पच्छी ( पंछी ) |
| पाद | पाऊ | पाअ | पाऊ ( पाउ ) |
| त्वया | तूअं | तुहं | तँ ( तैंले, तिमीले ) |
| मया | मई | मइ | म ( मैले ) |
| अशीति | असीइ | असिइ | असी |

बंगाली, आधुनिक नेपाली, नेवारी, मैथिली, हिन्दी आदि भाषाहरूले संस्कृत अथवा प्राचीन-प्राकृत, प्राकृत, अपभ्रंश र उप-अपभ्रंश आदि भाषाहरूका पिढी पार गर्दै आधुनिक रूप प्राप्त गरेका छन्। त्यसैले उक्त आधुनिक भाषाहरूमा ( १ ) अनेक अवस्थाका संस्कृत भाषाहरूको, ( २ ) अनेक प्राकृत भाषाहरूको र ( ३ ) अनेक अपभ्रंश भाषाहरूको प्रभाव निकै पाइन्छ। कुनै उक्त एक आधुनिक भाषालाई तानतुन गरेर कुनै उक्त तीन पिढीहरूका कुनै एक भाषाअन्तर्गतको क्रममा राख्न सकिन्छ। यसैको आधारमा आधुनिक नेपाली, नेवारी, मैथिली आदि भाषाहरूको उत्पत्ति र विकास आदिको व्याख्या र किटानी हुन्छ। ज्यादा धेरै सादृश्य भएको भाषालाई मूल उत्पत्ति ठहराउने चलन प्रायः चलेको छ। तर केही नाता साइनो र गोत्र आदिको संबन्ध दिदीं बैनी भाषाहरू सबै साथ रहिरहन्छ। घनिष्ठ र विस्तृत नातालाई पैलाएर र औंल्याएर मात्र खास उत्पत्ति फेला पार्नुपर्छ। सर्वत्र यही चलन छ। ज्ञान विज्ञान र युक्ति पनि यही भन्छ।

कुनै एक भाषा या बोलीमा अरू भाषा या बोलीका शब्द घुसी प्रचलनमा रहेको करीब करीब सबै भाषामा देखिन्छ। संस्कृत भाषाका केही शब्द हेब्रू भाषाको पहिलो बाइबिलमा घुसेका पाइन्छन्।

आर्य भाषाहरूका शब्दहरू र नेपालीका स्थानीय भाषा र बोलीहरूका शब्दहरू नेपाली भाषामा घुसी प्रचलनमा रहेका छन्। ती तलका तालिकाबाट स्पष्ट हुन्छन् :—




नेपाली स्थानीय भाषा या बोलीबाट—जस्तै, फरसी, चाक्सी, भौवाहाल, ट्याफी, राडो. पाखी, घ्याङ् इत्यादि ।

आर्य भाषाहरूबाट आएका शब्दहरूमा माथि ठाउँ ठाउँमा चर्चा भएको छ । अरू भाषाहरूबाट आएका शब्दहरू बारे पनि माथि अनेक स्थलहरूमा लेखिएकै छ ।

नेपाली भारोपेली आदि केही समान शब्दहरूको नमूना—

| नेपाली अर्थ | भारोपेला | संस्कृत | ल्याटिन | ग्रीक | फ्रेन्च | फारसी |
|---|---|---|---|---|---|---|
| ( बावु ) | प्याटर | पिता | पेटर | पातेर | पेअर | पिटर |
| ( आमा ) | माटर | माता | मेटर | मातेर | मेअर | मदर (अंग्रेजी) |
| ( छोरी ) | घुघतेर | दुहिता | — | थुगातेर | | डटर ( ,, ) |
| ( भाइ ) | भ्रातेर | भ्राता | फ्रेटर | प्रटर | फ्रअर | ब्रदर ( ,, ) |
| ( वायु ) | विण्टोस | वातः | — | वेन्टोस | — | |
| ( मह ) | मेधु | मधु | येधु | मेदुस | — | |
| ( तीन ) | त्रेयस | त्रयः | त्रिजू | ट्रिओ | — | |
| ( विधुवा ) | विधोवा | विधवा | विदुवा | — | — | |
| ( दाँत ) | द्न्तोस | दन्त | देन्तुस | — | — | |

## दोस्रो अध्याय

# भाषा विज्ञानको परंपरा

### पाश्चात्य विद्वानका मतहरू

भाषा विज्ञानको दृष्टिले हरेक मानिसको भाषा दोस्रो मानिसको भाषासंग भिन्न छ । भाषा विचारधाराको बाहिरिया प्रतिनिधि हो । विचारधारा अखण्ड भएकोले भाषा-धारा पनि अटूट नै रहन्छ । यिनै कारणले गर्दा भाषाको अध्ययनको परंपरामा एकत्व र अनेकत्व पाइन्छ । यो एकत्व र अनेकत्वमा मौलिक रूप पनि रहेको हुन्छ ।

भाषाको अध्ययन ज्यादै प्राचीन कालदेखि हुँदै आएको छ । हिन्दू, चीनी, अरबी, अमेरिकी र युरोपीय साहित्य जगतमा यसको प्रमाण प्रचुर मात्रामा पाइन्छ । यो ज्यादै विस्तृत भएकोले आवश्यक संक्षिप्त परिचय मात्र दिइन्छ ।

हिन्दूहरूको भाषा-विज्ञान बारेको ज्ञानको प्रशंसा विदेशी विद्वानले जोडसाथ गरेको पाइन्छ ।

सर विलियम जोन्सले संस्कृत भाषालाई यसरी प्रशंसा गरेका छन्—(**"The Sanskrit language whatever be its antiquities is of a wonderful structure, more perfect than the Greek, more copious than the Latin and more exquisitely refined than either,"**) यसको मतलब छ—संस्कृत भाषाको प्राचीनता जे भए पनि यसको संरचना ग्रीक भाषाको भन्दा बर्ता पूर्ण छ र ल्याटिन भाषामा भन्दा शब्द प्रकार धेरै छ । ग्रीक र ल्याटिनभन्दा बर्ता पूर्ण सुन्दरता साथै स्वच्छ छ ।

आधुनिक भाषा विज्ञानका जन्मदाता श्री ब्लूमफील्डले आफ्नो 'भाषा' (**Language**) नामको पुस्तकमा यसरी प्रशंसा गरेका छन्—**"This grammar (Panini Ashtadhyayi) which dates from some where round 250 to 350 B. c. is one of the greatest monuments of human intelligence.........No other language to this day has been so perfectly described."**

"ई० पू० ३५० देखि २५० सम्मको पाणिनिको अष्टाध्यायी मनुष्यको प्रतिभाको सबभन्दा महान स्मारक हो............। अरू भाषाको वर्णन आजसम्म त्यस्तै पूर्ण रूपले वयान गरिएको छैन ।"

अमेरिकाका हार्वर्ड विश्वविद्यालयका श्री जे० बो० क्यारोलले यसरी वर्णन गरेका छन्—

"Western scholars were for the first exposed to the descriptive methods of the Hindu grammarian Panini, influenced either directly or indirectly Panini began to produce descriptive and historical studies ..........."

पश्चिमी विद्वानहरू पहिले हिन्दू वैयाकरणी पाणिनिको वर्णनात्मक शैलीसाथ परिचित भए । पछि पाणिनीबाट प्रत्यक्ष अथवा अप्रत्यक्ष प्रभावित भएर भाषाको वर्णनात्मक र ऐतिहासिक ज्ञान-अध्ययन सिर्जना गरे..............।

प्राचीनतम भाषा विज्ञान-संबधी उल्लेख ऋग्वेदको अन्तिम मण्डलमा देखिन्छ। जस्तै "चत्वारि वाक् परिमिता पदानि" ( ऋग्वेद २.३.२२ ) र "मनसा वाचमक्रत" ( ऋ० वे० १०.७१.२ ) कृष्ण–यजुर्वेद-संहितामा देवताहरूले इन्द्रलाई वाक्यलाई टुक्रा पार्न प्रार्थना गरेको लेखिएको छ । यसबाट यो स्पष्ट देखिन्छ कि वेदको समयमा वाक्य, पद र भावमा चर्चा हुँदो रहेछ । ऋग्वेदको 'नासदीय सूक्त' मा भाषा विज्ञान संबन्धी चर्चा देखिन्छ । रुद्र, पृथ्वी आदि शब्दहरूका उपपत्ति आदिमा चर्चा पाइन्छ ।

ब्राह्मण ग्रंथको काल संहितापछि हो । यी ग्रन्थहरूमा वेदका शब्दको अर्थ संझाउने प्रयास भएको छ । यस समयको खण्ड गर्ने प्रयास पछिको व्याकरणको नियमसंग मिल्दैन । जस्तै अपापको अ + पाप । जे भए पनि विश्वका भाषा विज्ञानको इतिहासमा शब्दलाई खण्ड खण्ड गरेर अर्थ संझाउने, यो प्रथम प्रयास हो । यसमा ज्यादै साना साना वाक्यहरू छन् र सरल छन् । तर सबै ब्राह्मणको अर्थ आजसम्म लागेको छैन । समयले गर्दा शब्दको अर्थ बिर्सेर लाग्न नसकेको हो । यसमा प्रयोग भएको व्याकरणका नियम पनि बेग्लै किसिमका छन् ।

पद पाठमा वैदिक संहिताको पदको रूपमा गरेको देखिन्छ । यसमा सन्धि र समासको आधारमा वाक्यलाई शब्दमा अलग अलग गरेको छ । केही स्वराघातमा पनि विचार गरेको देखिन्छ । यसको कर्ता शाकल्य ऋषि हुन् ।

प्रातिशाख्यमा प्राचीन ध्वनि अध्ययन छ । समयले गर्दा वैदिक भाषा जन भाषाबाट धेरै फरक भयो । साधारण मानिसहरू वैदिक भाषा नबुझ्ने भए । तर वेदको जस्ताको तस्तै पाठ गर्नु आवश्यक थियो । वेदको पाठ स्वराघातको आधारमा गर्नु आवश्यक थियो । अरू किसिमबाट पाठ गरे ध्वनिसंबन्धी अशुद्धि उच्चारणमा हुन्थ्यो। यो अशुद्धिबाट बचाउन ध्वनि-सम्बन्धी विशिष्ट अध्ययनको आवश्यक भयो । वेदको ध्वनिको उच्चारणको परंपरा कायम राख्ने प्रयासमा वैज्ञानिक ध्वनि-अध्ययन ब्राह्मणहरूले सिर्जना गरे । यो ध्वनि-अध्ययन विश्वको प्राचीनतम वैज्ञानिक ध्वनि-अध्ययन

हो । वर्तमान समयमा खास प्राचीन प्रातिशाख्य पाइँदैनन् । प्राचीनतम प्रातिशाख्य को आधारमा लेखिएका श्री पाणिनिपछिका प्रातिशाख्य मात्र केही पाइन्छन् । यी प्रातिशाख्यमा स्वराघात मात्राकाल र उच्चारणकालसम्बन्धी नियमहरू पाइन्छन् । संस्कृत ध्वनिको वर्गीकरण गरेको पनि छ । यो वर्गीकरण आजसम्म पनि चल्दैछ ।

निघण्टु वैदिक कोष हो । वैदिक भाषा अपरिचित र अर्थ गुम भएकोले अर्थको दृष्टिबाट अध्ययनको आवश्यकता भयो । यो वैदिक शब्दको संग्रह ग्रन्थ अर्थात् वैदिक कोश हो । श्री म्याकडोनलको मतमा ५ निघण्टु छन् । उपलब्ध एक निघण्टुको पहिलो तीन अध्यायमा पर्यायक्रम दिएको छ । चौथो अध्यायमा ज्यादै क्लिष्ट शब्द छन् । पाँचौं अध्यायमा वैदिक देवताका नाम छन् । श्री यास्कको कार्य यही निघण्टुको आधारमा छ ।

यास्कको निरुक्तको समयमा मतभेद छ । पाणिनिभन्दा कमसे कम १०० वर्ष-पूर्व भन्ने मत छ । अर्थ विचारमा यो प्राचीनतम विवेचन हो । निघण्टुको हरेक शब्दको व्युत्पत्ति र अर्थमा विचार भएको छ । पदहरूलाई चार वर्गमा बाँडेको छ । व्यक्ति-वाचक संज्ञालाई समेत धातुबाट उत्पत्ति भएको हो भन्ने प्रमाण गरेको छ । (चत्वारि, पदजातानि ( निरुक्त १.१ ) यास्कले अस्पष्ट शब्दलाई अस्पष्ट भनेर स्वीकार गरेका छन् । कुनै विद्वानहरू निरुक्त पनि धेरै किसिमका थिए भन्छन् ।

## निरुक्तका खास खास कुराहरू

(अ) निघंटुको शब्दको अर्थ संझाउने प्रयास भएको छ । वैदिक संहितामा प्रयोग भएका शब्दहरूका स्पष्टता र अर्थ संझाउनाका निमित्त निरुक्तमा व्याख्या दिइएका छन् ।

(आ) अनेक व्याकरण सम्प्रदायहरूका नाम दिइएका छन् । जस्तै आग्रायण, औदुम्बरायण, शाकटायन इत्यादि ।

(इ) भाषाको उत्पत्ति, गठन र विकासमा पनि विचार भएको छ । इत्यादि ।

(ई) शब्दको विचार गर्दा आधुनिक भाषा विज्ञानको जस्तो समाज र इतिहास-मा पनि प्रकाश पारेको देखिन्छ ।

(उ) शब्दको अर्थलाई सिद्ध र स्थिर र यो कुनै व्यक्तिको इच्छामा आधारित नहुने मानेको छ । भन्ने र सुन्नेमा एकै भाव ज्ञापन गर्नाका कारणहरू पनि यिनै मानिएका छन् ।

अरू व्याकरण संप्रदाय पनि देखिन्छन् । श्री यास्क र पाणिनिको बीच समयमा भाषाको अध्ययन धेरै नै मात्रामा भएको बुझिन्छ । पाणिनिको समयमा प्रत्यय, अव्ययी-भाव, बहुव्रीहि, तद्धित इत्यादि शब्दहरू पारिभाषिक भए पनि साधारण किसिमबाट प्रयोग भएका छन् । यी शब्दहरूका अर्थहरू संझाउने जरूरत नभएको बुझिन्छ । यसैले

यो कुरा सिद्ध हुन्छ कि पाणिनिभन्दा अगाडि धेरै व्याकरण संप्रदायका चलनहरू रहेछन् । पाणिनिभन्दा अगाडि जनक, आपिशलि र काश-कृत्स्न थिए भन्ने कुनैको मत छ । कुनै विद्वान् यिनीहरूलाई ऐन्द्र सम्प्रदायका मान्छन् ।

इन्द्र नाम भएका कुनै ऋषिले यो ऐन्द्र सम्प्रदाय सिर्जना गरेका हुन् भन्ने मत छ । तैत्तिरीय संहितामा यिनी इन्द्र ऋषिलाई नै प्रथम वैयाकरण भनेर उल्लेख गरेको छ । यो सम्प्रदाय पाणिनिभन्दा अगाडिको र ज्यादै प्राचीन हो भन्ने मत पनि छ । प्राचीन भए पनि यो सम्प्रदायमा पाणिनिको समयसम्म कोही ठूलो प्रसिद्ध विद्वान भएको देखिदैन । पाणिनिपछि कात्यायन यही सम्प्रदायका थिए । यो सम्प्रदायको प्रभाव र प्रचार ज्यादा दक्षिण भारततर्फ छ ।

विश्वका सबभन्दा ठूला वैयाकरण पाणिनिलाई भन्न सकिन्छ । यिनको निवासस्थान लाहोरको समीप शालातुर हो भन्ने कुनै विद्वानको मत छ । महाभाष्यमा श्री पतञ्जलिले यिनीलाई 'दाक्षीपुत्र' भनेका छन् । यसैले यिनको आमाको नाम दाक्षी रहेछ भन्ने बुझिन्छ । पञ्चतन्त्रको प्रमाणमा विश्वास गरेमा यिनको मृत्यु सिंहबाट भएको थियो भन्न सकिन्छ । यिनको निवासस्थान नेपाल हो भन्ने मत पनि छ ।

पाणिनिको समयको बारेमा मतभेद छ । म्याक्समूलर र वेबर विद्वानहरू यिनीलाई ३५० ई० पू० पछिका भन्ने विचार गर्दछन् । यो समय पाणिनिले प्रयोग गरेका यवन शब्दको आधारमा भएको छ । यवन शब्द भारतमा सिकन्दरले आक्रमण गरेपछि मात्र थाहा भएको हो भन्ने उक्त विद्वानहरूको मत छ । श्री भंडारकर र गोल्डस्कर पाणिनिलाई ५०० ई० पू० भन्दा पनि अगाडिका हुन् भन्छन् । सत्यव्रत आदि विद्वान पाणिनिलाई २४०० ई० पू० का हुन् भन्छन् । डा० वेलवेकरले सबै मतका आधार परीक्षा गरेर पाणिनिको समय ७०० ई० पू० को आसपासमा छ भन्ने अटोट गरेका छन् ।

पाणिनिको मुख्य ग्रन्थ अष्टाध्यायी हो । यसमा आठ अध्याय छन् । हरेक अध्यायमा चार पद छन् र प्रतिपादमा अनेक सूत्र छन् । सबै सूत्रहरूको संख्या करीब चार हजार छ । पूरै पुस्तक १४ सूत्रमा आधारित छ । यी सूत्रलाई माहेश्वर सूत्र पनि भन्दछन् । सारा संस्कृत भाषालाई १४ सूत्रभित्रै बाँध्न सक्नु पाणिनिको विशेष र आश्चर्यजनक खूबी हो : आजसम्म पनि यिनै नियमहरू नै संस्कृत भाषामा चलनमा रहिरहेका छन् । पछिका वैयाकरणहरू पाणिनिको अगाडि टिक्न सकेनन् ।

भाषामा वाक्य नै प्रधान हो र भाषाको आरम्भ वाक्यबाटै भएको हो भन्ने उल्लेख अष्टाध्यायीमा छ । सबै शब्दलाई एकाक्षर धातुमा आधारित गरेको छ र उपसर्ग र प्रत्यय आदिको सहायताले अनेक शब्द बनाउन सकिन्छ । पाणिनिले शब्दलाई सुवन्त, तिङन्त र अव्ययमा विभक्त गरेका छन् । ध्वनिको वर्गीकरण, यसमा

ठूलो महत्वको छ। लौकिक र वैदिक संस्कृतको तुलनात्मक अध्ययनको विशेषता पनि छ।

पाणिनिका अरू तीन ग्रन्थहरू छन्—( १ ) धातु पाठ ( २ ) गण पाठ र ( ३ ) उणादि सूत्र। धातु पाठमा धातुहरूको सूची छ। धातु सबैलाई दश गणमा विभाजित गरेको छ। गण पाठमा एक गणमा परेका धातुको रूप एक प्रकारबाट चलेको बारेमा छ। उणादि सूत्रलाई कोही विद्वान शाकटायनको रचना हो पनि भन्दछन्।

पाणिनि पछि केवल अष्टाध्यायीको आलोचना, प्रत्यालोचना र त्यसैको चर्चा-मात्र लेखियो भने हुन्छ। स्वतन्त्र व्याकरण अष्टाध्यायीको अगाडि अड्न सकेन। आज २५०० वर्षपछि पनि अष्टाध्यायी नै चलिरहनु एक अत्यन्तै आश्चर्यको कुरा हो। अमेरिकी, बेलायती र युरोपीय विद्वानहरूले यिनलाई सर्वप्रथम र उच्च कोटिका भाषा वैज्ञानिक हुन् भनेर लेखेका छन्। यिनको भाषा विज्ञानको प्रभाव पश्चिमतर्फमा पनि धेरै परेको छ भन्ने उनीहरूको मत छ।

कात्यायनको वार्तिक, पाणिनिभन्दा अगाडि राख्ने विद्वानहरू पनि छन्। तर कात्यायन पाणिनिभन्दा २।३ सय वर्षपछाडिका हुन्। पाणिनिका सूत्रहरू समयले गर्दा प्रतिकूल भएकाले कात्यायनले वार्तिक लेखेका हुन्। पाणिनिका ४००० सूत्रबाट कात्यायनले १५०० सूत्र लिएका छन्। केही सूत्रमा दोष देखाएर परिवर्तन पनि गरेका छन्। पतञ्जलि कात्यायनले नै भूल गरेर दोष देखेका हुन् भन्छन्।

वार्तिकको कुनै अंश गद्यमा र कुनै अंश पद्यमा छ। पाणिनिका पारिभाषिक शब्दहरूमा पनि केही परिवर्तन गरेका छन्। सब मिलाएर वार्तिकमा ४००० वार्तिक छन्।

भाषाको परिवर्तन र अष्टाध्यायीको कुनै पक्षको अध्ययन सरल पार्नाका निमित्त वार्तिक लेखिएको हो।

पतंजलिको महाभाष्य समय १५० ई० पू०को भन्ने मत डा० भंडारकरको छ। महाभाष्य पनि २ अध्यायमा विभक्त छ। प्रत्येक अध्यायमा ४ पाद छन्। महा-भाष्यमा कात्यायनले वार्तिकमा गरेको पाणिनिको आलोचनाको खण्डन गरेको छ र पाणिनिका सूत्रमा समयले चाहिएका सुधारहरू पनि दिइएका छन्। पतंजलि यी दुवै कार्यमा सफलै भएका देखिन्छन्। पतंजलिले आफ्नो नियमलाई इष्टि भन्ने नाम दिएका छन्।

महाभाष्यमा भाषाको दार्शनिक विवेचना ज्यादै सुन्दर छ। ध्वनि, अर्थको सम्बन्ध र वाक्यको विभिन्न भागको वैज्ञानिक चर्चा भएको छ।

पाणिनि, कात्यायन र पतंजलि यी तीनलाई संस्कृत व्याकरणमा उच्चतम स्थान प्राप्त गरेकाले "मुनित्रय" पनि भन्दछन्। यी तीन मुनि नै पाणिनि शाखाका प्रधान गुरुहरू हुन्। तीनै जनामा पर्याप्त मौलिकता देखिन्छ। यी तीनपछि हुने अरूले यसमा टीका या केही नवीन क्रम मात्र दिएको देखिन्छ।

जस्तोसुकै कडा व्याकरणका नियमहरू भए पनि भाषामा परिवर्तन आउनु स्वाभाविक हो। नियमले स्वाभाविक परिवर्तन रोक्न सक्तैन। यही परिवर्तनबाट उठेको आवश्यकता पूर्तिका निमित्त टीकाहरू लेखिए।

जयादित्य र वामनले सातौं शताब्दीको पूर्वार्द्धमा लेखेको टीका 'काशिका' ज्यादै प्रसिद्ध भयो। यसमा पनि अष्टाध्यायीमा जस्तै आठ अध्याय छन्। पाँच अध्याय जयादित्यले र बाँकी तीन वामनले लेखेका हुन्। काशिकामा पाणिनिका सूत्र-हरूलाई ज्यादै सरल गरी संझाइएको छ र उदाहरण पनि धेरै दिइएको छ।

आठौं शताब्दीको पूर्वार्द्धमा जिनेन्द्रले उपर्युक्त काशिकामा टीका लेखे। यस टीकालाई काशिकान्यास या काशिका विवरण-पञ्जिका भन्दछन्। यो पनि समयको परिवर्तनको ख्याल गरेर लेखिएको छ। यिनी बौद्ध थिए।

भर्तृहरि भन्ने एक वैयाकरण थिए। यिनी श्रृंगार, नीति र वैराग्य शतकका लेखक नै हुन् या अर्का कुनै हुन्? यो निश्चय भएको छैन। भर्तृहरिले महाभाष्यको टीका लेखेका थिए। यसमा केवल तीन पाद छन्। शायद यिनको मृत्यु भएकोले यो ग्रन्थ बीचैमा रहेको हुन सक्तछ। यिनको अर्को प्रसिद्ध पुस्तक वाक्य-प्रदीप छ। यसमा व्याकरणको दर्शन पक्षको राम्रो विवेचना छ। यो पुस्तकमा तीन खण्ड छन्। दोस्रो खण्डको अन्त्यमा वैयाकरणका सम्बन्धमा केही ऐतिहासिक कुराहरू पनि छन्। यिनको समय सातौं शताब्दी हो।

कय्यटले ११ रौं शताब्दीमा महाभाष्य प्रदीप लेखे। यिनले भर्तृहरिको वाक्य-प्रदीपलाई नै पथ-प्रदर्शक मानेका छन्। प्रदीपको तात्विक पक्ष विशेष महत्वको छ।

कय्यटको प्रदीपको टीकाकारमा नागोजी भट्ट, नारायण र ईश्वरानन्द प्रधान छन्। नागोजी भट्टको प्रदीपोद्योत ज्यादै सुन्दर र गम्भीर छ। यी तीनै टीकाकार १६ रौं शताब्दीका हुन्।

हरदत्तले पदमंजरी भन्ने टीका काशिकामा लेखेका छन्। यिनी १२ रौं शताब्दीका र दक्षिणी हुन्।

समयले गर्दा उक्त टीकाहरूमा फेरि आवश्यक परिवर्तनको जरूरत पर्‍यो र व्याकरणमा अनेक रूपका ग्रन्थ लेखिएकाले ज्यादै जटिल जस्तो भयो। त्यसैले फेरि सुबोध गर्नाका निमित्त नयाँ क्रम बनाउनुपर्‍यो। यिनै कारणहरूले कौमुदीहरू लेखिए। १४ औं शताब्दीमा विमलले रूपमाला लेखे।

रामचन्द्रको समय पन्ध्रौं शताब्दी हो । यिनी दक्षिणी ब्राह्मण थिए । यिनको ग्रन्थको नाम प्रक्रिया कौमुदी हो । १६ ह्रौं शताब्दीमा यही पुस्तकमा घेरै टीकाहरू लेखिए । विट्ठलाचार्यको 'प्रसाद' टीका ज्यादै प्रसिद्ध छ ।

भट्टोजी दीक्षितको समय १७ औं शताब्दीको शुरू हो । भट्टोजीको 'सिद्धान्त कौमुदी' अत्यन्तै प्रसिद्ध भयो । यस पुस्तकको अगाडि पाणिनिको अष्टाध्यायीको नाम पनि मानिसले बिर्सन लागे । आजकल यही पुस्तकको ज्यादा चलन छ । यिनको आफ्नो पुस्तकमा आफैंले 'प्रौढ मनोरमा' भन्ने टीका लेखे । प्रौढ मनोरमाको संक्षिप्त रूपमा बाल मनोरमा पनि बनाए ।

भट्टोजीको प्रौढ मनोरमामा जगन्नाथ र नागेश इत्यादिले टीका लेखे ।

वरदराजको समय १८ रौं शताब्दी हो । वरदराजले सिद्धान्त कौमुदीको मध्य, लघु र सार तीन संक्षिप्त संस्करण तयार गरे । यी पुस्तकहरू विद्यार्थीवर्गमा प्रिय छन् । यी ग्रन्थहरूमा पनि टीका लेखिएका छन् । टीकाकारमा राम शर्मा र जयकृष्ण प्रसिद्ध छन् ।

चन्द्र शाखाको प्रथम उल्लेख भर्तृहरिको वाक्य प्रदीपमा र मेघदूतको मल्लि-नाथको टीकामा पाइन्छ । यस शाखाको प्रसिद्ध वैयाकरण चन्द्र गोमिन हुन् । यिनको समय लगभग ५ चौं शताब्दी भन्न सकिन्छ । यिनले पाणिनिको माहेश्वर सूत्रलाई घटाएर १३ गरिदिए । सूत्रहरूलाई घटाएर ३१०० मात्र राखे । चन्द्रगोमिनको मौलिक र प्रधान देन ३५ सूत्रहरू छन् । यिनको व्याकरणमा ६ अध्याय मात्र छन् । चन्द्र-गोमिनले उणादि सूत्र, धातु पाठ, गण पाठ इत्यादि पनि लेखेका छन् । यस शाखाको प्रचार लंका र तिब्बतमा विशेष भएको देखिन्छ । चन्द्रगोमिन बौद्ध थिए ।

१३ रौं शताब्दीमा एक 'बालख बोध' लङ्काका एक पण्डित ( बौद्ध ) काश्यपले लेखेका छन् । यो पुस्तक चन्द्रगोमिनको एक छोटकरी संस्करण हो ।

जैनेन्द्र शाखा जैनहरूको थियो । यसको प्रथम वैयाकरण अन्तिम तीर्थंकर महावीर हुन् भन्ने मत छ । चान्द्र शाखा र जैनेन्द्र शाखा करीब-करीब एकै समयमा शुरू भएको देखिन्छ । जैनेन्द्र व्याकरणको दुई संस्करण हामी पाउँछौं । सानो संस्करणमा ३००० सूत्रहरू छन् र ठूलोमा ३७०० छन् । यसका कर्ता देवनन्दी या पूज्यपाद हुन् ।

आठौं शताब्दीका अभयनन्दीको र सोमदेवको यसमा दुई टीका प्राप्त छन्, अरू ज्यादा यसमा जानकारी लभ्य छैन ।

शाकटायन पनि जैनी शाखा हो । यसका प्रधान वैयाकरण शाकटायन आठौं शताब्दीका हुन् । दयापाल दसौं शताब्दीका र प्रभाचन्द्र र अभयचन्द्र १४ घौं शता-

ब्दीका थिए । यस शाखाको प्रधान ग्रन्थ शाकटायन शब्दानुशासन हो । पाणिनि, चन्द्रगोमिन र पूज्यपादको प्रभाव यस ग्रन्थमा ज्यादै देखिन्छ । यसमा जम्मा ३२०० सूत्र छन् ।

शाकटायनले पाणिनिकै आधारमा धातुपाठ गणपाठ आदि अरू ग्रन्थ पनि लेखेका छन् ।

यस शाखामा पनि टीकाकार र कौमुदीकारहरू छन्। टीकामा 'न्यास' र 'चिन्तामणि प्रसिद्ध छन् । कौमुदोमा प्रक्रिया-संग्रह मुख्य मानिन्छ ।

हेमचन्द्र शाखाको प्रभावले यस शाखालाई दबाएको देखिन्छ ।

हेमचन्द्र शाखा धेरै नै प्रसिद्ध छ । पाणिनिको शाखापछि यही शाखाको नाम आउँछ । यसका सूत्रकर्ता हेमचन्द्र जैन साधु थिए । यिनको समय १०८८ ई० देखि ११७२ ई० हो । यिनको प्रसिद्ध पुस्तक शब्दानुशासन हो । यस पुस्तकको पूरा नाम सिद्ध हेमचन्द्राभिधस्वोपज्ञ शब्दानुशासन हो । यसमा आठ अध्याय र ३२ पाद छन् । ४५०० सूत्रहरू छन् । यसको अन्तिम अध्यायमा करीब ११०० सूत्रहरू छन् र यी सूत्रहरूमा जनभाषा ( प्राकृतहरू ) का वर्णन छन् ।

हेमचन्द्रले आफ्नो शब्दानुशासनमा शब्दानुशासन बृहद्वृत्ति भन्ने टीका पनि लेखेका छन् । यो टीकाको विवेचना महत्वपूर्ण छ । पाणिनिको जस्तै यिनले धातुपाठ उणादि सूत्र र गणपाठ आदि पनि लेखेका छन् । हेमचन्द्रको पुस्तकमा अरूले पनि टीका लेखेका छन् । 'बृहद्वृत्ति ढुण्ढिका' प्रसिद्ध छ तर यसको लेखकको राम्रो पत्ता छैन र पुस्तकको सबै अंश पनि प्राप्त छैन । अर्को टीका देवेन्द्रसूरीको 'हैमल घुन्यास' छ । 'हेमलघु प्रक्रिया' इत्यादि पनि यसमा पछि लेखिएका छन् । १५ औं शताब्दीपछि यो शाखामा केही थप हुन सकेन ।

कातन्त्र शाखालाई केही विद्वान ऐन्द्र सम्प्रदाय नै हो भन्दछन् । यो स्वतन्त्र शाखा देखिँदैन र पाणिनिको आधारमा बनेको देखिन्छ । यो सर्वसाधारण मानिसहरूको निमित्त बनेको हो । यसमा १४०० सूत्रहरू छन् । यो दोस्रो शताब्दीमा आरम्भ भएको देखिन्छ र ७ तौं शताब्दीदेखि काश्मीरमा यसको प्रचार भएको देखिन्छ ।

सारस्वत शाखाको आरम्भ १३ रौं शताब्दीमा भएको हो । यसको मूल ज्यादै सरल र संक्षेपमा लेखिएको छ । पाणिनिको ४००० सूत्रको सट्टा यसमा खालि ७०० सूत्र मात्र छन् । गयासुद्दीन खिलजी र सलेमशाह मुसलमान शासकले यसका लेखकलाई प्रोत्साहन दिएका थिए । संक्षेप र सरलता यसका विशेष कुरा हुन् । प्रत्याहार र माहेश्वर सूत्र पनि नयाँ किसिमसाथ लेखिएका छन् ।

अनुभूतिस्वरूप, अमृत भारती, क्षेमेन्द्र, हर्षकीर्ति र मंडन आदि यसका टीकाकार थिए । खुद ग्रन्थकर्ताको बारेमा आजसम्म यकिन पत्ता लागेको छैन ।

यो शाखा १८ रौं शताब्दीसम्म चल्यो। पाणिनिको व्याकरणले गर्दा यसको लोप भयो। विल्किन अंग्रेजले यस शाखाको आधारमा एक व्याकरण लेखेका छन्। सरलताले गर्दा यो शाखा ज्यादै उपयोगी देखिन्छ।

बरार बस्ने वोपदेवले वोपदेव शाखा शुरू गरेका हुन्। यिनी १३ रौं शताब्दीका ठूला विद्वान थिए र यिनले धेरै विषयमा पुस्तकहरू लेखेका छन्। मुग्धबोध भन्ने भाषा सम्बन्धी पुस्तक निकै प्रसिद्ध छ। यस पुस्तकको ध्येय पनि सरलता र संक्षेप देखिन्छ। यिनको शैली कातन्त्रसाथ मेल खान्छ। माहेश्वर सूत्र र प्रत्याहार पाणिनिको भन्दा फरक छ। यिनको पारिभाषिक शब्दमा विशेषता छ। जस्तै पाणिनिको धातु शब्दको सट्टा यिनले 'धू' शब्दको र वृद्धिका निमित्त 'वृ' प्रयोग गरेका छन्।

(क) जुमरनन्दीको जोमेर शाखा १२०० देखि १४०० शताब्दीमा चलेको बुझिन्छ।

(ख) पद्मनाभदत्तको सौपद्रुभ शाखा १३०० देखि १५५० शताब्दीमा चलेको देखिन्छ।

(ग) हरिनामामृतको, हरिनामामृत शाखा १६ रौं शताब्दीमा चलेको थियो। पाली व्याकरणको रचना भारतवर्ष, बर्मा र लङ्कामा भएको देखिन्छ। यसका तीन शाखा छन्–(क) कच्चायन (ख) मोग्गलान र (ग) अग्गवस। यी तीनै शाखामा संस्कृत व्याकरणका प्रभाव देखिन्छन्। विषय दृष्टिबाट पनि यी पूर्ण छैनन्। यी विषयमा अलग-अलग विचार तल भएको छ।

कच्चायन (कात्यायन) र अर्का संस्कृत वैयाकरण कात्यायनमा फरक छ। यिनको खास कृति कच्चायन व्याकरण हो। यिनका अरू दुई कृतिको राम्रो पत्ता छैन। यिनको समय आठौं वा नवौं शताब्दी हो।

कच्चायन व्याकरणमा धेरै टीकाहरू लेखिए। तर सबै भन्दा प्रसिद्ध विमल बुद्धिको 'न्यास' भन्ने टीका छ। न्यासमा पनि फेरि टीकाहरू लेखिएका छन्।

छपदको सुत्तनिद्देस र संघरखितको 'सम्बन्ध-चिन्ता' आदि पुस्तक पनि यसै शाखाका हुन्।

मोग्गल्लानको प्रधान पुस्तक 'मोग्गलायन-व्याकरण' हो। यो व्याकरणमा यिनले आफैंले 'मोग्गलायन-पंचिका' नामको टीका पनि लेखेका छन्। कच्चायनको व्याकरणभन्दा यो व्याकरण धेरै नै असल छ। वर्गीकरण र पारिभाषिक शब्द कच्चायन साथ मिल्दैन। यिनमा खास गरेर पाणिनि चन्द्रगोमिनको प्रभाव धेरै देखिन्छ। यिनको समय १२ रौं शताब्दी हो।

यस शाखामा पनि धेरै टीकाहरू लेखिएका छन्। पियदस्सिनको 'पदसाधना' र राहुलको 'मोग्गलायन पंचिका प्रदीप' महत्वका छन्।

अग्गवंसको कृति सिद्धनीति हो । यी बर्मा निवासी थिए । यस शाखाको प्रचार लङ्का र बर्मामा भएको देखिन्छ । यसमा कच्चायनको प्रभाव धेरै भएकोले केही विद्वान यसलाई स्वतन्त्र शाखा मान्दैनन् । यिनको समय १२ रौं शताब्दी हो ।

संस्कृत नाटकहरूमा प्राकृतको अंश निकै भएकोले व्याकरण लेख्ने जरूरत परेको देखिन्छ । चल्ती प्राकृतसाथ यी व्याकरणहरूको संबन्ध थिएन । यी व्याकरणहरू संस्कृत व्याकरणमा आधारित छन् । प्राकृत वैयाकरणका दुई शाखा छन् ।

प्रतीच्य शाखाका नियम वाल्मीकिले रचेका हुन् ; यसैले यस शाखालाई वाल्मीकि शाखा पनि भन्दछन् । यसको एक प्रसिद्ध त्रिविक्रमले लेखेको प्राकृत-व्याकरण टीका पनि छ । यो टीका १३ रौं शताब्दीको हो । अर्को शब्द-भाषा-चंद्रिका भन्ने लक्ष्मीधरले लेखेका छन् । यिनको समय १६ रौं शताब्दी हो ।

यस शाखाको सबभन्दा प्रसिद्ध ग्रन्थ हेमचन्द्राभिधस्वोपज्ञ-शब्दानुशासन हो । यस पुस्तकको सात अध्यायमा संस्कृत व्याकरण छ । आठौं अध्याय धेरै ठूलो छ र यसमा महाराष्ट्री, शौरसेनी, मागधी, पैशाची र चूलिका पैशाची इत्यादि बारे छन् ।

प्राच्य शाखाका प्रसिद्ध वैयाकरण वररुचि हुन् । त्यसैले यस शाखालाई वररुचि शाखा पनि भन्दछन् ।

वररुचिको समय पाँचौं शताब्दी हो । प्राकृत भाषाको सबभन्दा पुरानो व्याकरण 'प्राकृत प्रकाश' हो । यसमा पहिलो नौ अध्यायमा संस्कृत व्याकरणको आधारमा महाराष्ट्री प्राकृतको लम्बे वर्णन छ । १० सौं ११ रौं र १२ रौं अध्यायमा क्रमैले पैशाची, मागधी र शौरसेनीका वर्णन छन् ।

७ तौं शताब्दीका कात्यायनले प्राकृत-प्रकाशमा प्राकृत-मंजरी भन्ने टीका लेखेका छन् ।

यस शाखामा लंकेश्वरको प्राकृत-कामधेनु, वसंत-राजको 'प्राकृत संजीवनी' र मार्कण्डेयको प्राकृत-सर्वस्व ग्रन्थ पनि छन् ।

अपभ्रंशका पहिला जैन वैयाकरणी चण्ड नामका थिए । तर उनको २ । ३ सूत्र मात्र पाइन्छन् । अरू अपभ्रंशमा स्वतन्त्ररूपले लेखिएको प्राचीन पुस्तकको आजसम्म पत्ता छैन । हेमचन्द्रको प्राकृत व्याकरणको अन्तमा १२० सूत्रमा अपभ्रंशको व्याकरण लेखिएको छ । हेमचन्द्रले चौथो अध्यायका केही सूत्रमा धात्वादेश लेखेका छन् । यसमा प्रायः अपभ्रंशका धातु पाइन्छन् । यिनले देशीनाममाला नामक एक कोश पनि लेखेका छन् । यसबाट अपभ्रंशमा भएका शब्द भण्डारको ज्ञान हुन्छ । त्रिविक्रमले ११७ सूत्रहरूको अपभ्रंश व्याकरण लेखेका छन् । लक्ष्मीधर र सिंहराजले उक्त सूत्रमा व्याख्या लेखेका छन् । मार्कण्डेयले पनि अपभ्रंशको तीन भेदमा प्राकृत-सर्वस्वमा लेखेका छन् । त्रिविक्रम १४ यौं र मार्कण्डेय १५ रौं शताब्दीका हुन् ।

वैयाकरण बाहेक अरू नैयायिक र साहित्यिकहरूले पनि भाषातर्फ प्रकाश दिएका छन्। जगदीश तर्कालंकारले आफ्नो 'शब्द-शक्ति प्रकाशिकामा अर्थ विचारमा ध्यान दिएका छन्। ध्वन्यालोक, साहित्यिक दर्पण, काव्यप्रकाश, चन्द्रालोक आदिमा भाषाको अर्थ पक्षको सुन्दर विवेचना छ।

जोन बीम्सको ग्रन्थ 'भारतीय आर्यभाषाहरूको तुलनात्मक व्याकरण' हो। यसको तीन भाग १८७२, १८७५ र १८७९ मा प्रकाश भएका छन्। यस किताबको पहिलो भागको शुरूको ठूलो भूमिका ज्यादै महत्वको छ। यही भागमा ध्वनिको विवेचना छ। उदाहरण ज्यादै भएकोले यो भाग निकै रुचिकर छ। दोस्रो भागमा क्रिया बारे छ। यस ठूलो ग्रन्थमा आर्य-हिन्दू पारिवारका केही प्रमुख भाषाको तुलनात्मक ढंगको व्याकरणको ऐतिहासिक अनुशीलन छ।

एस० एच० केलगको हिन्दी भाषाको व्याकरण १८७६ मा छापिएको थियो। यो व्याकरणमा ज्यादा हिन्दी बारे छ र ब्रज, अवधी, राजस्थानी र बिहारी आदिको तुलनात्मक सामग्री पनि दिएको छ।

डा० सर रामकृष्ण गोपाल भंडारकरले भाषा विज्ञानमा स्पष्ट रूपले चल्ने प्रथम भारतीय यिनै हुन्। १८७७ मा बम्बई विश्वविद्यालयमा भाषा-विज्ञानमा पहिले यिनले सात व्याख्यान दिए। यही व्याख्यानपछि १९१४ मा पुस्तकरूपमा "Wilson's Philological Lectures" (विल्सनको भाषा विज्ञान प्रवचन) छापियो। भंडारकरले प्राचीन हिन्दू भाषाको विज्ञानसाथसाथै नयाँ युरोपीय भाषा विज्ञानको पनि राम्रो अध्ययन गरेका थिए। यसै कारणले यो ग्रन्थ ज्यादै महत्वको छ। भाषाको विकासको सादा नियम शुरूमा दिएका छन् र संस्कृत भाषाका विभिन्न अवस्थामा चर्चा गरेका छन्। दोस्रो अध्यायमा पाली र त्यस समयका अरू बोलीमा विवेचना गरेका छन्। तेस्रो अध्यायमा प्राकृत र अप्रभंश बारे छ। चौथो अध्यायमा उत्तर भारतीय आधुनिक भाषाको ध्वनि बारे चर्चा छ। पाँचौं र छैटौंमा नेपाली लगायत आधुनिक भाषाका नयाँ र प्राचीन रूपका चर्चा छन्। सातौं अध्यायमा प्राचीन, मध्ययुगी र आधुनिक आर्य भाषाका सम्बन्धमा छन्।

ए० रूडल्फ हार्नलीको १८८० मा पूर्वी हिन्दीको तुलनात्मक व्याकरण प्रकाश भयो। यसमा भोजपुरीमा ज्यादा ध्यान दिइएको छ। तर साथसाथै प्रमुख पहाड़ी समेत आधुनिक आर्य भाषाहरूको तुलनात्मक चर्चा पनि छ। सामग्रीको प्रचुरताले गर्दा यो ग्रन्थको महत्व भएको हो।

जर्ज अब्राहम ग्रियर्सनको भाषाको ज्ञान ज्यादै महत्वको थियो र ज्यादै धेरै भाषा यिनी जान्दथिए। यिनले पहिले बिहारी भाषाको व्याकरण लेखे। १८९४ मा

यिनको प्रसिद्ध पुस्तक भारतीय भाषाको सर्भे शुरू भयो । ३३ वर्षसम्म कठोर परिश्रम गरेर १९२७ मा समाप्त गरे । यी बड़े-बड़े पुस्तक ११ भागमा छन् । यी पुस्तकहरूमा करीब-करीब नेपालसमेत हिमालयदेखि दक्षिणका भाषा र बोलीका व्याकरण दिएका छन् । शुरूमा एक लम्बे र विद्वतापूर्ण भूमिकामा आर्य भाषाका प्रामाणिक इतिहास छन् । १९०६ मा पिशाच भाषा र १९११ मा काश्मीरी भाषामा पनि यिनले प्रामाणिक ग्रंथ प्रकाश गरे ।

राल्फ लिले टर्नरले लगभग ३०-३५ वर्षको अथक परिश्रम गरेर नेपाली कोष १९३१ मा प्रकाश गरे । यो ग्रंथ प्रसिद्ध छ र यसमा नेपाली धेरै शब्दका व्युत्पत्ति दिने प्रयत्न गरेका छन् । नेपाली भाषाको यो महत्वपूर्ण ग्रंथ हो ।

भारतका प्रधान आर्य भाषाका शब्द पनि तुलनाको रूपमा दिएका छन् । करीब २०० शब्द मूल भारोपीय भाषाका पनि दिएका छन् । यो पुस्तक २१२ भाषाको आधारमा लेखिएको छ । यो बाहेक श्री टर्नरले मराठी स्वराघात, गुजराती ध्वनि, र सिंधीमा पनि केही लेखेका छन् ।

जूल ब्लाखको प्रसिद्ध ग्रंथ मराठी बनावट हो । यो १९१८ मा प्रकाश भएको थियो । यसमा ध्वनि र रूपको विवेचना विशेष महत्वको छ । यिनको अर्को ग्रंथ 'भारतीय आर्य भाषाहरू' पनि महत्वपूर्ण छ । यिनले द्राविड र आर्यभन्दा अगाडिका भारतीय भाषामा केही निबन्ध लेखेका छन् ।

डा० सुनीतिकुमार च्याटर्जी वर्तमान समयका भारतका ठूला भाषा विज्ञानी हुन् । यिनको मुख्य ग्रंथ 'बंगालीको उत्पत्ति र विकास' हो । यस पुस्तकलाई वर्तमान भारतीय आर्य भाषाहरूको विश्वकोष भन्दछन् । यसको भूमिकामा करीब-करीब सबै भाषाका प्रामाणिक सामग्री पाइन्छन् । बंगाली ध्वनिमा पनि यिनले एक स्वतन्त्र पुस्तक लेखेका छन् । यिनले नेपाली भाषाको उत्पत्ति बारे पनि लेखेका छन् ।

डा० ल० स्वरूपले यास्कको निरुक्तमा काम गरेका छन् । आर०एन० डाटेकरले वेदको सम्बन्धमा काम गरेका छन् ।

अलफर्ड सी० वूलनरले प्राकृत, विधुशेखर भट्टाचार्य र भिक्षु जगदीशले पाली र हीरालाल जैन र प्रबोधचन्द्र बाग्चीले अपभ्रंशमा काम गरेका छन् ।

तारापुरवाला, पूनावाला, कागा, कापड़िया र सुकुमार सेन आदिका पनि भाषा विज्ञानमा महत्वपूर्ण कार्यहरू छन् ।

नेपाली अतिरिक्त नेपाली भाषाका अरू वैयाकरणहरू पनि निकै देखिन्छन् । जे० ए० एटनले पहिलो नेपाली भाषाको व्याकरण १८२० सन्मा नै कलकत्ता, फोर्ट विलियमबाट प्रकाश गरेका थिए । फोर्ट विलियमबाट बंगाली, मराठी आदिका व्याकरण

पनि प्रकाश भएका थिए। यी व्याकरण केवल जङ्गीतर्फका जवानहरूसंग सम्पर्क वृद्धि गर्ने उद्देश्यले लेखिएका हुन्। यसबाट नै नेपाली भाषाको महत्वको परिचय हुन्छ। वी० एच० हगसन्को नेपाली भाषाहरूको र बोलीहरूका प्रबन्धहरू १८७४ मा प्रकाश भएका थिए। टर्नबुलको व्याकरण र शब्दकोष १८८७ मा दार्जीलिङबाट प्रकाश भएको थियो। फेरि १८९९ मा क्याथोलिक आर्फेह्नप्रेस, कलकत्ताबाट हेम्पे-म्स्टेल र बूढाथोकीको 'खस गोर्खाली व्याकरण र शब्दकोष' प्रकाश भएको थियो।

सुब्बा वीरेन्द्रकेशरी अर्यालले नेपाली व्याकरण लेखेका थिए। तर्‍यो पुस्तक छपाइ-द्वारा प्रकाशमा आउन सकेन। यिनको स्वभाव ज्यादै सरल भएकोले अरूलाई गुहारी छपाउने प्रयत्न पनि गरेनन्। यिनले नेपाली शब्दावली प्रत्ययहरूको योजना र वाक्य रचना आदिको अध्ययन गरी नेपाली व्याकरण लेखेका हुन्। यसै ब्याकरणका नियमका आधा-रमा यिनले कविता लेख्न शुरू गरेका थिए। यस व्याकरणमा समास र कारक इत्यादि पनि छन्। यस व्याकरणको छानबीनमा नेपाली भाषा-विज्ञानसम्बन्धो ज्ञानमा प्रकाश मिल्छ। समय १९४५-६२। यसको विशेषता ध्वनि ठीक-ठीक अक्षरद्वारा जाहेर गर्ने छ। अर्यालजीको लिङ्ग बारेका नियमहरू आधुनिक पारामा सुहाउने छन्। (क) भाले जनाउने सबै पुलिङ्ग (ख) पोथी जनाउने सबै स्त्रीलिङ्ग (ग) अरू जम्मै नपुंसक लिङ्ग (घ) देवको मूर्ति जनाउने पुंलिङ्ग (ङ) देवीको मूर्ति जनाउने स्त्रीलिङ्ग आदि।

सुब्बा वीरेन्द्रकेशरीको व्याकरणको आधारमा जयपृथ्वीबहादुरले 'प्राकृत व्याकरण' भन्ने नेपाली भाषाको सानो व्याकरण तयार पारेको जस्तो देखिन्छ।

हेमराज पण्डितज्यूको ठूलो चन्द्रिका व्याकरणले नेपाली भाषाको विस्तृत नियम दिन्छ। यसबाट भाषा विज्ञानसंबन्धी धेरै किसिमको ज्ञान प्राप्त गर्न सकिन्छ। यस कार्यबाट नेपाली भाषाको एक ठूलो अभावको पूर्ति आजसम्म भएको छ। समय— १९२९। भाषा विज्ञानका सबै सिद्धान्तका चर्चाका साधन यसमा छन्। यसको टिप्पणी-ले अनेक चलन, प्रयोग र परंपरामा समेत प्रकाश पारेको छ।

बिश्वमणि दीक्षिताचार्यको 'गोरखा व्याकरण बोध' बाट पनि भाषा विज्ञानको केही स्रोत पत्ता लगाउन मद्दत पाइन्छ। समय–वि० सं० १९७०।

सोमनाथ सिग्द्यालज्यूको मध्य चन्द्रिका छात्रवर्गमा ज्यादै चलेको छ र पठन पाठनका निमित्त उपयोगी छ। यसबाट पनि भाषा विज्ञानको सिद्धान्तमा केही प्रकाश मिल्दछ। समय वि० सं० १९७६।१९९१ 'लघु चन्द्रिका' पनि निक्लेको थियो। यी ग्रन्थहरू ठूलो चन्द्रिका व्याकरणको आधारमा छन्।

पारसमणि प्रधानज्यूको 'सजिलो नेपाली व्याकरण' ले पनि भाषा विज्ञान संबन्धी स्रोतमा प्रकाश पार्छ। समय १९८९। उहाँका अरू व्याकरणसंबन्धी र भाषा सम्बन्धी ग्रन्थहरू महत्वका छन्।

नेपाली भाषा कसरी शुद्ध लेख्ने ? यो पुस्तिका १९८१ मा ने० भा० प्र० स० बाट प्रकाश भयो। यो छोटकरी व्याकरणको ध्येय नेपालभर सरल नेपाली भाषा प्रचार गर्ने हो तर पुराना नियमहरू नै धेरै अपनाएकोले या अपनाउनुपरेकोले ने० भा० प्र० स० को पूर्ण ध्येय प्राप्ति यसबाट हुने जस्तो छैन। भाषा विज्ञान र आधुनिक ध्वनि-छटनी शास्त्रहरूको आधारमा व्याकरणका नियमहरू नबनेसम्म नेपाली भाषा शतप्रतिशत नेपालमा प्रचार गर्न मुश्किलै छ। यस बारे लिपिको अध्यायमा चर्चा भएकै छ। तर यसले नेपाली सरलीकरण गरेर प्रचार गरेको नै छ।

शिक्षक गोपाल पाण्डेका 'रचना दर्पण' (१९९४) 'ह्रस्व दीर्घ आदिको सवाई' (१९९७) र 'रचना केशर' ( २००० ) इ० पुस्तकहरू पनि महत्वपूर्ण छन्। ले. क. पुष्करशमशेरको (२००१) 'नेपाली सजिलो व्याकरण', श्री हृदयचन्द्रसिंह प्रधानको शब्द शुद्धि–विज्ञान (२००४) उक्त विज्ञानकै बाल संस्करण ( २०१० ) विशेष उल्लेखनीय छन्। अरू सज्जनहरूले पनि यस विषयमा लेखी नेपाली भाषाको सेवा गरेका छन्। यी सबै उक्त सज्जनहरू भाषा वैज्ञानिकका धन्यवादका पात्र भएका छन्। श्रीहर्ष नाथको 'अनिवार्य नेपाली रचना', श्री तुलसीप्रसाद ढुङ्गेलको 'नेपाली रचना शिल्प', श्री विष्णुगोपाल र शिवगोपाल रिसालको 'नेपाली भाषा र व्याकरण', श्री कृष्णप्रसाद पराजुलीको राम्रो रचना र मीठो नेपाली आदि र श्री चूडामणि बन्धुको नेपाली भाषाको उत्पत्ति आदिले नेपाली भाषा र व्याकरणको ज्ञान हाल पुष्ट पारेका छन्।

चीनको भाषासम्बन्धी ज्ञान ज्यादै प्राचीन देखिन्छ। कुनै विद्वानको मतमा ईसा पूर्व चार पाँच हजार वर्षअगाडि नै चीनमा सुसंस्कृत भाषा थियो भन्ने छ। तर यो विचार स्पष्ट साबीत गर्न केही मुश्किल भएकोले १५०० वर्ष ई० पू० चीनमा समुन्नत भाषा थियो भन्ने कुरा निर्विवाद जस्तै छ। हुआङ-ती र शेन-नुङ आदि बादशाहहरू ई० पू० २५०० अगाडि नै भएका देखिन्छन् र यी बादशाहहरूको समयमा लिपिको शुरू चीन देशमा भै सकेको थियो। चीनको स्वर्ण-युग ई० पू० २००० वर्षअगाडि नै बनेर नाश पनि भै सकेको देखिन्छ। यी सबै कुराबाट चीनमा ई० पू० १५००। १६०० अगाडि नै साहित्यको सिर्जना प्रशस्त मात्रामा भएको थियो। महात्मा कनफ्यूशिअसले गीत संग्रह गरेका थिए। यस संग्रहमा ५०० ई० पू० देखि १८०० ई०पू० सम्मका गीतहरू छन्। चीनमा इतिहास र कथा लेख्ने चलन पनि ज्यादै पुरानो देखिन्छ। भाषा र लिपिविना यस्तो परंपरा चलन सक्तैन। चीनको भाषामा व्याकरणको उस्तो जरूरत छैन। त्यसैले यसमा शब्दकोषले नै व्याकरणको काम गर्दछ। जे० एट्किन्स र एम-कुरैटले लेखेका व्याकरणलाई ठीक व्याकरण मान्न सकिदैन। यी सबै कुराबाट यो स्पष्ट साबीत हुन्छ कि प्राचीन कालमा चीनमा शब्दकोषहरू बनेका थिए। यिनै शब्दकोषहरू भाषाविज्ञानका साधन पनि थिए। चीनमा हूण, मंगोल र मांचुकोका आक्रमणमा धेरै पुस्तकहरू नाश भए। ई० पू० २१३ मा चीनका राजा त्सिन-शी-हुआङ-तीले

राजनैतिक कारणले धेरै पुस्तकहरू जलाइदिए। यिनै कारणले गर्दा चीनमा उपलब्ध पुस्तक ज्यादै कम छन्।

ई० पू० २०० करीबमा चीनमा बौद्ध-धर्म प्रचार हुन थाल्यो। हिन्दूहरूको साहित्यिक र भाषा-संबन्धी ज्ञानले चीनमा पनि भाषामा प्रभाव पार्‍यो। यी प्रभाव चीनको ध्वनिमा देखिन्छन्। यी प्रभाव खास गरेर चीनका कोषका ध्वन्यक्रममा देखिन्छन्।

चीनको सबभन्दा पहिलो र प्रामाणिक कोष हू-शेनको 'शुओ-वेन-कीत्सी' हो। यो कोष ई० पू० १०० करीबमा बनेको थियो। यसमा जम्मा ३६४ चिन्ह छन्। आज-सम्म पनि यस कोषलाई ठूलो महत्वपूर्ण संझन्छन्। यसमा टीका पनि लेखिएका छन्। यस कोषको विशेषता उस समयका प्रचलित शब्दहरूको परीक्षाको सुन्दरतामा छ। यस कोषको आधार ई० पू० तेस्रो शताब्दीका राजा त्सइन्का मंत्री ली-सी-को एक पुस्तक हो भन्ने अठोट धेरैले गरेका छन्।

यो पछिको दोस्रो कोष 'स्ती-यून' ७ तौं शदीको शुरूको मानिएको छ। यसको विशेषता सामग्रीको दृष्टिबाट छ। १२ रौं शताब्दीमा सिमाकु आङ्ले यस सम्बन्धमा महत्वपूर्ण काम गरेका थिए। यस विषयमा चेन-यू, वाङ कू ओ-वों, हॉप्किन र कार्ल ग्रेनले पनि महत्वपूर्ण काम गरेका छन्। गाइल्स र काउरूर आदिको कोष अंग्रेजी भाषामा छ। कङ-होल्सी तीन्को आधुनिक कोष (१७१६ ई०) को ज्यादै महत्वको छ। यस विज्ञानतर्फ आजकल ध्यान गएको देखिन्छ। हालसम्म प्रगति निकै भएको छ।

अरबमा धार्मिक ग्रन्थमा विवेचना गर्दा भाषातर्फ ध्यान गएको देखिन्छ। कुरानको भाषा संझाउँदा यो विज्ञानमा केही विकास व्याकरणीय विवेचनाको रूपमा भएको देखिन्छ।

अरबमा भाषासंबन्धी ज्ञान मुसलमानी मजहबको चारौं खलिफा हजरत अली देखि शुरू भएको हो भन्ने विचार छ। यिनले भाषालाई तीन भागमा बाँडे भन्नेसम्म पत्तो लाग्छ अरू केही बर्ता पत्ता लाग्दैन।

अरबमा अरबी विद्यालाई दुई भागमा बाँडेको देखिन्छ। (क) अरबी ज्ञान र (ख) अरबेतर ज्ञान।

अरबी ज्ञानमा नीति साहित्य, इतिहास र भाषाको अध्ययनसमेत परेको छ। अरबेतर ज्ञानमा दर्शन चिकित्सा आदि विषय परेका छन्। यो बाँडफाँटबाट भाषाको अध्ययनमा अरबीको आफ्नै हो भन्ने दावी देखिन्छ। तर यो दावी ठीक देखि-दैन। डा०टी०जे० वोअरले पनि इस्लाम दर्शनको इतिहासमा (लण्डन १९०३-पेज ३१) भाषासंबन्धी ज्ञान खास अरबी होइन भनेका छन्। अरू भाषाको प्रभाव यसमा पनि परेको देखिन्छ। सीरियन्स र पराशियनको प्रधान प्रभाव अरबी भाषामा देखिन्छ।

अरबीमा सेववै भन्ने ठूला वैयाकरण भए । यिनी पाणिनि जस्तै प्रसिद्ध छन् । सेववैको ग्रन्थ पूर्ण देखिन्छ : सेववैको व्याकरणबाट सेववैभन्दा अगाडि धेरै व्याकरण संप्रदाय रहेछन् भन्ने कुरा स्पष्ट हुन्छ । यस ग्रन्थमा धेरै भाष्यहरू लेखिएका छन् । पछि टीकाहरू लेखिएका छन् ।

केही समयपछि अरबी व्याकरणका दुई संप्रदाय भए । (क) वसरी र (ख) कुफी ।

वसरीमा 'सादृश्यको' प्रभाव धेरै परेको देखिन्छ तर कुफीमा देखिदैन । यसरी भाषाशास्त्रमा तर्कशास्त्रको पनि ठूलो प्रभाव देखिन्छ । अरस्तुको तर्कशास्त्रले वसरी सम्प्रदायमा धेरै प्रभाव पारेको छ । भाषा स्वाभाविक हो या कृत्रिम हो ? भन्ने प्रश्नमा पनि यसमा विचार भएको छ । छन्दशास्त्रको अध्ययन पनि यसमा निकै भएको देखिन्छ ।

केही समयपछि यो विषयको अध्ययन लुप्त भएको देखिन्छ । आधुनिक समयमा युरोपीय पण्डितहरूले फेरि अरबी भाषाविज्ञानको अध्ययन शुरू गरे । अब अरबी र मिश्री विद्वानले पनि शुरू गर्न लागेका छन् । हाल केही प्रगति पनि भएको छ ।

यूरोपमा सुकरातभन्दा अगाडि पनि भाषासम्बन्धी ज्ञान केही न केही अवश्य भएको बुझिन्छ तर प्रमाण भने केही पनि पाइँदैन । अंटिस्थिनिस्, हीराक्लीटस, पिथागोरस इत्यादिका नाम सुकरातभन्दा अगाडिका विद्वानमा उल्लेखनीय छन् । तर प्रमाणको अभावमा सुकरात महर्षिलाई नै यस विषयका प्रथम विद्वान माने हुन्छ ।

सुकरातको समय ४६९ ई० पू० देखि ३९९ ई० पू० सम्म । सुकरातको पहिलो चर्चा 'शब्द' र अर्थको संबन्धमा छ । 'शब्द' र 'अर्थ' मा स्वाभाविक संबन्ध छ कि छैन ? घरको नाम घर नै भन्नुपर्ने स्वाभाविक हो ? या घरको सट्टा अर्को अरू शब्दद्वारा घर भन्न सकिन्छ कि ? या खास स्वभावैले 'घर' लाई, 'घर' भन्न कर लाग्छ । घरलाई घर नभनी 'पर' भन्यो भने अस्वाभाविक हुन्छ कि ? सुकरातको भनाइमा 'घर' लाई 'घर' नभनेर अरू कुनै शब्दले पुकारे पनि अस्वाभाविक हुँदैन । वस्तु र वस्तुको नाममा अथवा शब्द र अर्थमा कुनै स्वाभाविक संबन्ध छैन र केवल यो संयोगात्मक मात्र हो । यो सुकरातको भनाइ ठीक या केही ठीक जस्तै पनि छ । किनभने स्वाभाविक सम्बन्ध भएको भए भिन्न भिन्न भाषामा पृथक्-पृथक् नाम नहुनुपर्ने हो र सबै भाषामा एकै नाम हुनुपर्ने हो ।

सुकरात संसारभरका निमित्त एकै भाषा बनाउन सकिन्छ भन्ने विचार पनि गर्थे । शब्द र अर्थ अथवा वस्तु र नामको स्वाभाविक संबन्ध स्थापना गरेर संसारभरका निमित्त एकै भाषा बनाउने उनको विचार पनि थियो ।

प्लेटोको समय ४२९ ई० पू० देखि ३४७ सम्म । प्लेटो सुकरातका शिष्य थिए र गुरु जस्तै दार्शनिक थिए ।

सुकरात, प्लेटो, क्रेटिलस, सोफिस्ट आदिले सोझै भाषासम्बन्धी दर्शनमा चर्चा गरेका छैनन् । अरू दर्शनमा चर्चा गर्दा आनुषंगिक रूपले मात्र चर्चा गरेका छन् । यिनीहरू सबैको विचार छोटकरीमा यिनै हुन् । (क) भाषाको व्युत्पत्तिमा यी सबै दार्शनिकको ध्यान गएको देखिन्छ तर यी ध्यान वैज्ञानिक छैनन् । (ख) प्लेटोले सबभन्दा पहिले ध्वनिको वर्गीकरण गरेका थिए । यो वर्गीकरणमा घोष र अघोषको फाँट छ । प्लेटोले भाषा र विचार मूलमा एकै हुन् भन्नेमा विवेचना पनि गरेका छन् तर भाषा र विचारमा एक ध्वन्यात्मक र अर्को अध्वन्यात्मकको फरक त अवश्य छ । (ग) सोफिष्टले पनि भाषा र विचारमा केही अन्तर मानेका छन् । विचारलाई आत्माको ध्वन्यात्मक कुराकानीको अवस्था मानेका छन् । त्यही आत्माको अध्वन्यात्मक अवस्था ध्वन्यात्मक भएर ओठबाट प्रकट हुन थालेपछि भाषा भन्ने नाम पाउँछ । (घ) यिनीहरूको चर्चाबाट यिनीहरूलाई शब्दको भेद र वाक्यको विश्लेषण पनि थाहा रहेछ भन्ने पत्ता लाग्छ ।

अरस्तुको समय--३८५ ई० पू० देखि ३२२ ई० पू० सम्म । अरस्तुले प्लेटोको विचार र कार्यमा केही थप गरे । यिनको विचार भाषामा आनुषंगिक रूपमा मात्र छ । यिनी एक ठूला तत्ववेत्ता थिए । यिनको प्रसिद्ध ग्रन्थ 'पोयटिक्स' हो । यस पुस्तकको दोस्रो भागको २४ सौं र २५ सौं अंशमा शैलीको विश्लेषण गर्दा अरस्तुको ध्यान भाषामा गएको छ । यो ध्यान खास भाषा विज्ञान संबन्धित नभए पनि महत्त्वपूर्ण छ र यस प्रकार छ—

(क) अरस्तूले शब्दलाई धेरै भागमा बाँडेका छन् । मुख्य विभाग—(अ) साधारण र (आ) दोहरो छन् । साधारणमा अर्थरहित शब्द परेका छन् । र (आ) दोहरोमा सार्थक र केही निरर्थक दुवै देखिन्छन् ।

यस्तै गरी तेहरो र चौहरो शब्दहरू पनि मानिएका छन् । फेरि शब्दहरूलाई (१) शुद्ध विदेशी (२) परिवर्तित (३) मनचिन्ते इत्यादिमा भेद गरेको पनि छ । यो शब्द समूहको दृष्टिबाट ज्यादै महत्वको छ ।

(ख) अरस्तूले अक्षरलाई अविभाज्य ध्वनि भनेका छन् र स्वर अंतस्थ र स्पर्श तीन भेद गरेका छन् । फेरि ह्रस्व, दीर्घ, अल्पप्राण, महाप्राण इत्यादिमा बाँडेका छन् । यिनको स्वरको परिभाषा ज्यादै वैज्ञानिक छ । जिब्रो र ओठको सहायताविना नै स्वर उच्चारण हुन सक्तछ भन्ने मत यिनको छ ।

(ग) मात्रा र सम्बन्धसूचक शब्दमा पनि यिनले विचार गरेका छन् ।

(घ) वाक्यलाई पदमा विभाजन गर्दा संज्ञा र क्रियामा चर्चा गरेका छन् । क्रियाको चर्चामा कालसंबन्धी चर्चा पनि छ ।

(ङ) कारक र कारकको सम्बन्ध जनाउने शब्द बारे यिनले पहिलो संकेत गरेका छन् ।

(च) प्लेटोको शब्द विभागलाई आठ भाग गरेर पूर्ण गर्ने यिनै हुन् ।

(छ) यिनले स्त्रीलिंग, पुंलिग र नपुंसकलिंग र यी लिंगहरूका लक्षणमा पनि केही विचार गरेका छन् ।

अरस्तूपछि स्टोइक वर्गका तत्ववेत्ताले केही महत्त्वपूर्ण कार्य गरेका छन् । यिनीहरूले सिर्जना गरेका पारिभाषिक शब्द कुनै न कुनै रूपमा आजसम्म चलनमा देखिन्छन् ।

स्टोइक वर्गपछि ग्रीकका विद्वानहरू अलजेन्द्री वर्गको समय आयो । यो वर्गको मुख्य लक्ष प्राचीन कविता व्याख्या गर्नु थियो । यही प्रयत्नमा यिनीहरूले अर्थ विचा-रमा चर्चा गरेका छन् ।

डिमोनिसि अस्थ्रेक्सको समय—दोस्रो शताब्दी ई० पू० ग्रीक भाषाका पहिला वैयाकरण डिमोनिसि अस्थ्रेक्स हुन् । यिनले पुरुष, काल, लिङ्ग, वचन, कर्ता र क्रिया आदिमा राम्रो प्रकाश पारेर चर्चा गरेका छन् ।

थ्रेक्सपछि यिनको स्कूलको एक शिष्य परम्परा चलेर गयो । यी शिष्यहरू मध्ये डिस्कोलस र अपोलोनियस प्रसिद्ध थिए । ग्रीसको प्रभाव रोममा पनि पर्न थाल्यो । रोमनहरूले पनि भाषा अध्ययन प्रणालीको विकास गरे र ल्याटिन व्याकरण लेखियो । पहिलो प्रामाणिक ल्याटिन व्याकरण लेख्ने लॉरेंशस वाल हुन् । यिनपछि वारो प्रिस्किअन आदिले पनि उपयोगी व्याकरणहरू लेखेका छन् ।

ईसाई धर्मको प्रभाव बढ्दै गयो । ओल्ड टेस्टामेन्ट ( पुरानो बाइबिल को अध्ययन ग्रीस र रोममा पनि हुन थाल्यो । ओल्ड टेस्टामेन्ट हिब्रूमा लेखिएको थियो । त्यसैले ईसाईहरू यस धार्मिक भाषालाई दैवी भाषा र अरू सबै भाषाको जननी भन्ने विश्वास गर्दथे । विद्वानहरू ग्रीक, ल्याटिन र हिब्रू तीनै भाषाको तुलनात्मक अध्ययन गर्न थाले । यी भाषाहरूको कोष पनि बन्न थाल्यो र धेरै शब्दहरूको व्युत्पत्ति हिब्रू हो भन्ने विचार भएर पनि मानिन थाल्यो । यो अनुमानको एकमात्र आधार ध्वनि-साम्यमा थियो । यसै संबन्धी अध्ययनतर्फ पनि विचार भयो ।

"जाग जाग" आन्दोलन ( Renaissance )—यस आन्दोलनले सबको मनमा जागरणको भावना पैदा भयो । भाषामा चाख लिने विद्वानहरूले आफ्ना आफ्ना प्राचीन भाषासम्बन्धी ज्ञानमा अध्ययन गर्न थाले । यस आन्दोलनमा धेरै भाषाका कोषहरू लेखिए र विद्वानहरूमा कोषमा शब्दको व्युत्पत्ति दिने विशेष चाख बढ्यो । यस प्राचीन, धार्मिक र सामाजिक अवस्था सुधार गर्ने आन्दोलनले भाषाको अध्ययनमा केही विशेष फाइदाहरू ल्यायो । ( क ) भाषाको तुलनात्मक अध्ययनतर्फ विद्वानहरूको झुकाव बढ्यो । ( ख ) ल्याटिन र ग्रीक भाषाहरू कुनै एउटै मुहान भाषाबाट निक्लेका

हुन् भन्नेपट्टि पनि विचार हुन थाल्यो। दार्शनिक लिवनिज भाषाको अध्ययनमा विशेष रुचि राख्तथे। उनको प्रभावले पीटर महानले एक कोष लेखाए। महारानी क्याथरिन द्वितीया पनि यसमा दिलचस्पी लिन्थिन् र अध्ययन गर्नेलाई सहायता दिन्थिन्। यही मद्दतद्वारा पल्लस् हर्वस र एडलंग आदिले शब्द संग्रह विषयमा महत्वपूर्ण कार्य गरे। पल्लस्का शब्द संग्रह एशिया र यूरोपका धेरै भाषाहरूका आधारमा थिए।

रुसोले भाषाको उत्पत्तिमा चर्चा गरेका छन्। उनको भनाइअनुसार शुरूमा मानिसहरूले सबै भेला भएर सबै वस्तुको प्रतीक या सांकेतिक नाम यकीन गरे र यसै गरेर भाषा आरम्भ भएका हुन् भन्ने छ। यस सिद्धान्तलाई स्वीकारवाद या निर्णय सिद्धान्त भन्छन्।

तर यो सिद्धान्त बेकार छ। भाषा नै नभएको वेलामा मानिसहरू भाषा बनाउन कसरी भेला हुन सक्तछन्। विचार भाषाद्वारा आदान प्रदान नभै भेला हुन कठिन छ। फेरि कुनै तवरमा एकट्ठा भए पनि भाषा नभएको अवस्थामा यो वस्तुको यो नाम राख्ने भनेर कसरी छलफल भयो होला? यदि छलफल गर्ने भाषा बनिसकेको भए फेरि नाम राख्ने र भाषा बनाउने जरूरत पर्दैन। यो सिद्धान्त अव्यावहारिक देखिन्छ।

हर्डरले बर्लिन एकेडेमीका निमित्त 'भाषाको उत्पत्ति' मा १७७२ मा एक निबन्ध लेखे (क) यिनले यस निबन्धमा दैवी उत्पत्ति सिद्धान्तको पूर्ण खण्डन गरेका छन्। (ख) यिनले मानिसले भाषा बनाए भन्ने सिद्धान्तलाई पनि काटेका छन्। (ग) यिनको सिद्धान्तमा भाषा आवश्यकताले गर्दा स्वाभाविक विकास भएको हो भन्ने छ।

१७९४ मा बर्लिन एकेडेमीले आदर्श भाषामा एक निबन्ध प्रतियोगिता गरायो। डॉ० जोनशिन, एक जर्मन विद्वान यस प्रतियोगितामा पहिला भए। यस निबन्धमा उनले ग्रीक, ल्याटिन र युरोपीय भाषाहरूको तुलनात्मक चर्चा गर्ने प्रयास गरेका छन्। यस ढँजाइका मुख्य कुरा तल दिइएका छन्।

(क) हुनेसम्म कम शब्दमा सरल युक्तिले भाषामा हुनेसम्म ज्यादै अर्थ प्रकट गर्न सकिन्छ कि सकिँदैन।

(ख) व्याकरणको रूप कठिन या सरल के हुनुपर्ने हो?

(ग) शब्दको अर्थ निश्चित छ या छैन?

(घ) नियम स्पष्ट र निश्चित छ? या अस्पष्ट र लुलो छ?

(ङ) निश्चित अर्थ र नियम भएको भाषालाई स्पष्ट भाषा भन्नुपर्छ।

(च) बोल्दा र सुन्दा केही भाषा किन ज्यादै मीठो हुन्छ? उनको भनाइमा मिठासको संबन्ध ध्वनिसाथ छ भन्ने छ।

(छ) भाषाको शब्द-समूह र नयाँ शब्द बनाउने शक्तिले भाषा सम्पन्न हुन्छ।

यी माथि लेखिएका कुराका आधारमा जेनिशले निकै खँदिलो र निष्पक्ष तुलना गरेका छन् ।

भाषासंबन्धी प्राचीन र मध्ययुगी युरोपीय अध्ययन यत्तिमै अन्त्य हुन्छ । यी अध्ययन हिन्दूहरूका प्राचीन अध्ययनसंग तुलना गर्दा ज्यादै फिका पर्छन् ।

संस्कृत प्राचीन व्याकरण र भाषासंबंधी ज्ञानबाट प्रभावित भएर युरोपीय विद्वानहरूले भाषासम्बन्धी तुलनात्मक अध्ययन शुरू गरे । संस्कृत भाषाको ज्ञानले तुलनात्मक अध्ययनमा निकै मद्दत गरेको देखिन्छ । १९ सौं शताब्दीको आरम्भमा भाषासंबन्धी वैज्ञानिक अध्ययन पश्चिमतर्फ अमेरिका आदिमा शुरू भयो । प्राचीन संस्कृतको भाषाविज्ञानको ज्ञानले युरोपीय र अमेरिकी भाषा वैज्ञानिकहरू र यूरोप अमेरिका आदिका नयाँ भाषा-विज्ञानले संस्कृतका पण्डितहरू प्रभावित भएका छन् ।

संस्कृत भाषा संबन्धमा सबभन्दा पहिलो प्रयास १७६७ मा फ्रांसीसी पादरी कोर्दोले गरेको हुन् । उनले ग्रीक, ल्याटिन र फ्रेंच आदि भाषाका केही शब्दहरू संस्कृत शब्दहरूका साथ तुलना गर्ने प्रयास गरेका छन् । यो लेख उनले फ्रेंच इन्स्टीच्यूटमा पठाएका पनि थिए । तर यसमा अरू कार्य केही भएन ।

सर विलियम जोन्सको समय १७४६ देखि १७९६ । यिनी कलकत्ता हाई-कोर्टका प्रधान न्यायाधीश युरोपीय थिए । भाषाका साथ संस्कृतको साम्यता बारे यिनले धेरै दृष्टिकोणबाट चर्चा गरेका छन् । यस चर्चाबाट संस्कृतमा र युरोपीय भाषामा धेरै साम्य रहेछ भन्ने देखिन्छ ।

१७९६ मा यिनले शाही एशियाइ परिषद ( रायल एशियाइटिक सोसाइटी ) को शिलान्यास गर्दा धेरै कुरामा ग्रीक र ल्याटिनभन्दा संस्कृत श्रेष्ठ छ भनेका छन् ।

यही चर्चा गर्दा गर्दैमा जोन्सज्यूले ग्रीक, संस्कृत, ल्याटिन, गोथिक, केल्टिक र पुरानो फारसी भाषाहरूको मुहान एउटै हो भन्ने साबीत गर्न खोजेका छन् ।

हेनरी थॉमस कोलब्रूकको समय-१७६५ देखि १८३७ तक । यिनी संस्कृतका विद्वान थिए । संस्कृतमा धेरै निबन्ध लेखे र जोन्सको कार्यमा निकै तरक्की गरे । यिनको हिन्दू धर्मशास्त्रसम्बन्धी अनुवाद निकै महत्वपूर्ण मानिएका छन् र भाषा संबन्धी चर्चा विशेष केही छैन । हिन्दू धर्मशास्त्र उल्था गर्दा आफ्नो अडकल पनि हालेका छन् । प्राकृत, अरबी र फारसीका पनि यिनी विद्वान थिए ।

एफ० डो० श्लेगलको समय १७७२ देखि १८२९ तक । संस्कृत भाषा, व्याकरण, दर्शन र काव्यका यिनी विद्वान थिए । यिनले संस्कृतको प्रचार जर्मनीमा गरे । भारतीय भाषा र ज्ञानको संबन्धमा यिनले लेखेको प्रसिद्ध ग्रंथ १८०८ मा प्रकाश भएको थियो । तुलनात्मक व्याकरणको बारेमा यिनले सर्वप्रथम विचार प्रकट गरेका

हुन् । ग्रीक, ल्याटिन, जर्मन र संस्कृतका विशेष शब्द साम्यतर्फ पनि यिनको ध्यान गएको छ । तुलनात्मक अध्ययनमा यिनले ध्वनि परिवर्तन ध्वनि-नियममा पनि संकेत गरेका छन् ।

संसारभरका भाषाहरूको वर्गीकरण गर्ने प्रथम विद्वान यिनै हुन् । यिनको वर्गीकरण यस प्रकारका छन्:—

(क) संस्कृत र संस्कृत-परिवार वर्ग, (ख) अरू-भाषा वर्ग ।

संस्कृत र संस्कृत—पारिवारिक वर्ग करीब-करीब श्लिष्ठ वर्गसाथ मिल्दछ । अरू भाषा वर्ग अश्लिष्ठ वर्ग भन्न सकिन्छ । अरू भाषा-वर्गमा चीनी भाषा पारेका छन् । तर चीनी भाषा अरू भाषा वर्गमा पर्दैन भन्ने पनि स्वीकार गरेका छन् । यसैले भित्री तवरले श्लेगलले भाषालाई तीन वर्ग मानेको देखिन्छ ।

एडोल्फ डब्लू-श्लेगल पनि संस्कृतका पंडित थिए र संस्कृतलाई सर्वोच्च मान्दथे । संस्कृत आदि भाषालाई संयोगात्मक र वियोगात्मकमा विभाजन गर्ने प्रयत्न पनि गरेका छन् ।

विल्हेम वान हम्बोल्टको समय—१७५७-१८३५ । यिनको भाषा विज्ञानसंबन्धी सिद्धान्त विशेष आफ्नै निजी छ । ग्रिमले पनि यिनको सिद्धान्तको आधारमा आफ्नो सिद्धान्तमा केही अदल-बदल गरेका थिए । यिनको शैली ठोस र कठोर छ । जेस्पर्सन पनि यिनको विचार किटेर भन्न गाह्रो छ भन्छन् । केही विचार तल दिइएका छन्:—

(क) हम्बोल्टले चीनी बाहेक अरू भाषालाई ३ वर्गमा बाँडेका छन्—श्लिष्ठ अश्लिष्ठ र प्रश्लिष्ठ । उनको मतमा कुनै एक भाषा निश्चित रूपले एकै वर्गभित्रमा पर्दैन भन्ने छ । सबै भाषामा सबै वर्गको केही न केही अंश पाइन्छ ।

(ख) शब्द धातुमा निर्भर थिए भन्ने यिनको पनि विचार छ ।

(ग) प्रत्यय कुनै समयमा अलग शब्द थिए ।

(घ) मानसिक विचारमा परिवर्तन भएर पनि भाषामा परिवर्तन हुन्छ ।

(ङ) बोलीले बोल्ने मानिसको पूर्ण व्यक्तित्व झल्काउँछ ।

(च) भाषाको आरम्भ र अन्त जान्न मुश्किल छ । उत्पत्ति बारे चर्चा गर्नु बेकार हो । जुन हालतमा भाषा प्राप्त छ त्यही हालतमा अध्ययन गर्नुपर्छ ।

(छ) भाषालाई उनी स्थिर मान्दैनन् तर धेरै थोरै जे छ पूर्ण नै छ भन्छन् ।

यिनको ऐतिहासिक र तुलनात्मक दृष्टिकोण ज्यादै महत्त्वको छ । त्यसमा पनि तुलनात्मक दृष्टिकोण विशेष महत्त्वको छ । जाभाको भाषामा यिनले महत्त्वपूर्ण पुस्तक लेखेका छन् ।

रैस्मस रैक्सको समय १७५८-१८३२ । रैक्स डेनिश विद्वान थिए । यिनले आइसल्याण्डको भाषाको व्याकरण लेखेका थिए । यसमा आधुनिक भाषा विज्ञानसंबन्धी ज्ञान निकै छ । भाषाबाट इतिहास लेख्न सकिन्छ भन्ने मत यिनको पनि छ । यिनको प्राचीन आइसल्याण्डी भाषाको अध्ययनसाथै यस वर्गको अध्ययन उपयोगी छ । रैक्सले जेन्दलाई आर्य परिवारभित्र सफलतापूर्वक पारे । दक्षिण भारतको द्राविड भाषालाई संस्कृतबाट बिलकुलै अलग बताउने यिनै हुन् । यिनले फिनो अग्रिअन परिवारका भाषाको वर्गीकरण पनि गरेका छन् । धेरै भाषाका व्याकरण पनि लेखेका छन् र रूप बिचारसंबन्धी भाग ज्यादै महत्त्वपूर्ण देखिन्छ ।

ज्याकोब ग्रिमको समय १७७५–१८६३ । यिनी एक वकील थिए । पछि प्राचीन जर्मनको अध्ययन गर्न थाले । रैस्क र श्लेगेलको प्रभाव यिनमा धेरै परेको छ । यही प्रभावले यिनले प्राचीन जर्मन र सगोत्री भाषाको अध्ययन गरे । ग्रिमले वर्तमान भाषा र बोलीको अध्ययन पनि शुरू गरे । यिनीभन्दा अगाडि केवल प्राचीन भाषाको मात्र अध्ययन गरिन्थ्यो । परी कथाका लेखक पनि यिनै हुन् ।

१८१९ मा यिनले जर्मनी भाषाको व्याकरण प्रकाश गरे । **Deutsche Grammatik** ) देवभाषा व्याकरण । यो ऐतिहासिक व्याकरण हो । यसमा रैक्सको धेरै प्रभाव देखिन्छ ।

१८२२ मा यसको दोस्रो संस्करण प्रकाश भयो । यही व्याकरणबाट यिनमा परेको रैस्कको प्रभाव पत्ता लाग्छ । खुद उनैले पनि रैक्सको धेरै तारीफ गरेका छन् । यो किताबको ध्वनि प्रकरणमा विशेषता छ । यसको वर्ण परिवर्तनको नयाँ नियम छ । यो वर्ण परिवर्तन रैक्सबाट ग्रिमले लिएका हुन् । ग्रिमको पारिभाषिक शब्द भाषा विज्ञानमा आजसम्म प्रचलित छ । यिनले वाक्यमा पनि विवेचना गरेका छन् । यो विवेचना चौथो भागमा छ । जीवनको अन्ततक यिनी भाषामा चलिरहे ।

फ्रांस वापको समय १७९१–१८६७ । पश्चिमी भाषाविज्ञानका मुनि त्रय मध्ये तेस्रो नाम वापको छ । पहिलो नाम रैक्स र दोस्रो नाम ग्रिमको छ । यिनले प्यारिसमा संस्कृत अध्ययन गरेका थिए । वापले तुलनात्मक भाषाविज्ञान शुरू गरे । पहिले यिनले ग्रीक, ल्याटिन, अवेस्ता, जर्मन र संस्कृतका धातु प्रक्रियाको तुलनात्मक अध्ययन गरेर एक पुस्तक प्रकाश गरे । यिनको प्रसिद्ध पुस्तक तुलनात्मक व्याकरण करीब १८४४ तिर प्रकाश भयो । यसमा संस्कृत, जेन्द , आर्मेनियन, ग्रीक, ल्याटिन, लिथुअनियन, प्राचीन स्लावियन र जर्मन भाषाका तुलनात्मक व्याकरण छन् ।

वापले श्लेगलको भाषाको दुई किसिमको वर्गीकरणलाई अशुद्ध भनेका छन् । श्लेगलको सुधार गर्दै भाषाको वर्गीकरण यस प्रकार गरेका छन् । (१) विना व्याकरणका भाषा जस्तै चीनी इत्यादि (२) भारोपीय एकवर्गीय धातुका भाषा (३) तीन अक्षरे धातु भएका भाषा जस्तै सामी ।

बापले भाषासंम्बन्धी धेरै विषयमा लेखेका छन् तर जेस्पर्सनको मतमा यी सबै विषयमा धेरै नै शङ्का समाधान गर्नुपर्ने छ, भन्ने छ ।

वापको सबभन्दा महत्वपूर्ण भनाइ "भाषाविज्ञानका नियम आफ्ना केही सीमाभित्र मात्र सत्य हुन्छन्" भन्ने थियो । ( **Laws of Philology are true only within certain limits.** )

बापले पहिले व्याकरणको रूपको उत्पत्ति कसरी भयो भन्ने प्रश्नमा अध्ययन गर्न चाहेर संस्कृतलाई नै यस अध्ययनको प्रधान विषय बनाए । संस्कृत, ल्याटिन र ग्रीक इत्यादि भाषा एकै भाषाबाट शुरूमा विकास भएका हुन् भन्ने उनको भनाइ छ । शुरूको मूल भाषाको धेरै विशिष्ट रूप संस्कृतमा प्राप्त हुने भएकोले संस्कृतको आधारमा नै खोजी गर्नुपर्छ भन्थे । आफ्नो पहिलो पुस्तक धातु प्रक्रियामा संस्कृतकै आधारमा तुलनात्मक ढंगबाट मूल भाषाको रूप कायम गर्न खोजेका छन् । वापले संस्कृत र ग्रीक स्वराघातमा पनि चर्चा गरेका छन् । प्रत्ययलाई यिनी पनि हृम्बोल्ट जस्तै कुनै समयमा स्वतंत्र शब्द मान्थे ।

आगष्ट एम. पाटको समय १८०२–१८८७ । यिनले भाषाको वैज्ञानिक व्युत्पत्ति शास्त्रको बारेमा एक ग्रन्थ लेखेका छन् । यिनले तुलनात्मक ध्वनिको तालिका पनि बनाए । यो पहिलो तालिका हो । वापको व्याकरणको संस्कार पनि गरे ।

के० एम० रैप र ग्रिम एकै समयका थिए । यिनको ध्वनिशास्त्र विशेष महत्वको छ । भाषाविज्ञानमा जीवित भाषाको अध्ययनको महत्व खूब देखाएका छन् जेस्पर्सन पनि यिनको सिद्धान्तलाई महत्वको ठान्दछन् ।

जे० एच० ब्रेड्स्डार्फले भाषाको विकासका कारणहरूमा ध्यान दिएका छन् । ग्रीम, वाप आदिले यसपट्टि ध्यान दिएका थिएनन् । यिनी ध्वनिशास्त्रहरूमा विशेष प्रवीण थिए । भाषामा परिवर्तन ल्याउने कारणमा यिनले चर्चा गरेका छन् । यी कारणहरू :—

(१) शब्दलाई अशुद्ध सुन्नाले अथवा शब्दको अर्थ नबुझ्नाले (२) गलत संझनाले (३) ध्वनि अवयवको अपूर्णताले (४) आलस्य (५) सादृश्यतिर जाने प्रवृत्तिले (६) स्पष्ट हुने कोशिश र (७) नयाँ विचार प्रकाश गर्ने आवश्यकताले ।

संस्कृत सेन्ट पिटर्सबर्ग कोष रूडल्प गथ ( १८२१-१८९५ ) र आटो वाटलिंक ( १८१५-१९०४ ) ले लेखेका थिए । यसमा हरेक संस्कृत शब्दको व्युत्पत्ति धातुसम्मको दिएको छ । यी दुवै जना भाषाविज्ञानका र संस्कृतका ठूला पण्डित थिए ।

अगष्ट इलाइखरको समय—१८२१-६८ तक । इलाइखर आफूलाई Glo thiker ( ग्लथिकर ) भन्थे । यिनको भाषासंबन्धी ज्ञान पूर्ण र प्रौढ थियो । यिनको विशेष दखल स्लावोनिक लिथुयानियन भाषामा थियो । रूसी भाषाको ज्ञान पनि

राम्ररी हासिल गरेका थिए। जन-भाषामा यिनी ज्यादै रुचि राख्तथे। दर्शन र भौतिक विज्ञानमा पनि यिनको प्रेम थियो। यिनी हिगेलबाट धेरै प्रभावित भएका छन्। डार्विन जस्तै यिनी पनि भाषालाई भौतिक पदार्थ मान्दछन्। यस किसिमको आफ्नो मतको विरुद्ध आवाज उठाउनेलाई जवाफ दिंदै उनले एक पुस्तक पनि लेखेका छन्। भाषाको आधारमा मानिसको वर्गीकरण गर्नुपर्छ भन्ने मत यिनको थियो।

इलाइखरले मूल भारोपीय भाषाको पुनर्निर्माण बारेमा पनि आफ्नो पुस्तक 'कम्पेडिवम' मा चर्चा गरेका छन्। यस पुस्तकमा मूल भाषाको स्वर, व्यञ्जन, धातु र रूप रचना इत्यादि विषयमा अलग-अलग अध्यायमा विचार गरेको छ। मूल भाषाबाट निक्लेका संस्कृत, ग्रीक, ल्याटिन र गोथिक इत्यादिको केही रूप पनि दिएका छन्। यिनका साथी कुर्टियसले पनि भाषाविज्ञानमा काम गरेका छन्।

फ्रेडरिक मैक्समूलरको समय—१८२३-१९०० । भाषाविज्ञानको प्रचारमा मैक्समूलरको ठूलो देन छ। भाषाविज्ञानका घेराबाहिरका अरू मानिससाथ भाषा विज्ञान परिचय गराउने यिनै हुन् भने हुन्छ। यिनको शैली ज्यादै रोचक भएकोले रूखो भाषाविज्ञान जस्तो विषय पनि प्रिय हुँदै गयो। १८६१ मा यिनले दिएका व्याख्यान पुस्तक रूपमा प्रकाश भयो। नयाँ संस्करणको भूमिकामा नयाँ युगका करीब करीब सबै सिद्धान्त यिनले मानेका छन्। यिनी साहित्यिक र दार्शनिक पनि भएकाले मनोरञ्जक बनाउने प्रयत्नमा भाषाविज्ञानदेखि बाहिर गएका पनि देखिन्छन्। इलाइखरका धेरै कुराहरू यिनले मानेका छन्।

मैक्समूलर संस्कृत ग्रन्थको ठूलो आदर र कदर गर्दथिए। संस्कृत भाषाका साहित्य र दर्शनलाई प्रचार गर्नमा र आदर बढाउनमा यिनले पनि धेरै कोशिश गरेका छन्। संस्कृतका पचासभन्दा बढता पुस्तकहरू अंग्रेजीमा उल्था गरेका छन्। संस्कृतका अरू विषयमा पनि लेखेका छन्। सायण भाष्यसाथ यिनले निकालेका ऋग्वेदका संस्करण आजसम्म प्रामाणिक पाइन्छन्। उपनिषद, दर्शन, तुलनात्मक पौराणिक कथा, धर्म विज्ञान र धर्मानुष्ठान प्रद्धतिमा पनि यिनले निकै लेखेका छन्।

भाषाविज्ञानसंबन्धी कार्यहरू पनि महत्वपूर्ण छन्। यिनले खास गरेर अर्थ—विचारको अध्ययनमा जोड दिएका छन्। आर्यहरूको मूल भाषामा विचार भएको थियो तर मूल स्थानमा विचार भएको थिएन। मैक्समूलरले मूल स्थानको बारेमा निकै चर्चा गरेर मध्येशियालाई नै मूल स्थान ठह्र्याएका छन्। नागरी लिपिको प्रचार बढाउन पनि यिनको ठूलो परिश्रम छ। यूरोप आदि देशमा नागरी लिपिको वैज्ञानिकता बारे प्रचार गर्ने पनि यिनै हुन्।

विलियम ह्वाइट ह्विट्नीको समय—१८२७-१८९४। यिनी अमेरिकाको एल० कलेजमा संस्कृत र तुलनात्मक भाषाविज्ञानका शिक्षक थिए। भाषाविज्ञानमा पहिलो

चल्ने अमेरिकी विद्वान यिनै हुन् भने पनि हुन्छ । यिनले पहिलो पुस्तक "भाषा र भाषाको अध्ययन" १८७६ मा लेखेका थिए । दोस्रो पुस्तक "भाषाको जीवन र विकास" १८७५ मा लेखेका थिए । १८७९ मा संस्कृत भाषाको प्रसिद्ध व्याकरण प्रकाश भयो । यो व्याकरण विशेष महत्वको छ । यिनको शैली मैक्समूलरको जस्तो आकर्षक नभए तापनि ज्यादै कैंरातिलो र गहिरो छ । तर अंग्रेजहरूले यिनलाई भारतमा प्रचार हुन दिएनन् । मैक्समूलरको मनगढन्ते सिद्धान्तहरूको यिनले ठीक आलोचना गरेका छन् र उदाहरणहरूका दुरुपयोग भएका ठाउँमा पनि चर्चा गरेका छन् । मैक्समूलरले यी आलोचनाका उत्तर पनि दिएका छन् । तर ह्विट्नीले मैक्समूलरलाई धेरै ठाउँमा ठीक गरेका छन् । ह्विट्नीले "मैक्समूलर र भाषाविज्ञान" भन्ने पुस्तिका पनि लेखेका छन् । भाषाको परिभाषाको सम्बन्धमा पनि दुवै विद्वानमा फरक फरक विचार पाइन्छ । मैक्समूलर भाषालाई भौतिक मान्द- थिए तर ह्विट्नी मस्तिष्कको विकासछाया मान्थे, तर यी कुरा बाहेक अरू कुरामा यिनीहरूको एकता थियो । आजकल उनका सबै सिद्धान्त अमान्थ भएका देखिन्छन् ।

अमेरिकी भाषा वैज्ञानिकहरूले आधुनिक भाषाविज्ञानको शुरू मानव विज्ञान को पारामा शुरू गरे । यसैले यसको स्रोत युरोपीय भाषाविज्ञानभन्दा फरक छ । श्री पो आस, सपीर र ब्लूमफील्ड मानवविज्ञानमा प्रवीण थिए । यूरोपमा भाषाविज्ञानको पठन पाठन प्राचीन भाषाहरू संस्कृत, ल्याटिन, ग्रीक आदिबाट शुरू भयो । अमेरिकामा रेड-इन्डियनको बोलीबाट मात्र शुरू भयो । यो कार्य दोस्रो महायुद्धको आसपासदेखि मात्र शुरू भएको छ । यी बोली लेखिएका छैनन् र जीवित छन् । यसका पाँच स्कूलहरू मुख्य छन् । :—सपीर स्कूल, ऐन आर्वर स्कूल, ब्लूमफील्ड स्कूल र हार्वर्ड स्कूल ।

१९ सौं शताब्दीको पहिलो हिस्सातिर भाषाविज्ञानको नयाँ शाखा शुरू भयो । यस शाखालाई प्राचीन विद्वानहरू ठेटना वैयाकरण भनेर उडाउँदथे । प्राचीन शाखामा र नव्य शाखामा मतभेदहरू थिए । प्राचीन शाखावादीहरूमाथि नव्य शाखावादीहरूकै विजय भयो ।

हेर्मन स्टाइन्थालले भाषाविज्ञानको अध्ययनमा मनोविज्ञानको जरूरत बारेमा ज्यादा जोड दिएका छन् । मनोविज्ञानको आधार नभै भाषाविज्ञानको अध्ययन हुँदैन भन्ने यिनको विचार छ । स्टाइन्थालले पहिलो प्रकाश गरेका आफ्नो पुस्तकमा मनोविज्ञान तर्कशास्त्र र व्याकरणको पारस्परिक संबन्धमा चर्चा गरेका छन् । यिनले प्रेरणा हम्बोल्टबाट पाएको बुझिन्छ । यिनले चीनी र अफ्रीकी मन्डेनिग्रोका भाषाहरूको राम्रो अध्ययन गरेका थिए ।

कार्ल ब्रुगम्यान नयाँ शाखाका सबभन्दा प्रसिद्ध आचार्य हुन् । नयाँ सिद्धान्तहरू सबमा यिनको छाप परेको छ । यिनको चार भागमा लेखिएको भारोपीय भाषाको

व्याकरण ज्यादै महत्वको छ । वाक्यतर्फ पनि यिनको चर्चा गएको छ । ब्रुगम्यान र हर्मज ओस्ताफ दुवैका कार्य नव्य शाखाको प्राण भने पनि हुन्छ । ब्रुगम्यानको अनुनासिक सिद्धान्त (Sonant nasal Theory) ले ग्रिम नियमका धेरै अडचनको समाधान गरेको छ ।

ग्रासम्यानको बर्नरको ध्वनि नियमले ग्रिम-नियमका बाँकी रहेका केही अपवाद हरूलाई खतम गरेको देखिन्छ ।

कर्ल बर्नरको ध्वनि नियमले केही अरू अपवादलाई खतम गरेको छ । यस नियमलाई महत्वपूर्ण मानेका छन् ।

अस्कोलीले भारोपीय परिवारलाई केन्तुम र सतम् शाखामा विभाजन गर्न धेरै मद्दत गरे । मूल भारोपीय भाषामा 'क' 'र' 'च' वर्णको उच्चारण मिलेर एकै 'क' भयो भन्ने यिनको मत छ ।

वि० डेलब्रुकले वाक्यको अध्ययनमा महत्वपूर्ण काम गरे । ध्वनि नियममा अपवाद छैन भन्ने मत यिनको पनि छ ।

भाषामा सादृश्यको महत्वमा गाढ चर्चा गर्ने हर्मन पाल हुन् । पालले "भाषा परिवर्तनका के के कारण छन् ?" यी कसरी कार्य गर्दछन् ?" र "यी कारणहरूको वर्गीकरण कसरी गर्न सकिन्छ ?" इत्यादि प्रश्नहरूमा प्रामाणिक पुस्तकहरू लेखेका छन् । यिनीले वाक्यमा पनि विचार गरेका छन् ।

ध्वनिको संबन्धमा अस्थाफ, एडलग, कालिट्ज बार्थोलोमे, वेरण्टेल, फोर्टूनेटोल मेंल्लेट, हिटेस्ट्रेटवर्ग आदिले पनि काम गरेका छन् ।

ध्वनिको प्रयोगात्मक काम गर्नेमा रोजापेल्ली, ओकले कोट्स, स्क्रिपच्चर ह० डी० जोन्सनका नाम प्रसिद्ध छन् ।

माइकेल ब्रोलले अर्थसंबन्धी गाढ अध्ययन गरेका छन् । ओर्टरर टकरले पनि यसमा लेखेका छन् ।

वेस्टाफल र सीवर्स दुई विद्वानले छन्द बारे लेखेका छन् । हाल चीनी भाषाका विशिष्ट अध्ययनका विद्वान एटसिलाझले, विलियम्स, लेग्, श्लेगेल, गाइन्तस, शांवान र कार्लग्रेन छन् । यी मध्ये कार्लग्रेनको कार्य ज्यादै छ ।

अफ्रीकी भाषामा रीनिश, ब्लीक, क्राफ्ट र टोरेड इत्यादि छन् । सेमेटिकमा हौंप्ट, वार्थ, ब्रोकेलमान आदि छन् । वूँडल, व्रन्दीय,; ब्लूमफील्ड र जेस्पर्सन इत्यादि अमेरिकी र युरोपीय विद्वानहरू पनि प्रसिद्ध छन् । जेस्पर्सनको ग्रन्थका कार्य सामान्य प्रगतितर्फमा ज्यादै महत्वको छ । ब्लूमफील्डको कार्य पनि प्रशंसनीय छ ।

**नवयुगका विचारहरू** :—भाषाको उत्पत्ति बारेमा भाषाको उत्पत्तिमा विचार गर्नु अनावश्यक ठहरियो । पेरिसको भाषाविज्ञान समितिले यसमा विचार गर्न ऐनी प्रतिबन्ध पनि लगायो ।

प्रत्ययलाई मूल शब्दको शेष मात्र हो भन्ने निश्चय विचार गरेर मूल शब्दको खोजी गर्ने प्रयास छुटेर गयो ।

तालव्य नियम फेला परेकोले ध्वनिसम्बन्धी समस्याहरू र अपवादहरू हल भएर गए । संस्कृत मूल भाषाको ज्यादै नगीच छ, भन्ने विचारमा पनि केही प्रभाव पाऱ्यो ।

ग्रासम्यान, बर्नर नियमले ग्रिम नियमका अपवाद कम गरे ।

मूल भारोपीय भाषाका अ, एँ, आ तीन स्वर बारेमा मत यकिन भयो । गुण र वृद्धिका रूपलाई नै शुरू रूप ठानियो । धातु मूल रूप होइन भन्ने नै ठहरियो ।

प्राचीन विद्वानको मत ध्वनि-नियममा अपवाद हुन्छ भन्ने थियो तर नव-युगमा ध्वनि नियम विना अपवादले चल्दछ भन्ने मत प्रतिपादन भयो । अपवाद, अपवाद होइनन् केवल अरू नियमका उदाहरण मात्र हुन् भन्ने ठहर भयो ।

भाषाको विकासमा सादृश्यको ठूलो स्थान छ भन्ने विचारमा नयाँ विद्वानले जोड दिए । यसको श्रेय पाललाई नै छ ।

भाषा परिवर्तनका कारण वाक्य र रूप इत्यादिमा पनि विचार भए ।

यन्त्रको सहायताले भाषाको ध्वनि आदिको वैज्ञानिक अध्ययन शुरू भयो । यस किसिमको अध्ययनले भ्रान्तिहरू हटेर गए ।

छन्दको तुलनात्मक अध्ययन विशेष महत्वको हुन थाल्यो ।

प्राचीन भाषाको भन्दा जीवित भाषाको अध्ययनमा ज्यादा जोड दिन थालियो । यसले गर्दा विभिन्न वर्तमान भाषाहरूको अध्ययन हुन लाग्यो ।

भाषाविज्ञानलाई मनोविज्ञानको अध्ययन जरूरी छ भन्ने विचार बढ्यो ।

भाषाको व्याकरणको अध्ययनमा जोड नदिएर बोल्ने मानिसको दृष्टिकोणबाट भाषाको अध्ययन शुरू भयो । अर्थात् व्याकरणको बन्धनको मात्रा वास्ता नगरेर भाषाको बोलचालको चलनको दृष्टिकोण अध्ययनको विषय बन्यो ।

बोलीहरूमा शब्दहरूका सट्टापट्टा बारेमा अध्ययन हुन थाल्यो । यस सट्टा पट्टाको अध्ययनले भाषा विकासको अध्ययन गर्न मद्दत भयो । विशुद्ध भाषा प्राप्त हुन असम्भव छ, सबै भाषामा अरू भाषाको केही न केही प्रभाव परेको हुन्छ भन्ने विचार चल्यो ।

भाषालाई एक व्याकरण बनाएर सधैं बाँध्ने काम गलत हो भन्ने विचार फैलियो। भाषा स्वभावैले विकसित हुने कुरा हो भन्ने साबीत भयो र नवरूपको स्वागत हुन थाल्यो। जन भाषाको आदर र अध्ययन पनि बढ्यो। प्रति दश वर्षमा एक नयाँ व्याकरण बनाउनुपर्छ भन्ने चलन पनि भयो। विकसित राष्ट्रहरूमा भाषालाई पुरानो व्याकरणको ठिंगुरो ठोकेर राख्ने चलन हट्तै गयो र साहित्यिक भाषा र जन भाषाको विभिन्नतामा घट्तै गयो। व्याकरण केवल एकता र सरलताका निमित्त मात्र हो भन्ने प्रबृत्ति बढ्यो।

जीवित भाषा र मृत भाषा दुवैको अध्ययन र उच्चारणको अध्ययन यन्त्रबाट हुन लाग्यो। अनेक यन्त्रको प्रचुर मात्रामा प्रयोग हुन लाग्यो। प्रयोगात्मक भाषाविज्ञानमा ज्यादा जोड दिने झुकाव देखिन लाग्यो। मातृभाषाको अध्ययन, विदेशी भाषाको अध्ययन, अनुवाद कला, उच्चारण सुधार र लिपि सुधारमा भाषा पंडितहरूको निकै चाख बढेको स्पष्टसाथ देखिन्छ। शैलीविज्ञान, मनोभाषाविज्ञान र समाज भाषाविज्ञानले आफ्नो-आफ्नो विषयलाई आधार मानेर भाषाको क्षेत्रमा प्रगति गर्दै अन्य विषयहरूलाई समेत सहायता गरिरहेछन्। वर्तमान युगमा प्रगतिशील समाजलाई भाषा विज्ञानले बृहत् सेवा गरेको छ। यो सेवामा अक्ष वद्धि हुँदै जानेछ।

●

## तेस्रो अध्याय

# लिपिविज्ञान

### लिपि, उत्पत्ति र विकास

भाषाको उत्पत्ति र विकासको साथसाथै लिपिको उत्पत्ति र विकास भएको होइन। भाषाको जन्म र केही विकास भएपछि मात्र लिपिको जन्म भएको देखिन्छ। लिपिको जन्म र विकासका प्रमाणहरू निकै पाइएका छन्। भाषाको जन्म र विकास जस्तै अनिश्चित लिपिको जन्म र विकास छैन। भाषाले विकसित भएर लिपि मार्ग अपनाउन धेरै लामो समय लिएको बुझिन्छ।

### उत्पत्ति

धार्मिक मानिसहरू ईश्वरले भाषा र लिपि बनाएर तयार पारेर मानिसहरू-लाई दिए भन्ने विचार गर्दछन्। यो किसिमको विचार सब जाति र देशका मानिसमा देखिन्छ। हिन्दूहरूको विचारमा ब्राह्मी लिपि श्री ब्रह्माजीले स्वयं बनाएर दिनुभयो भन्ने छ। अरू धर्मावलम्बीहरूको पनि विचार यस्तै छ। ईसाई क्याथलिकको र मुसलमानको पनि बाइबिल र कुरानको लिपिबारे यस्तै विश्वास छ। यहूदीहरूलाई श्री मोजेजले, बेबिलोनियाका मानिसहरूलाई श्री नोवेले, यूनानीहरूलाई श्री हर्मेसले र मिश्र देशका मानिसलाई श्री थोथले लिपि बनाई दिए भन्ने विश्वास गर्छन्। तर यो विश्वास विज्ञानका आधारमा छैनन्। जसरी भाषा मानिसको प्रयत्नबाट सिर्जना भयो उसै गरी लिपि मानिसको प्रयत्नबाट बिस्तारै सिर्जना भएको देखिन्छ। यसमा यो कुरा त साँचो हो कि मानिसलाई भाषाको लिपि बनाउन सक्ने विशेष बुद्धि ईश्वरबाटै प्राप्त भएको हो, तर तयारी भाषा या लिपि ईश्वरबाट प्राप्त भएको होइन। ईश्वरबाट या प्रकृतिबाट प्राप्त भएको बुद्धिको जोडले मानिसले आवश्यकताअनुसार भाषा या लिपिको बिकास गर्दै लग्यो भन्नु उचित छ। मानिसको समाज जति प्राचीन छ करीब त्यत्तिकै पुराना गाई, गधा, ऊँटको बथान पनि छ। गाई आदिको बथानले न समाज बनाउन सक्यो न लिपि सृष्टि गर्न सक्यो। मानिसमा विशेष बुद्धि ईश्वरले या प्रकृतिले नै प्रदान गरेको छ।

लिपिको जन्मदेखिको सबै कुरा यथार्थ आजसंम पत्ता लागेको छैन । तर शुरूमा लिपि कसरी समाजमा चलनमा आयो यसको विषयमा केही सामग्री फेला परेको छैन । तिनै सामग्रीहरूको आधारमा लिपिको विकासको विभिन्न अवस्थाको अनुमान गर्न सकिन्छ । मानिसले संझनाका निमित्त कुनै लट्ठी डोरी, डोरीमा गाँठो राखेर र बाङ्गो-टिङ्गो रेखा र अपूर्ण चित्र खिचेर काम चलाए होलान् । बिस्तारै यसैको विस्तार भएर लिपि बन्यो होला भन्ने पनि विचार छ ।

## ( क ) सूत्र-लिपि

सूत्र लिपि सबभन्दा प्राचीन लिपि हो भन्ने एक मत पनि छ । यसलाई ग्रंथि लिपि पनि भन्दछन् । यो विचारवादी मानिसहरूको मतमा शुरूमा मानिसहरू धागोको, डोरीको, रूखको बोकाको नसाको या लहराको गाँठो पारेर कुरा या काम या भाव संझने गर्दथे । हाम्रै नेपाली समाजमा पनि आजसम्म बिर्सने बानी हटाउन मानिसको तनामा या पछ्यौराको टुप्पोमा गाँठो पार्ने चलन छ । प्राचीन समयमा विभिन्न किसिमका कुराहरू या कामहरू अथवा भावहरूको याद गर्नुपरेमा मानिसहरू विभिन्न रंगका चीज जस्तै मूगा, मोती, सीप, इत्यादि विभिन्न गाँठाहरूभित्र हालेर याद गर्दथे । यो चलन चीनमा प्रागैतिहासिक समयमा ज्यादै थियो भन्ने अनुमान हुन्छ ।

पीरुको क्विपू ( Quipu ) लिपि, सूत्र लिपिमध्ये विशेष महत्वको छ । दुई फीटभन्दा केही लामो दर्विलो किसिमको एक प्रकारको डोरीलाई पीरूमा क्विपू भन्दथे । यही क्विपूमा धेरै किसिमका धागाहरू बाँधिएका हुन्थे । यो चलन पाँचौं सदीका हेरीडोटसले शुरू गरेको बुझिन्छ । विभिन्न रङ्गका धागाहरूमा गाँठा पारेर विभिन्न भाव जनाउने चलन थियो र यिनै गाँठाहरूबाट संख्याको काम पनि लिइन्थ्यो । सेतो रङ्गको धागोको गाँठोले शान्ति र रातो रङ्गको गाँठोले युद्ध जनाउँथ्यो । हाम्रो नेपाली समाजमा आजसम्म पनि सेतो रङ्गले विद्या, शान्ति, यश र रातो रङ्गले भोग विलास र कडापन जनाउँदै छन् । पीरूमा गंभीरता र अनन्तता नीलो रङ्गले जनाउँदथियो । श्री विष्णुको वेद पुराण इत्यादिमा पनि यही कालो-नीलो वर्णको बयान पाइन्छ । यी कुराबाट कुनै समयमा हाम्रो समाजमा पनि सूत्र लिपिको चलन थियो भन्ने अनुमान हुन्छ । पीरूको क्विपू लिपिमा प्राचीन हिन्दू प्रभाव देखिन्छ । फेरि अक्षरलाई नेपालीमा 'वर्ण' भन्ने पद प्रयोग हुन्छ र पहिलो अक्षर सिक्ने पुस्तकलाई 'वर्णमाला' भन्दछन् । वर्णको माने रङ्ग हो । यसबाट यो देखिन्छ कि पहिले 'वर्ण' ( रङ्ग ) बाट भाव प्रकाश गर्ने काम लिइन्थ्यो । पछि यही काम अक्षरले दिन थालेपछि अक्षरलाई पनि 'वर्ण' भनियो । संस्कृतमा संक्षिप्त नियमलाई सूत्र भन्ने चलन छ । यी सूत्रहरूमा व्याकरणका नियमहरू याद गर्न धेरै सजिलो हुन्छ । पहिले सूत्र ( डोरी ) बाट भाव याद गर्ने चलन भएकोले यी छोटकरी नियमहरूलाई पनि सत्र भनेको बुझिन्छ ।

पीरूमा क्विपूबाट भाव प्रदर्शन गर्ने चलन खास सरकारी अड्डाखानामा र सन्धि-पत्रमा हुन्थ्यो। आजसम्म पनि पीरूमा यही लिपिमा लेखिएको एक अत्यन्त प्राचीन पुस्तक छँदैछ र यसमा सेनाको वर्णन छ। तर यो राम्ररी सबै पढ्न आजसम्म कोही समर्थ भएका छैनन्।



( पीरूको क्विपू नामक''''सूत्रलिपि )

——२७१——

शुरूमा भाषामा वाक्य नै प्रधान हुन्छन्। यी रज्जु या गाँठाहरूले पनि एक पूरा वाक्य नै बताउँदथिए। यी रज्जुहरू या गाँठाहरूका संबन्धहरू भावहरूका साथ मात्र थिए, र ध्वनिसाथ थिएन भन्ने बुझिन्छ। यो भाव समाजमा स्वीकार थिए र वर्तमान लिपि जस्तै यी रंगहरू या गाँठाहरूका अर्थहरू पनि याद राख्नुपर्दथ्यो। चीन र तिब्बतमा पनि सूत्र लिपिको चलन थियो। बंगालको संथाल र केही जापानी टापूमा पनि सूत्र लिपिको चलनका केही रूपहरू पाइन्छन्।

## ( ख ) रेखा लिपि

सूत्र लिपिको साथसाथै रेखा लिपिको प्रचार पनि भएको बुझिन्छ । सूत्र र रंग नपाइने ठाउँमा रेखा लिपिको प्रयोग भएको देखिन्छ । अफ्रिकाका केही जातिहरूमा आजसम्म पनि यसको चलन पाइन्छ । वर्तमान लिपिको केही अंश यही रेखा लिपिबाट विकास भएको हो । खास गरेर अंकहरू रेखा लिपिबाटै उत्पन्न भएका हुन् । जस्तै— (—) बाट (१), (═) बाट (२), (≡) बाट (३), र (+) बाट (४) इत्यादि नेपाली अंकहरू ।

फारसी अंक पनि यही किसिमबाट निक्लेको देखिन्छ । जस्तै ۱ ۲ ۳ इत्यादि ।

अंग्रेजीमा पनि यस्तै देखिन्छ । जस्तै 1. 2. 3. ।

रोमन अंकले त स्पष्टै साबीत गर्छ । जस्तै I, II, III, IIII, रोमन अंकमा पहिले पाँचको अंक लेख्ता हातको पंजाको पाँच रेखाको आकार लेख्ने चलन थियो । पछि यही पंजाको रेखा आकारमा चित्र लिपिको प्रभावबाट पंजाको चित्र निमित्त V लेख्ने चलन चल्यो । फेरि पछि अनेक अदली बदली सरलताका निमित्त भयो । प्राचीन समयमा यी रेखाहरू पत्थर, माटो र काठमा कोर्ने चलन थियो ।

## ( ग ) चित्र लिपि

लिपिको इतिहासमा सूत्र लिपि, रेखा लिपि, पछि चित्र लिपिको स्थान आउँछ चित्रद्वारा भाव प्रकाश गर्ने चलन आजसम्म पनि छँदैछ । खास गरेर हाम्रो काठमा कुँदिएका बुट्टाहरूले अनेक भाव जाहेर गर्छन् । हाम्रा देव देवीका मूर्तिहरूका अनेक आकारका चिह्नहरूबाट पनि अनेक भाव प्रकट हुन्छन् । जस्तै वर र अभय मुद्राबाट लाभ र रक्षाको भाव प्रकट हुन्छ । श्री गणेशजीको मूर्तिबाट सफलता प्रकाश हुन्छ र प्राचीन चित्र लिपिको एक पूरा साधन मिल्दछ । हाम्रा देवीका मूर्तिहरूका आकार चिह्नका भावमा विचार गरे पनि हामीलाई एक पूर्ण चित्र लिपिको इतिहास मिल्दछ । नक्शा र पात्राहरूमा चित्रद्वारा भाव प्रकट गर्ने चलन आजसम्म पनि चलेकै छ । पूजा गर्ने यन्त्रबाट त यो कुरा झन् स्पष्टै हुन्छ ।

बचे खुचेको पुरानो चित्र लिपिको शेष चिनो स्कटल्याण्ड, क्यालिफोर्निया, मिश्र, फ्रांस, नेपाल इत्यादि देशहरूमा पनि पाइन्छन् । फलेक, रूखको बोक्रा छाला र पत्थरमा पहिले चित्र लेख्ने चलन भएको देखिन्छ ।

चित्र लिपि ज्यादै व्यापक भएको बुझिन्छ । सूत्र लिपि रेखा लिपिबाट भन्दा चित्र-लिपिबाट भाव ज्यादै सरलतासाथ प्रकट हुन्थ्यो र एकै चित्रबाट विभिन्न देश या जातिका मानिसहरूले एकै भाव स्पष्ट संझन्थे । यसैले यसको चलन ज्यादै भएको

थियो । शुद्ध चित्र-लिपिले अन्तर्राष्ट्रीय भाषाको काम दिएको बुझिन्छ । मानिसको शुद्ध चित्र या गाईको शुद्ध चित्रबाट एकै भाव सबै देशका मानिसले सरलै साथ संझन्थे । यो लिपिमा केही अवगुणहरू पनि थिए । (क) जीवधारीको या वस्तुको चित्रबाट जीवधारी वा वस्तु जनाउन सजिलै थियो तर कुनै भाव या विचार चित्रद्वारा प्रकट गर्न ज्यादै कठोर थियो । (ख) कुनै मानिसमा मानिस जातिलाई मानिसको चित्र बनाएर जनाउन सजिलै थियो तर राम, कृष्ण इत्यादिका विभिन्न विशेष चित्रहरू बनाएर निज निजलाई जनाउनु पनि ज्यादै गाह्रो पर्दथ्यो । व्यक्तिवाचक संज्ञा जनाउने कुनै साधन देखिदैन । (ग) हतपतमा यी चित्रहरू लेख्न सकिदैन थियो र समय, दया, शान्ति बुझाउने चित्र लेख्न ज्यादै धेरै सयय लाग्दथ्यो र सबैलाई एकै चित्रले उक्ति भाव स्पष्ट जनाउँदैनथ्यो ।

## चित्र लिपिको असर

संसारभरका सबै प्रसिद्ध भाषाहरू चित्र लिपिबाटै विकास भएका देखिन्छन् । यसका धेरै प्रमाणहरू पाइन्छन् । तर यो विकासका निमित्त अत्यन्तै धेरै कालसम्म लिपिले अनेक पिढीबाट गुज्रनुपरेको देखिन्छ । तर अङ्कमा त रेखा लिपिकै असर स्पष्ट देखिन्छ भन्ने कुरा अघि नै लेखिएकै छ । ब्राह्मी लिपि पनि चित्र लिपिबाटै विकास भएको हो भन्ने विचार पनि छ । तर प्रमाण आजसम्म प्राप्त हुन सकेको छैन ।

## ( क ) विचार चित्रण

चित्र लिपिको शुरूमा एक वस्तु या एक विचारका निमित्त एक चित्र बन्दथ्यो । विचार प्रकट गर्ने चित्र विशेष रूपको हुन्थ्यो । मिस्र देशमा प्यास प्रकट गर्न पानीको समीपमा बाछोको चित्र बनाउने चलन थियो । चीनमा मित्यारीका निमित्त एक हातले अर्को हातमा समातेको तस्वीर बनाउने चलन थियो । एक यस्तो चित्रले पूरा एक वाक्यको काम दिन्थ्यो । पछि केही समयपछि एक शब्दका निमित्त एक अलग चित्र बनाउने चलन चल्यो । यो अवस्थामा एक वाक्य पूरा गर्न धेरै चित्रहरू बनाउनुपर्दथ्यो; यी चित्र-वाक्यको या चित्र-शब्दको समयमा पूरा पूरा चित्र लेख्ने चलन समयको अभावले गर्दा कम हुँदै गयो र चित्र खिएर एक संकेत चिन्हसम्म बाँकी रहन थाल्यो । यही संकेत चिन्हबाट पूरा चित्रको रूप संझने चलन चल्यो । जस्तै शुरूमा पहाड बुझाउन चीनमा पूरा पहाडको चित्र [पहाडको चित्र] लेख्ने चलन थियो तर यही चित्र पछि घसिटिएर चित्र शब्दको समयमा केवल ( ⊥ ) चिह्न मात्र पहाडका निमित्त प्रयोग हुन थाल्यो । यही किसिमसंग सबै चित्रको रूप घसिटिएको र खिएको अनुमान हुन्छ । शब्द-चित्रको समयमा यिनै घसिटिएर बाँकी रहेका प्रतीक चिह्नहरूको याद गरेर मानिसहरूले काम चलाएको बुझिन्छ ।

## ( ख ) ध्वनि लिपि

चित्र लिपिमा ध्वनिको स्थान थिएन र व्यक्तिवाचक नामको चित्र बनाउने उपाय थिएन भन्ने इत्यादि कुरा माथि चित्र लिपिमा लेखिएकै छ। पछि जातिवाचक संज्ञाको चित्रबाटै व्यक्तिवाचक नाम चित्र रूपमा लेख्ने चलन चलेको देखिन्छ। यसको एक स्पष्ट उदाहरण मैक्सिकोको राजा 'इत्जकोल्ल' को नाममा पाइन्छ। मेक्सिकी भाषामा 'इत्ज' को अर्थ चक्कू र 'खोल्ल' को अर्थ सर्प हुन्छ। राजा इत्जकोल्लको नाम लेख्दा चक्कू र सर्पका चित्रहरू जोडेर लेख्ने चलन चलेको त्यस समयमा देखिन्छ। यो नामका निमित्त जोडेर लेखेको चक्कू र सर्पको अर्थ चित्र र अर्थसाथ थिएन केवल ध्वनिसाथ थियो। यस्तै किसिमबाट संकेतबाट ध्वनि निकाल्ने चलन चल्यो र ध्वनिको पनि विकास हुँदै गयो। केही समयपछि एकै किसिमको ध्वनिका निमित्त एकै चिह्नको प्रयोग हुन थाल्यो। यसको चलन मिश्र चीनमा पाइन्छ। धेरै पछि शब्दमा फरक फरक ध्वनि या अक्षर रहेछ भन्ने पत्ता लागेको देखिन्छ। यही फरक ध्वनि या अक्षर जनाउन ध्वनि चिह्नको फेरि सहारा लिनुपरेको देखिन्छ। जस्तै संस्कृत भाषामा पहिलो वीणाका निमित्त ( ȣ ) यस्तो चिह्न को प्रयोग हुन्थ्यो। पछि अक्षरको ज्ञान भएपछि यो ( ȣ ) वीणाको चिह्नमा 'd', 'व' को ध्वनि भएकोले 'व' अक्षर या ध्वनिका निमित्त यही ( d ) चिन्ह प्रयोग हुन थाल्यो। केही समयपछि यही चिन्हबाट 'व' अक्षरको विकास भएको बुझिन्छ। केही अङ्क बाहेक अरू धेरै-जसो अक्षरको विकास चित्र-लिपिबाटै भएको देखिन्छ। जस्तै अंग्रेजीमा चित्र लिपिको समयमा चित्रले अंग्रेजहरू अहोम भन्ने चरा जनाउँथे। पछि यही चित्रको केही अंश केवल चराको ठुँडले  मात्र ( A ) अक्षर जनाउने चलन भयो। यही चित्र पछि A बन्यो। यस्तै इतिहास ( L ) ( एल् ठूलो अक्षर ) को पनि देखिन्छ। पहिले सिंहिनीको टाउकाको चित्र लेख्ने चलन थियो। यही चित्र खिएर केवल ( L ) मात्र बाँकी रह्यो।

धेरै मानिसहरूका निमित्त दुरुस्त चित्र बनाउन ज्यादै गाह्रो काम थियो। त्यसैले यस लिपिमा ज्यादै चाँडो परिवर्तन आयो। फेरि चित्र बनाउन जान्ने मानिस-हरूले अनेक किसिमका बुट्टादार चित्र बनाउन थाले यसैले पनि लिपिमा परिवर्तन ल्याउन मद्दत गऱ्यो। मानिसहरूलाई शीघ्रता निकै प्रिय देखिन्छ। यही शीघ्रतासाथ लेख्ने इच्छाले कलमको टाँका नउठाई लेख्ने बानी पार्दछ। शीघ्रतासाथ कलम नउ-ठाई लेख्ने बानीले अक्षरको काममा उलट पुलट गर्दछ।

चित्र लिपि विकसित भएर ध्वनि-लिपि बन्दछ र कुनै स्थान र अंशमा भाव लिपि पनि बन्छ। ध्वनि लिपिका दुई रूप हुन्छन्। अक्षरात्मक र वर्णात्मक। अक्षरा-त्मक लिपिमा चिन्हले ( क्+अ ) अक्षर मात्र जाहेर गर्छ र वर्ण जाहेर गर्दैन।

वर्णनात्मक लिपिले वर्ण मात्र बताउँछ। जस्तै 'क्' मात्र। नागरी लिपि अक्षरात्मक छ। रोमन लिपि वर्णात्मक छ। जस्तै J ( जे ) र K ( के ) 'ज्' र 'क्' मात्र क्रमशः हुन्। नेपाली लिपि पनि अक्षरात्मक छ। अरबी, फार्सी र बंगाली पनि अक्षरात्मक छन्। अक्षरात्मक लिपि लेखपढको प्रयोगमा सुगम हुन्छ। भाषा विज्ञानको दृष्टिबाट ध्वनि विश्लेशणमा वर्णनात्मक लिपि सुगम छ भन्ने मत पनि केहीको छ।

मूल लिपिहरू दुई किसिमका छन्—( १ ) वर्णन हुने। जस्तै—क्यूनिफर्म, चीनियाँ, हिहाइट आदि। ( २ ) अक्षर वा वर्ण हुने। जस्तै—रोमन, देवनागरी, फोनोशियन, खरोष्ठी, हिब्रू आदि।

## संसारका प्रधान लिपिहरू

### ( १ ) चीनियाँ लिपि

चीनमा धेरै प्राचीन कालदेखि नै सूत्र लिपिमा भाव प्रकट गर्ने चलन थियो। सूत्र-लिपिमा भाव प्रकट गर्न सरल नभएकोले र फेरि यो आवश्यकताअनुसार नभएकोले पनि चीनियाँहरू चित्र-लिपितर्फ ढल्केका हुन्। शुरूमा चित्र लिपिमा विशेष भाव या सूक्ष्म भाव प्रकट गर्ने तरीका पनि निकालियो। पहिले एक चित्रले पूरा एक वाक्यको काम दिन्थ्यो। धेरै पछि शब्दका निमित्त पनि चित्र बन्न थाल्यो। यो चित्र-लिपिको संबन्ध ध्वनिसाथ नभएर भाव ( अर्थ ) का साथ मात्र थियो। अन्यत्रको जस्तो चीनको यो चित्र-लिपि ( Ideogram ) मा विकास भएर ध्वनि लिपि ( Pondgram ) मा विकसित हुन सकेन। ध्वनि लिपिमा विकसित हुन नसकेकोले प्रत्येक भाव जाहेर गर्न एक स्वतंत्र चित्र चिन्हको जरूरत पर्‍यो। यसैले ज्यादै धेरै चित्र-चिह्नहरू खडा हुन गए। एक समयमा यी चित्र-चिह्नहरूको संख्या ज्यादै बढता भयो। हजारौं चित्रचिह्न याद गरेर काम चलाउन ज्यादै कठोर भएकोले एकै चित्र-चिह्नबाट धेरै कुरा ( अर्थ ) जनाउने चलन चल्यो। यस्ता शब्दलाई समध्वनीय-भिन्नार्थक शब्द ( Homophone ) या ( Homonym ) भन्दछन्। यी चित्रहरू बिस्तारै बिस्तारै घसिटिएर कसरी चित्र-चिह्न मात्र भए, त्यो व्याख्या ( क ) विचार चित्रणको दफामा माथि नै भै सकेको छ। यो परिवर्तन ईसाभन्दा दुई हजार वर्षअगाडि भएको बुझिन्छ। वर्तमान समयमा चीनका यी चित्र-चिह्नहरूको संख्या करीब पाँचसय छन् र करीब चालीस हजार अर्थ प्रकट गर्छन्। अर्थ स्पष्ट गर्नलाई र भ्रम रोक्नलाई चित्र-चिह्नको नजीकै अर्को चिह्न थप्ने चलन पनि छ।

जापानीले चीनबाट यही लिपिलाई अपनाएर ध्वनिमूलक बनाए तर चीनमा यो कुरा हुन सकेन। आजसम्म पनि चीनिया भाषामा कुनै विदेशी शब्दको नाउँ पहिले आफ्नै चीनियाँ भाषामै उल्था नगरी लेख्न सकिंदैन।

## ( २ ) मिस्री-लिपि

चीनमा जस्तै मिस्रमा पनि ज्यादै प्राचीन अवस्थामा नै चित्र लिपिको चलन देखिन्छ । तर मिस्रले यस चित्र-लिपि ( भाव-लिपि ) लाई हटाएर अक्षर लिपि ( ध्वनि लिपि ) मा विकास गऱ्यो ।

## ( ३ ) यूनानी-लिपि

प्राचीन समयमा फोनेसियनहरूको मिस्र देशसित व्यापार चल्थ्यो । यिनीहरूले मिस्रको लिपिलाई लिएर त्यसमा थपघट गरेर आफ्नो काम चल्ने पारे । मिस्रबाट फोनिसियनहरूले सापट लिएको समयमा मिस्रमा केवल २२ अक्षर मात्र भएको बुझिन्छ । फोनेसियन चिन्ह ( अक्षर ) लाई केही समयपछि यूनानीहरूले अपनाए र विकास गरे । यूनानीहरूले यसमा धेरै नै थपघट गरेको अनुमान हुन्छ । वर्तमान यूरोपका सबै लिपिहरू यूनानी लिपिबाटै विकास भएका हुन् ।

## ( ४ ) अरबी लिपि

अर्मेनियनले मिस्री लिपि नै अपनाएको देखिन्छ । अर्मेनियन लिपिबाट अरबी र इरानी लिपि विकास भएका देखिन्छन् । हिन्दूको ब्राह्मी-लिपि पनि यही लिपिहरू-बाट विकास भएको हो भन्ने केही विद्वानको मत छ । तर यो कहाँसम्म सत्य हो यस कुराको निर्णय भएको छैन । यो विचार निराधार बुझिन्छ ।

## ( ५ ) सुमेरी

मेसोपोटामियाका सुमेरीहरूले पनि चित्र-लिपि धेरै अगाडि नै विकास गरेको देखिन्छ । सुमेरीहरू काँचो ईंटमा सोझो रेखा कोरेर काम चलाउँदथे । केही पछि यी रेखाहरू चिह्न मात्र बने । इरानमा यस लिपिको प्रचार पनि कहीं-कहीं देखिन्छ । जस्तै राजा दाराको कीलाक्षरलेख यही लिपिमा छ ।

## ( ६ ) हिन्द

भारतमा मोहनजोदडो र हडप्पामा एक अत्यन्तै अनौठा लिपि-लेख प्राप्त भएको छ । यो लिपि ब्राह्मी या खरोष्ठीसंग मिल्दैन र ईसवी सन्‌भन्दा धेरै हजार वर्षअगाडिको अनुमान हुन्छ ।

## ( ७ ) नेपाली

नेपाली तराईंको पिप्रावामा अशोकको शिलालेखभन्दा अगाडिको टुक्रा शिला-लेख पाइएको छ । यो शिला-लेखको लिपि अशोकको शिलालेखको लिपिभन्दा धेरै अगाडिको प्रतीत हुन्छ । नेपालको पिप्रावा शिला-लेखमा श्री बुद्धदेवको अस्थि, शाक्य जातिले मिलेर त्यही ठाउँको स्तूपमा गाडेको बयान छ । यस लेखलाई श्री बूलरले

अशोकको समयभन्दा अगाडिको मानेका छन् । यो लेख बुद्धदेवको निर्वाण-काल अर्थात् ई० स० पूर्व ४८८ तिरको हुनुपर्दछ ।

भारतमा दुई लिपिहरू स्पष्ट देखिन्छन् ब्राह्मी र खरोष्ठी । यी लिपिहरूको प्रयोग अशोकको कालमा भएको देखिन्छ । योभन्दा अगाडिको लिपि लेख स्पष्टरूपमा पाइँदैन । युरोपियन पण्डितहरू यी दुवै लिपिलाई विदेशी साबीत गर्न खोज्छन् । खरोष्ठी लिपि विदेशबाटै हिन्दूहरूले लिएको देखिन्छ । तर ब्राह्मी लिपिको संवन्धमा यो कुरा आधारहीन देखिन्छ ।

ब्राह्मी लिपिलाई विदेशी नै हो भन्ने विद्वानहरू हिन्दूहरूको पहिले कुनै लिपि थिएन र विदेशबाटै यो लिपि सरेर हिन्दूहरूमा आएको भन्दछन् ।

फ्रांसका विद्वान कुपेरी चीनियाँ लिपिबाटै ब्राह्मी लिपिको विकास भएको हो भन्दछन् । डा० आर० एन्० शाह यस लिपिको संबन्ध अरबी लिपिका साथ छ भन्दछन् । विल्सन र सेनार्ट यस लिपिलाई ग्रीक लिपिको विकास मान्दछन् । यिनीहरू सिकन्दरको समयमा भारतमा आक्रमण भयो र आक्रमणपछि भारतवासीहरूले ब्राह्मी लिपि यूनानीहरूबाट लिए भन्दछन् । श्री वूहलर, श्री वेवर इत्यादि विद्वानहरू सेमेटिक लिपिबाट यो भारतीय लिपि निक्लेको हो भन्दछन् । वूहलर भारतीले ईसाभन्दा ९०० वर्षअगाडि फोनेसियन व्यापारीबाट १८ अक्षर सिके र पछि २ अक्षर मेसोपोटामियाबाट र अझ पछि आर्मेइकबाट अरू २ अक्षर थपेर ब्राह्मी लिपिको सिर्जना गरे भन्दछन् ।

श्री गौरीशंकर हीराचन्द्र ओझा र के. पी. जायसवाल ब्राह्मी लिपिलाई खास हिन्दूको नै हो भन्दछन् । पश्चिमी विद्वान कनिंघाम कोलब्रूक, फ्लीट आदि पनि यस मतलाई समर्थन गर्छन् ।

श्री वूहलरको बाहेक अरू विद्वानहरूको ब्राह्मी लिपि विदेशबाट आएको हो भन्ने मत निरर्थक देखिन्छ । तर वूहलरको मत पनि अकाट्य छैन । वूहलर ब्राह्मी र खरोष्ठी दुवै लिपि फोनिसियनबाट निक्लेको हो भन्दछन् । खरोष्ठीका आठ अक्षर बिल्कुलै फोनिसियनसित मिल्दछन्, अरू नौ अक्षर पनि केही मिलेका देखिन्छन् र बाँकी ५ अक्षर मात्र मिल्दैनन् । तर ब्राह्मीको एक अक्षर 'ग' मात्र केही अंशमा फोनेसियन अक्षरसित मिल्दछ । यही एक अक्षरको आकारमा केही समानता देखिंदैमा सारा ब्राह्मी लिपि फोनेसियनी नै हो भन्नु निरर्थक छ । एरणको मोहरमा ब्राह्मी दायाँबाट शुरू गरेर बायाँतिर लेखिएको छ । यो गलतीले भएको हो । यस लेखाइको अरू लिपिको स्वभावसाथ सम्बन्ध छैन । यस्तो गलती अरू सिक्कामा पनि भएको देखिन्छ । फेरि फोनेसियन लिपिबाट ब्राह्मी लिपिमा आएका हुन् भन्ने विचार गरिएका अक्षरहरूका उच्चारणहरू दुवै लिपिमा फरक फरक पाइन्छन् । यदि फोनेसियन लिपिबाटै यी अक्षर-

हरू ब्राह्मी लिपिमा सरेका भए यिनीहरूको उच्चारण दुवै लिपिमा एउटै हुनुपर्ने हो, किनकि अनुकरण धेरैजसो उच्चारणको समानताको आधारमा नै हुन्छ। यो भाषाको स्वाभाविक नियम हो।

हिन्दूहरूको लिपि-ज्ञान ज्यादै प्राचीन साबीत हुन्छ। वैदिक कालमै लिपिको चलन थियो भन्ने प्रमाण हामी दश, शत, सहस्र, अयुत, नियुत र प्रयुत इत्यादि शब्द-हरूको प्रयोगबाट पाउँछौं। लिपि नभै यस्तो गन्ने काम गर्न सकिँदैन। फेरि वेदका संहिताहरूको सस्वर पाठ गर्दा उदात्त, अनुदात्त र स्वरित ध्वनिहरूको आधारमा गर्नु पर्छ। लिपि ज्ञानविना यो किसिमको पाठ हुन असम्भव छ। जैन र बौद्ध कालमा लिपिको चलन र विकास धेरै नै भएको थियो। केटाकेटीहरू लिपिद्वारा 'अक्खरीका' खेल खेल्थे। महावग्गबाट ई० पू० पाँचौं शताब्दीमै नै लेखन सिकाउने स्कूलहरू स्थापना भै राखेका देखिन्छन्। पन्नवण सूत्रमा १९ लिपिहरूको र ललित विस्तरमा १४ लिपिहरूको वर्णन पाइन्छ। यी कुराहरूले नै लिपिको प्राचीनतामा प्रमाण दिन्छन्। पाणिनिको अष्टाध्यायीमा 'लिपि' र 'लिपकर' दुई शब्दहरू पनि भारी प्रमाण छन्। ह्यु एन च्वांगले हिन्दूहरूबाट आफैले ६५७ पुस्तकहरू चीन लगेका थिए। लिपिको पूर्ण विकास नभएको भए यस्ता पुस्तकहरू कसरी प्राप्त हुन्थे। मेगास्थनीजले पनि हिन्दू जन्मपत्रको बारेमा लेखेका छन्। संस्कृत व्याकरणहरूमा ध्वनि विवेचन गर्ने चलन ज्यादै पुरानो देखिन्छ। विना लिपि ध्वनि विवेचन हुन सक्दैन। लिपिको पूर्ण विकास भएपछि मात्र ध्वनि विवेचन हुन्छ। यही ध्वनि विवेचनाले नै लिपिको अत्यन्तै प्राचीन इतिहास बताउँदछ।

ज्यादा कंठस्थ गर्ने तर भोजपत्र र ताडपत्रमा लेख्ने चलन थियो। भोजपत्र र तालपत्रका लेखहरू विशेष अवस्थामा मात्र प्रयोग गरिन्थे फेरि जलवायु इत्यादिले गर्दा यी थोरै लेखहरू सडेर र गलेर गए। विदेशीहरूको बराबर आक्रमण हुन थाले पछि बचेका लेखहरूलाई लुकाएर राख्ने आवश्यक पऱ्यो। लुकाएर राखेको अवस्थामा बचेका लेखहरू पनि सडे गलेका बुझिन्छन्। विदेशी आक्रमणपछि पठन पाठनमा पनि सुस्ती आएपछि पुस्तक खोल्ने जरूरत कम भएर गयो। बराबर रेख-देख नभएपछि धेरै कालपछि खोल्दा नष्ट भएर गए। विदेशी आक्रमणले गुरु-आश्रममा बसेर पढ्ने चलन हराउँदै गयो। गुरु आश्रमका पुस्तक निजी सम्पत्ति बने।

निजी सम्पत्ति भएपछि रेखदेख पुग्न सकेन र हकवालाहरूमा विद्याको कमीले पुस्तकको कदर पनि हुन सकेन। कति यस्ता पुस्तक हालसम्म नेपालका कुना कुनाका घरमा बेवास्तासाथ परेर सडेर गलेका पाइन्छन्। कतिले लालचले विदेशीलाई पनि बेचे।

### ( ८ ) खरोष्ठी लिपि।

यो हिन्दूको आफ्नै लिपि होइन। इरानको बादशाह डेरियसको पालामा यो

लिपि भारतमा आयो। भारतको उत्तरी पश्चिमी प्रदेशहरूमा यसको चलन भयो। यो लिपिमा २२ अक्षर मात्र थिए र दायाँबाट शुरू गरेर बायाँतर्फ लेखिन्थ्यो। स्वरको पनि यसमा कमी नै देखिन्छ। जोडे मोरेका अक्षरको चलन पनि देखिदैन। यसका केही शिलालेख आजसम्म पनि पाइँदैछन्। फारसी र अरबी लिपि यहाँबाट निक्लेका हुन्।

यसको नामको बारेमा विद्वानहरूको मत फरक फरक देखिन्छ। कुनै विद्वान यो लिपि खरोष्ट्र प्रदेशमा शुरू भएकोले यसलाई खरोष्ठी भनेको हो भन्दछन्। डा० प्रजिलुस्की गधाको छालामा लेखिएकोले ( खरपृष्ठी ) कहलाइएको हो भन्दछन्। हिब्रूमा खरोशेथ ( Kharoshath ) को माने नै 'लेखोट'.छ भन्ने मत डा० "चटर्जीको छ।"

## ( ६ ) ब्राह्मी

संसारका प्राचीनतम लिपिहरूमध्ये ब्राह्मी पनि एक हो। श्री जायसवालको मतअनुसार यो लिपि २००० ई० पू० नै बनिसकेको थियो। अशोकको शिला लेखमा यसको धेरै प्रयोग देखिन्छ। समयले यसको रूप गुप्तकालसम्ममा केही बदलियो र यसलाई गुप्त लिपि भन्न थाले। फेरि केही समयपछि यही गुप्त लिपिको आकृति केही बदलिएर कुटिल भयो र यसैले यस वर्णलाई कुटिलाक्षर र लिपिलाई कुटिललिपि भन्ने चलन चल्यो। यो कुटिल लिपि छैटौं शताब्दीतिर बनेको जस्तो देखिन्छ।

यही कुटिल लिपिबाट करीब-करीब नवौं शताब्दीतिर शारदा-लिपि निक्लेको देखिन्छ। वर्तमान काश्मीरी र गुरुमुखी लिपिहरू शारदा लिपिमै आधारित भएका जस्ता देखिन्छन्।

आठौं शताब्दीतिर दक्षिण भारतमा नागरी लिपि उत्तर भारततर्फमा भन्दा बढता चलन भएको देखिन्छ। दक्षिण भारततर्फ यो लिपिलाई 'नन्दी नागरी' भन्ने चलन थियो।

नवौं र दशौं सदीसम्म नागरी लिपि पूर्णतः आजकलको रूपको देखिदैन। यो सदीमा अ, आ, घ, प, म, य, ष तथा स का शिर दुई भागमा विभक्त देखिन्छन्। एघार सदीमा यी दुवै भागलाई मिलाएर एउटै शिररेखा दिने चलन चल्यो। एघार सदीपछि इ, ध, ए, ऐ, ओ तथा औ बाहेक प्रायः अरू शेष अक्षरमा केही रूप बदलिएको छैन।

नागरी शब्दको व्युत्पत्तिको सम्बन्धमा धेरै मतहरू छन्। ती मतहरू तल लेखिएका छन्।

( क ) नगरहरूमा पहिले पहिले प्रचलित भएकोले नागरी भनेको हो भन्ने एक मत छ।

( ख ) एक थरका नागर ब्राह्मणहरूले यो लिपि पहिले प्रयोग गरेकाले यसलाई नागरी भनेको हो भन्ने अर्को मत छ ।

( ग ) पहिले तान्त्रिक यन्त्रलाई 'देवनगर' भन्ने चलन थियो । यही चिह्नसाथ यस लिपिको सादृश्य भएकोले यसलाई देवनागरी भनेको हो ।

( घ ) ज्यादै प्राचीन कालमा देवताहरूको प्रतिमा बनेका थिएनन् । मानिसहरू प्रतिमाको सट्टामा अनेक आकारका चिह्नहरू लेखेर पूजा गर्दथे । यी देवचिह्नहरू बिस्तारै बिस्तारै कालान्तरमा उच्चारणध्वनिसूचक लिपि चिह्नहरू बने भन्ने मत श्री आर० शामा शास्त्रीको छ ।

नागरी लिपिबाटै नेपाली, बंगाली, आसामी, मैथिली, उडिया, कैथी, महाजनी, राजस्थानी र गुजराती लिपिहरू विकास भएका हुन् । पश्चिमी लिपिहरू जस्तै काठिया-वाडी, खानदेशी, मैसूरी इत्यादि र मध्य प्रदेशीय लिपिहरू पनि विकास भएका हुन् । दक्षिण भारतका ग्रन्थि, तेलुगू र कन्नड लिपि पनि यसैका शाखाहरू हुन् ।

ब्राह्मी लिपिबाट देवनागरी लिपि समयले गर्दा ज्यादै भिन्न भयो । यो क्रमिक विभिन्नताहरू तलका केही वर्णहरूका चित्र-उदाहरणहरूबाट झल्कन्छन् ।

## ( १० ) नेपाली देवनागरी लिपि

नेपाल राज्यभरको राष्ट्रलिपि नेपाली देवनागरी हो भन्ने कुरा निर्विवाद छ । तर यस लिपिलाई यन्त्रको ( टाइपराइटर, लाइनो टाइप इत्यादिको ) र निःशुल्क र अनिवार्य शिक्षाको लिपि बनाउनलाई केही सरलतापूर्वक झुकाउन सकिन्छ । यो सरलता तर्फ झुकाउन सरल छ । तर यसले लिपिको वैज्ञानिक परम्परामा ठूलो धक्का दिन्छ । इ, ई, उ, ऊ, ए, ऐ, यी वर्णलाई हटाएर केवल एक 'अ' वर्णबाटै यी वर्णहरूको काम समेत लिन सकिन्छ जस्तै—आ, अि, अी, अु, अू, अे, अै, ओ, औ, अं, अः ? 'अ' मा मात्राको प्रयोग गरेर ई, इ, उ, ऊ, ए, ऐ, को बचत गरेर काम चल्दछ । यस्तै किसिम-बाट व्यञ्जनमा पनि सरलता ल्याउन सकिन्छ । जस्तै—स, श, ष मा 'श' को पात्र प्रयोग गरेर । ङ, ञ, ण, न, म, को सट्टा विन्दुको प्रयोग गरेर । यो नयाँ सरलताबाट साधारण जनतामा विद्या प्रचार पनि शीघ्र हुन्छ । यी केही परिवर्तन र सरलताको प्राचीन परम्परा पनि छ । नेपालका अरू प्रादेशिक भाषा अवधी मैथिलीको पनि यही नेपाली लिपि नै आफ्नो लिपि हो । नेवारी भाषाले पनि यही दुरुस्त नेपाली लिपि अपनाउनु ठूलो बुद्धिमानी हो । यही लिपिको मेल सबै क्षेत्रमा भए नेपालको उन्नति अत्यन्तै उच्च स्तरको शीघ्र हुनेछ ।

नेपाल राष्ट्रभरको अनिवार्य र निःशुल्क शिक्षाको लिपि नेपाली ( देवनागरी ) नै रहन्छ । लिपिमा हाल चलेको लेख्ने चलनको नियम लिपिविज्ञानको आधारमा

छैन । व्याकरणको नियम पनि वैज्ञानिक दृष्टिबाट ठीक छैन, न यी नियमहरूबाट बनेका शब्द सरलताकै आधारमा छन् । यी प्राचीन व्याकरणका नियमहरूमा पनि मिल्दैनन् र नयाँ विज्ञानका आधारमा पनि छैनन् । नयाँ विज्ञानका विशेष आधार चार छन्—(१) एकता (२) सरलता (३) ध्वनि छटनी ( Phonemics ) र (४) सुन्दरता । यी आधारहरूको प्रभाव प्राचीन संस्कृतमा र प्राकृत भाषाहरूमा पनि देखिन्छ । हाल एकता र सरलतालाई सुन्दरता संझने विद्वानहरू पनि छन् । साधारण जनभाषामा सरलता र एकता ल्याउन व्याकरणमा निम्नलिखित नियमहरू अपनाएमा ज्यादै सरल हुने देखिन्छ ।

सरल व्याकरण र सरल लिपि भएमा विद्याको प्रचार प्रजातन्त्रलाई सुहाउने किसिमबाट हुन सक्छ । अब प्रजातन्त्र प्रणाली चालु भएकोले सामन्ती लालचले लिपि र भाषालाई कठोर गरेर भाव लुकाउने जरूरत छैन । लिपिविज्ञानको आधारमा नेपालीमा पनि व्याकरणमा निम्नलिखित नियमहरू अपनाउनुपर्ने देखिन्छ ।

(१) शब्दको पहिलो अक्षर सर्वत्र ह्रस्व । जस्तै—ठिक, पिर, तिन, हिन, तिखो, ठूलो, भुगोल, मुल्य, किर्ति आदि ।

(२) पूर्ण शब्दको बीचको अक्षर सर्वत्र ह्रस्व जस्तै—तिमिहरू, उनिहरू, गरिबी, स्त्रिलिङ्ग, बाबुज्यू, दाजुज्यू ।

(३) पूर्ण शब्दको पछाडिको अक्षर सर्वत्र दीर्घ जस्तै—तिमी, उनी, सिकर्मी, काजी, माथी, मनी, पनी, बरू, बाबू, कसरी, कती, जती, हिन्दू, अगाडी, छाप्री, घोइली, टट्टू, स्वास्नी, भाजू, दाजू, साहू, धोबी, नोकरी, टोपी, इलमी, बैगुनी, नेपाली, भाई, दुधालू, छोरी, गाई, लिपी, पोथी पोखरी, हात्ती, जैसी, बिन्ती ।

(४) एकलो पूर्ण शब्दको अक्षर दीर्घ जस्तै—ऊ, ती, यी, की ।

(५) तीन स, श, ष, मा श, ष दुइलाई प्रयोगबाट मात्र बिदा दिने जस्तै विशेष कोसिस, सरिर, सिर, आसिर्बाद, सिक्षा, सारदा, सब्द ।

(६) ऋ, ॠ लाई प्रयोगबाट मात्र बिदा दिने । जस्तै रिसि ।

संस्कृत प्रत्यय जोडेर नेपाली शब्दको अगिल्लो भागमा विकृति नल्याउने जस्तै—भुगोलिक या भुगोली, इतिहासिक या इतिहासी, सिक्षण केन्द्र या सिक्षा केन्द्र, राजनीतिक, सारिरिक, व्याकरण–पदव्याकरण या व्याकरणी पदव्याख्या ।

(७ क) नेपाली नियमले नै सब प्रत्यय जोड्ने या नेपाली प्रत्यय नै प्रयोग गर्ने । जस्तै—इतिहासिक या इतिहासी, सामवेदिक या सामवेदी ।

यी नियमहरूसंग जुध्ने नियमहरू बाहेक अरू नियमहरू ने० भा० प्र० समितिको व्याकरणबमोजिम नै लेख्ने चलन भए कलमले नै लिपिमा सरलता र समानता

ल्याउनेछ । अप्ठ्यारो परेकोमा माथि दिएका वैज्ञानिक चार नियमका आधारमा नियम बनाउनु असल देखिन्छ ।

यी माथि दिएका नियमहरू प्राचीन प्राकृत भाषामा र नागरी लिपि र अरू नेपाली लिपिका दिदी बहिनी लिपिहरूमा पनि भएर आएका छन् । बाजे र बाजहरूले अनौठो मान्ने केही विशेष कुरा छैन ।

प्रस्तावित उक्त ७ नम्बरको नियम संस्कृत-व्याकरणको अनावश्यक आश्रय छोड्ने आधारमा बनेको छ; हुनेमा र सुहाउनेसम्म संस्कृतको आश्रय लिनुपर्दछ । अरू विदेशी भाषाबाट शब्द उधारो लिनुभन्दा बज्यै-भाषा संस्कृतबाटै लिनु असल छ । तर आवश्यक नभएको स्थानमा पनि ठोसी-ठोसी संस्कृत प्रत्यय र अक्षरको प्रयोग गरेर भाषा कठोर गराउने सामन्ती बानी या पठन-पाठनको तरीका आवश्यक छैन । हिन्दी, बंगाली आदि भाषाका उच्च स्तरका पाठ्यक्रमका पुस्तकहरू पनि यी नियमबमोजिम लेखिएका देखिन्छन् ।

उक्त ३ नम्बरको नियम नेपालीमा चलेको लिंगका नियमहरूको आधारमा बनाए पनि सरलै हुन्छ अर्थात् स्त्रीलिङ्गमा मात्र अन्तमा दीर्घ र अरू दुइ लिङ्गमा अन्तमा ह्रस्व । देवको मूर्ति जनाउने शब्द ह्रस्व र देवीको मूर्ति जनाउने दीर्घ ।

फेरि नेपाली भाषामा नभएका वस्तु जनाउने तर चलिसकेका विदेशी शब्द हटाएर अनौठा शब्दको कल्पना गरेर प्रयोग गर्नु पनि भाषाविज्ञानको विरुद्ध छ । जस्तै कोट, रेडियो, पुलाउ, रेल, तार, फोन, बिस्कुट, किलो इत्यादि नेपालीबाट हटाउने प्रयत्न गर्नु ठीक होइन । विदेशी शब्द र लिपि पाचन गर्न सक्ने शक्तिले पनि भाषाको केही विकास हुन्छ । तर पाचन गर्दा आफ्नै भाषाका शब्दले या सरल संस्कृत भाषाका शब्दले सोही वस्तुहरू जनाउने शब्द फेला परेमा नेपालीकै या सरल संस्कृतकै शब्द प्रयोग गर्नुपर्छ, भिटामिनको सट्टा पुष्टकारी, टोम्याटोको सट्टा गोलभेँडा, युनिभर्सिटीको सट्टा विश्वविद्यालय, म्यूनिसिपल्टीको सट्टा नगरपालिका, पार्लियामेन्टको सट्टा संसद, सेक्रेटरीको सट्टा सचिव इत्यादि । हालको नेपाली लिपिमा अंग्रेजी लिपिका केही चिह्नहरू ( " ) ( " ) प्रयोगले पच्तै गएका देखिन्छन् । यी विदेशी कुरा पाचन गर्ने कार्यले नेपाली लिपिमा स्पष्टता ल्याउने भएकोले असलै देखिन्छ ।

प्रस्तावित अरू नियमहरू पनि धेरैजसो उक्त मर्या वैज्ञानिक ४ आधारहरूका आडमा मानिए पनि यी उक्त चारै आधारहरू प्राचीन विकसित भाषाका व्याकरणहरूका नियमहरूका आधार बनेका पनि देखिन्छन् । जस्तै-तीन स, ष, श मा दुईलाई हटाएको पालि र प्राकृत भाषाहरूमा पनि देखिन्छन् । पालि भाषामा केवल 'स' को मात्र प्रयोग छ । जस्तै अकंसु (अकार्षुः) कसट फलानो (कष्ट फलानि); देसनं (देशनं); सत्ति (शक्ति); सहस्सं (सहस्रं); सरणानि (शरणानि); आदि । जस्तै—माहा० शौरसेनी असेस—अशेष

मागधी-केशेशु; शौ० महाराष्ट्री केसेसु । ट्, ठ्, को प्राकृत भाषामा ड् र ढ् हुन्छ । जस्तै—पड=पट, पडा अ=पटाक, कुडिल=कुटिल, वड=वट, पढण=पठन आदि । अब नेपालीमा प्राकृतबाटै लिने या संस्कृतबाटै लिने भनी किटानी गर्न सकिँदैन । दुवै भाषाबाट नेपालीमा शब्दहरू आएका देखिन्छन् । जस्तै—नेपालीमा "घडा" 'रूख' 'दही'; 'घर' 'पीठो'; 'भाइ'; 'पोइ'; 'स्याल' आदि शब्दमा प्राकृतको प्रभाव देखिन्छ । तर कति शब्द संस्कृतबाटै आएको स्पष्ट देखिन्छन्; जस्तै—सिंह, राजा, सचिव, मंत्री, विद्यालय आदि ।

समस्या 'काक' र 'काग' शब्दमा उत्पन्न हुन्छ । प्राकृतमा 'क' को 'ग' हुने चलन पनि छ । जस्तै–अर्धमागधी र जैन महाराष्ट्रीमा असोग=असोक, लोग=लोक र आगास=आकाश । नेपाली भाषामा 'जदि' या 'यदि' कुन ठीक हुने हो । प्राकृतमा जदि हुन्छ । (शौरसेनीमा–जदि)'जोगी' या' योगी' कुन ठीक छ । प्राकृतबाट जोगी ठीक छ । संस्कृतबाट योगी ठीक छ । यही यमुना र जमुनामा पनि छ । यही प्रश्न रिसि र ऋषिमा उठ्तछ । 'ऋ' र 'ऋ' को सट्टामा 'रि' को प्रयोग भएको प्राकृत भाषामा देखिन्छ । जस्तै—रिसि=ऋषि, रिद्ध=ऋद्ध । संस्कृतमै टेक्नुपर्छ भनेमा संस्कृतबाट प्राकृत, प्राकृतबाट अपभ्रंशको र अपभ्रंशबाट आधुनिक भाषाको विकास भयो भन्ने विचार र सिद्धान्त गलत हुन्छ । फेरि त भाषाको विकासको प्रश्नै रहेन । संस्कृत भाषा र सोही भाषाका व्याकरण मात्र बाँकी रहे । प्राकृतबाट मात्रै भने पनि समस्या सबै हल हुँदैन । दुवै भाषालाई आधार मान्नुमा नै ठीक र नेपालीको प्रगति छ । नेपालीमा प्रयोगमा चलिसकेका शब्दलाई जबर्जस्ती धकेली-धकेली कुनै भाषा गुटमा पार्ने काम भाषा-विज्ञानको प्रगतिको नियम विरुद्ध छ । नेपाली भाषामा सरलता र एकता ल्याएर नेपालभर शुद्ध भाव प्रकाश गर्ने नियम नै नेपाली व्याकरणको आत्मा हो र जनसाधारणमा चलेको सरल र एकनासको साधु नेपाली भाषा नै खास नेपाली भाषा हो ।

भाषाविज्ञानको र व्याकरणको दृष्टिकोण अलग-अलग छन् । कुनै एक भाषाको राम्ररी अध्ययन र नियमहरूको ठीक प्रयोग गराउनु नै व्याकरणको काम हो । तर भाषाविज्ञानको कुनै एक भाषासित मात्र सम्बन्ध छैन । भाषाविज्ञान र लिपि विज्ञानले भाषाहरूको र लिपिको अध्ययन गरेर सिद्धान्तहरूको प्रतिपादन गर्छ । यी विज्ञानहरूले जरोसम्म गएर अध्ययन वैज्ञानिक सिद्धान्तका आधारमा गर्दछन् । व्याकरणको यो प्रयोग ठीक या बेठीक भन्ने किटानी भित्र पसेर अध्ययन गरेर व्याकरणको मूलको पूर्ण विवेचना गर्दछ । यो विज्ञानले नयाँ प्रयोगलाई सकारण र स्वाभाविक मान्दछ । व्याकरण त्यही प्रयोगलाई केही समयपछि अपनाएर प्रयोगको ठीक मार्ग किटानी गर्छ । यसैले फ्रान्स आदि देशहरूमा प्रति दश वर्षमा व्याकरणमा अदलो-बदली गर्ने चलन छ । व्याकरणहरू पुरातनवादी छन् तर यी विज्ञान प्रगतिवादी छन् । यी

विज्ञानहरूको सम्बन्ध भाषाको जीवित रूपसँग छ। तर व्याकरणले यही जीवित रूपलाई प्रारम्भमा बेठीक भने पनि पछि बराबर विज्ञानका अगाडि झुकी त्यही बेठीक-लाई ठीक मान्दै स्वीकार गर्नुपर्छ। त्यसैले यो विज्ञानलाई व्याकरणको पनि व्याकरण मानिन्छ। यी वैज्ञानिक कारणहरू रोकिने गरी कडा व्याकरण बनाएमा भाषाको मृत्यु हुन्छ। हालको मर्म र चलनको क्रियात्मक रूप भुलेर टाउकाले मात्र भूतमा टेकेर कल्पनामा मात्र आनन्दसाथ रहनुभन्दा मर्मसाथ गोडाले टेकेर वर्तमानमा सक्रिय रहेर भविष्यको विचार गर्नु धेरै नै उत्तम छ। "हामी थियौं" भन्ने बितेको घमण्डमा रहनु अथवा अनुकरणदास बनेर सबै उधारो लिनुभन्दा निजी सिर्जना उचित प्रकारले गर्दै गए, एक दिन उचित लक्ष्य पूर्ण हुन्छ। मेरै ठीक, अरू बेठीक भन्ने अबुझ धडधडे ढिपीले पनि ठूलो हानि हुन्छ। सहानुभूति र श्रद्धाले सबै ज्ञान नियालेर हेरेर, अध्ययन गरेर र अठोट गरे मात्र लाभ हुन्छ। बोल्नु र लेख्नुभन्दा अगाडि धेरै गम गर्नु ज्यादै उचित छ।

## लिपिबद्ध प्रणाली

यो प्रणालीअनुसार एक मानिस एक ध्वनिको उच्चारण एक पटक मात्र गर्न सक्तछ। पहिलो पटक उच्चारण गरेको ध्वनिमा र दोस्रो पटक उच्चारण गरेको त्यही ध्वनिमा पनि उच्चारणको ढंग फरक पर्ने हुनाले फरक हुन्छ। एक ध्वनि एकै पटक मात्र उच्चारण हुन सक्दछ। दुई पटक त्यही ध्वनि उच्चारण हुन सक्तैन। ध्वनि उस्तै हुन सक्तछन् तर पटक पटक उच्चारण भएका उस्तै ध्वनि एकै होइनन्। एकै मानिसको उस्तै ध्वनि त एकै होइन भने दुई मानिसको एकै ध्वनि हुने कुरा त छँदै छैन। एक पटक ध्वनि मुखबाट निक्लेपछि त्यो ध्वनि खतम भयो। त्यही ध्वनि फेरि दोस्रो पटक निस्कन सक्तैन केवल उस्तै ध्वनिहरू मात्र निक्लन सक्तछन्।

अब प्रश्न उठ्तछ कि उही ध्वनि हरेक पटक फरक फरक ढंगको हुन्छ भने संपूर्ण उच्चारित मानवीय पटके ध्वनि अंकित गर्न कति लिपि चिह्नको आवश्यक पऱ्यो। यसको कुनै गणना नै हुन सक्तैन।

लिपिबद्ध प्रणाली ( लिपि-शास्त्र ) ले सब लिपिबाट अव्यवस्थालाई हटाएर सिद्धान्त कायम गर्छ। सबै प्राचीन लिपिहरू पनि थोरथोर यसका आधारमा बनेका देखिन्छन्। जस्तै (१) क, (२) क, (३) क, (४) क, (५) क, (५) क, (६) क, इत्यादि "क हरू" मध्ये केवल एक (क्) क ध्वनिलाई मात्र छाँटेर लिपिमा क प्रति-निधिको स्थान दिएको छ। हालको नयाँ प्रणालीमा निश्चित नियमहरू बनेका छन्। यिनै निश्चित नियमअनुसार एक लिपिका निमित्त चाहिने एक प्रतिनिधि ध्वनिसमूह मात्र छाँटेर लिइन्छन् र यिनै छटनीमा परेका ध्वनिहरू अंकित गर्न मात्र लिपि चिह्नहरू बनाइन्छन्। 'क' ले सबै प्रकारका उक्त 'क' हरूका ध्वनिहरू जनाउँदैन; केवल एक

ध्वनिग्राम भएर सबै 'क'–ध्वनिहरूका निमित्त प्रतिनिधि भएर रहन्छन् । यी ध्वनि ग्रामहरू छाँट्ने काम र विवेचन लिपिशास्त्रमा हुन्छन् ।

यो शास्त्रका मुख्य तीन कामहरू छन् । ( १ ) स्वतंत्ररूपले कुनै एक भाषाका ध्वनिहरूको परीक्षण गर्नु, (२) त्यही भाषाको प्रतिनिधि ध्वनिहरू छाँट्नु र (३) अरू आवश्यक ध्वनिहरूका ढाँचा मानिसका सामुन्ने राख्नु । यो शास्त्रले जीवित भाषा र प्राचीन लिखित भाषा दुबैलाई लिपिबद्ध गर्ने एक निश्चित सुझाव दिन्छ । तर यो शास्त्रमा हालसम्म अन्तिम सिद्धान्त निश्चित हुन सकेको छैन ।

यस शास्त्रका प्रमुख सिद्धान्त चार छन् ।

(१) एक ध्वनिले अर्को समीपवर्ती ध्वनिमा प्रभाव पार्दछ ।

(२) ध्वनिसमूहको प्रवृत्ति ध्वन्यात्मक साम्यतिर हुन्छ ।

(३) ध्वनिको प्रवृत्ति परिवर्तनपट्टि हुन्छ ।

(४) धेरैजसो भाषाहरूमा ध्वनिहरूको क्रम ( Sound Sequences ) केही अंशसम्म कुनै एक आफ्नै र योजनाको अन्तर्गत निश्चित गरेको हुन्छ ।

यिनै उक्त प्रमुख चार सिद्धान्तहरू र अरू सहायक सिद्धान्तहरूका आधारमा कुनै एक विशेष भाषाका ध्वनिग्रामहरू छाँटिन्छन् । यस प्रक्रियालाई लिपि-विज्ञानको मौलिक देन मानिएको छ । तर यस विज्ञानमा अझै धेरै सिद्ध गर्नु बाँकी नै छ ।

जर्मनीका नव्य वैयाकरणहरूले यी उक्त सिद्धान्तहरूमा ज्यादै जोड दिएका थिए ।

ध्वनिग्रामको विश्लेषण अमेरिकी भाषा वैज्ञानिक श्री ब्लूमफील्ड र श्री एडवर्ड सैपीहरूले गरिसकेका थिए । श्री केनेथ एल० पाइक, श्री वर्नर्ड ब्लाँख, श्री टेगर र ग्लीसनहरूले यसलाई बढाए । यिनीहरूमा पनि श्री केनेथ एल० पाइकले ज्यादै महत्वपूर्ण कार्य गरेका छन् ।

## अङ्क

नागरी अङ्कको उत्पत्ति पनि नागरी अक्षरको जस्तै ब्राह्मी अङ्कबाटै भएको हो । समयले गर्दा पुरानो अङ्कमा रूप मात्र भेद भएको देखिन्छ । प्रयोगमा अंकमा पनि भेद भएको देखिन्छ । नागरी अंक नै नेपाली अंक हो । अंकको उत्पत्तिको बारेमा पनि लिपिको बारेमा जस्तै अनेक मत छन् । केही विद्वान विदेशबाट आएको हो भन्दछन् । केही विद्वानहरू खास हिन्दूको नै हो भन्दछन् । श्री ओझाज्यूको मत हिन्दूहरूको आफ्नै हो भन्ने छ ।

पुरानो ब्राह्मी अंक र आजको नागरी अंकको प्रयोगको फरक यस प्रकारको छ ।

(१) आजकल प्रधान अंक १ देखि १० सम्म छन् तर पहिले प्रधान अंक १ देखि ९ तक मात्र थिए। आजकल शून्यको प्रयोग हुन्छ तर प्राचीन कालमा १ देखि अंकको शुरू भएको देखिन्छ।

(२) आजकल १ देखि १० सम्मका संख्याका आधारमा नै सबै संख्या लेखिन्छन्। तर प्राचीन कालमा यो चलन थिएन। आजकल शून्यको आधारमा १, २, ३, ४ र ५ आदि संख्यामा शून्य थपेर १०, २०, ३०, ४०, ५०, ६०, ७०, ८० र ९० लेख्ने चलन छ। तर प्राचीन कालमा यो चलन थिएन। यिनीहरूका निमित्त बेग्ला बेग्लै चिह्नहरू लेखिन्थे।

( ३ ) १० देखि २० सम्मका बीचका संख्याहरू लेख्ने चलन पनि बेग्लै थियो। २० देखि ३० सम्मको संख्या जस्तै २३,२४ या २५ लेख्ने चलन पनि अलग देखिन्छ। आजकल २४ लेख्दा २ को पछाडि ४ थपेर २४ लेख्ने चलन छ। तर प्राचीन कालमा २० को पछाडि ४ थपेर २४ लेख्ने चलन थियो। सयभन्दा माथिको संख्या लेख्ने चलन पनि यस्तै थियो। सयको संख्या चिह्न लेखेर त्यसका पछाडि अरू शेष संख्या जोड्ने चलन थियो। २०० या ३०० इत्यादिका निमित्त १०० चिह्नमा तल माथि या दायाँमा क्रमले चाहिएको जति रेखा थपेर लेख्ने चलन थियो। ४०० भन्दा माथिको संख्याका निमित्त नियमहरू भिन्न थिए।

प्राचीन कालमा संख्याका निमित्त आजकलभन्दा ज्यादै धेरै चिह्नहरू याद गर्नुपर्थ्यो। नियमहरू हालका भन्दा ज्यादै धेरै थिए। यसैबाट यो कुरा स्पष्ट हुन्छ कि प्राचीन प्रणाली आजको भन्दा ज्यादै कठिन थियो। पछि सरलताका निमित्त विकास हुँदै गयो।

प्राचीन संख्याको प्रणाली चौथो सदीसम्म चलेको देखिन्छ। चौथो सदीपछि पाँचौं सदीतिर आजकलको नयाँ संख्या शैलीको चलन देखिन्छ। यही सदीमै उक्त शून्य र अरू नयाँ किसिमका संख्या लेख्ने चलन चलेको देखिन्छ। यो नयाँ संख्या-शैली हिन्दूहरूको आफ्नै सिर्जना हो। हिन्दूबाट यो नयाँ शैली अरब पुग्यो अरबबाट यो शैली यूरोपले लियो। आजका अङ्कको चमत्कारको शुरू हिन्दूहरूको देन हो। यो ज्योतिष शास्त्रको खास गरेर सूर्य सिद्धान्तमा विशेषता पाइन्छ।

अंक विकासको चित्र तल दिइएको छ।

## अंक विकास

अंकविकास

१ —
२ —
३ —
४ —
५ —
६ —
७ —
८ —
९ —

## विराम चिन्ह

नेपाली लिपिमा अंग्रेजी विराम चिह्नको प्रयोग भएको साधारणतया देखिन्छ। यसको चलनले सुबोधता त ल्याउँछ तर प्राचीन चिह्नहरूलाई छोड्नु पनि असल होइन। कुनै देशको भाषा या लिपिको विकासमा आफ्नो परंपरागत साधनमा उचित नयाँ कुरा मात्र समावेश गराउनाले मात्र भाषा या लिपि राष्ट्रको हितकर हुन्छ। नक्कलको भरमा मात्र केही कुराको उन्नति हुँदैन। नक्कल गर्दा हुनेसम्म फाइदाको विचार गरी आवश्यक मात्र नक्कल गर्नु आवश्यक छ। केवल विदेशी हुनाले नै नक्कल गर्नमा श्रेय हुँदैन। आफ्नो भाषा लिपिअन्तर्गत वैज्ञानिक कारणहरूले परिवर्तन भै प्रगति हुनु अर्कै कुरा हो।

अंग्रेजीको उद्‌गारबोधक चिन्ह ( एक्स्क्लमेशन '!' ) चाहिने नचाहिने ठाउँमा प्रयोग भएको देखिन्छ। विज्ञापनबाजीमा यसको दुर्दशा आश्चर्यपूर्ण छ। नेपालीमा संबोधनमा पनि पूर्वोक्त चिह्नको प्रयोग देखिन्छ। तर अंग्रेजीमा संबोधनमा अल्पविराम कमा ( , ) प्रयोग हुन्छ।

प्रश्नवाचक चिह्नको प्रयोग ( ? ) नेपाली लिपिमा आवश्यक छैन। किन, के, कसरी, कति इत्यादि प्रश्नवाचक छन्। अंग्रेजीको चिह्न ( ? ) लगाए पनि, नलगाए पनि केही फरक पर्दैन। जस्तै ( १ ) किन जान्छस्। ( २ ) किन जान्छस् ?। वाक्य नं० १ पूर्ण नेपाली छ।

नेपालीमा पूर्ण विरामको चिह्न खडा पाइ हो। यसको बदला ( फुल स्टाप

( . ) प्रयोग गर्नुपर्ने केही जरूरत छैन। अर्धविराम ( सेमिकोलन ( ; ) को काम पनि ज्यादा छैन। अल्प विराम ( , ) उचित ठाउँमा प्रयोग गर्नाले सुबोधता हुन्छ। अंगतासूचक चिह्न ( कोलन : ) को प्रयोग विसर्गसाथ मिल्ने हुनाले भ्रम गराउँछ। प्रतीक चिह्नको निमित्त फुलस्टाप ( . ) प्रयोग गर्नु ठीक छैन। ( शून्य ( ० ) नै प्रयोग गर्नु ठीक छ। जस्तो पंडितको बदला ( पं. ) लेख्नुभन्दा ( पं० ) लेख्नु असल छ। शून्यले स्पष्ट ज्यादा गर्छ।

उद्धरण चिह्न ( इंवर्टेड कमाज ) ले स्पष्टता तुरुन्तै जनाउँछ। तर यसको पनि चाहिने नचाहिने ठाउँमा प्रयोग गरी दुर्दशा गरेको देखिन्छ। नचाहिने प्रयोगले लिपिको अवस्था खराब गर्दछ। अल्पांशको उद्धरण अथवा कुनै शब्दको विशेषण जनाउनाका निमित्त एकहरो इंवर्टेड कमाजको ( ' ' ) प्रयोग गर्नु बेसै छ। लोपका निमित्त पनि अल्पविराम जस्तो चिह्न माथिबाट दिने चलन कहीं-कहीं देखिन्छ। जस्तै ( १९५५ ) को सट्टामा ( '५५ ) बेकार छ। यस्तो चलनले लिपिको स्पष्टतामा पछि-पछि बाधा ल्याउँछ।

हालै शब्द दोहोऱ्याउनुपरेमा अगाडिको शब्दको अक्षर मात्र पछाडिको शब्द साथ योजिका ( हाइफन ' - ' ) द्वारा जोडेर जनाउने चलन देखिन थालेको छ। जस्तै पछि पछिको सट्टामा "प-पछि", "बे-बेग्लै"। यसले लिपिलाई जटिल बनाउँदै लैजाने हुनाले यस्तो प्रयोग त्यागनु नै असल छ। योजिकाको प्रयोग भ्रान्ति निवारण-का निमित्त, विशेष स्थितिको भाव जनाउन र स्पष्टताका निमित्त मात्र गर्नुपर्छ। ( तीन-तीन, चार-चार ) यस्ता द्विरुक्त शब्दमा योजिका लगाए हुन्छ तर यसैको आधारमा क्रिया ( बस-बस, उठ-उठ ) मा लगाउनु असल छैन। विस्मयादिबोधक पद ( शिव-शिव। धन्य-धन्य ! ) मा योजिकाको जरूरत छैन। कोलनड्याश ( :— ) को काम नेपालीमा तपसीलवार भन्ने शब्दले दिने भएकोले ज्यादै जरूरत छैन।

माथि विचार गरिएका चिह्नमा पनि अरू धेरै नै विचार गर्न सकिन्छ। अरू विचार गर्न बाँकी चिह्नहरू पनि धेरै नै छन्। तर यति नै पर्याप्त छ कि भाषाको प्रवृत्ति र आवश्यकता विचार गरेर चिह्न व्यवहार गर्नु असल छ।

नेपाली भाषामा हरेक शुभ कागज पत्रहरूमा शुरूमा माथि ( श्री :— ) र अन्तमा ( शुभम् ) शब्दको पछाडि लामो धर्को तानेर समाप्त जनाउने चलन छ। यस चलनको भित्री उद्देश्य शुरूमा लाभ र कल्याण र पछि पनि कल्याण भन्ने हो। तर यो चलनको व्यावहारिक फाइदा पनि केही छ। ( श्री :— ) ले शुरू जनाउँछ र ( शुभम् ) ले अन्त जनाउँछ। कागजपत्र जालसाज गर्नेहरूलाई र कीर्ते कागज बनाउनेहरूलाई यी उक्त दुई शब्दहरूले ज्यादै अप्ठ्यारो परेको देखिन्छ। यो शब्दहरूको व्यवहारले हानि केही पनि छैन र झुट्टा थपघट गर्न रोकेको बराबर अड्डा अदालतमा

देखिन्छ । थपघट भैसकेकोमा पनि यी शब्दहरूले पछिको झुट्टा थपघट पत्ता लगाउन केही मद्दत गरेको देखिन्छ ।

आदर्शको हेरफेरले र लेख्ने चलनको हेरफेरले पनि लिपिमा अदलीबदली ल्याउँछ । जस्तै आजकल ( श्री : ) को सट्टामा माथि पत्रको शिरमा ( ऽ ) यस्तो चिह्न केही लेखेको देखिन्छ । प्राचीन आदर्शको मर्म ज्ञानको कमीले गर्दा यो केही व्यक्तिले चलनमा ल्याउन खोजेका होलान् । फेरि छापाखानामा तलथोप्ले ( व ) नभएकोले छापिएका पुस्तहरूमा हिन्दी लिपिको ( ब ) र ( व ) नेपालीमा पनि चलनमा आएको देखिन्छ । पुराना नेपाली कागजपत्रहरूमा ( व ) र तल थोप्ले ( व ) लेख्ने चलन थियो । समयको प्रभावले अंग्रेजी विराम चिह्नहरू नेपाली लिपिमा घुसेको चर्चा माथि नै भइसकेको छ । हालमा पनि केही मानिस ( ख ) को सट्टा ( ष ) लेख्ने गर्दछन् । ( 'र' ) र ( 'व' ) ( 'ख' ) मा परेकोले ( 'र' ) र ( 'व' ) को फरक-फरक उच्चारण रोक्न ( ष ) को प्रयोग गरेको देखिन्छ । जनकपुर धामका महामहर्षि याज्ञवल्क्यको समयमा पनि 'ख' को सट्टा 'ष' ( ख ) प्रयोग भएको पाइन्छ । जस्तै, "वर्ष्याय चः" "शत वलेषा" आदि । 'य' को सट्टामा 'ज' प्रयोग भएको पनि पाइन्छ । जस्तै, यज्जाग्रतो = जज्जाग्रतो, येन=जेन, आदि ( याज्ञवल्क्य शिक्षाबाट ) । नेपाल राष्ट्रका याज्ञवल्क्यको स्मृतिले नेपाली ऐन कानून जम्मैजसोमा पूर्ण प्रभाव पारे झैं लिपिमा पनि 'ख' को सट्टा 'ष' ( ख ) प्रयोग हुने चलन भएको बुझिन्छ र 'य' को सट्टा 'ज' प्रयोग हुने, आदि । यो परंपरागत नै हो । जस्तो 'षरदार' र 'जमुना' । पुराना कागज पत्रहरूमा ।

# नेपाली वर्णमालाको परंपरा
# र
# वर्तमान स्थिति

नेपाली वर्णमालामा ४५।४६ वर्ण ( अक्षर ) को प्रयोग भएका छन् । तर यसको परंपरामा निकै वर्ण छन् । वैदिक समयमा ६३ या ६४ वर्णहरू प्रयोग भएका थिए भन्ने मत प्राचीन व्याकरणाचार्य शम्भुले लेखेका छन् । वैदिक समयमा पनि यकिन-साथ वर्णहरूको संख्या नभएको देखिन्छ ।

तंत्रको समयमा ध्वनि र उच्चारणसम्बन्धी जटिल समस्या समाधान गर्नुपरे पनि पचास मात्र वर्णले समस्या समाधान गरेको देखिन्छ ।

पुराणकालमा १३ स्वर र ३२ व्यञ्जन जम्मा ४६ र कुनै कुनै ग्रन्थहरूमा ४८ वर्णसम्म प्रयोग भएका देखिन्छन् । यसै समयमा महाकाव्यको सिर्जना चुलीमा पुगेको पाइन्छ । यस्ता महाकाव्यहरू अन्यत्र दुर्लभ नै छन् ।

महाकवि कालिदासले करीब जम्मा ४६ वर्णको प्रयोग गरेर नै अमर विश्व विख्यात कवि भए । कालिदासको परंपरा प्रायः आजसम्म संस्कृत जगतमा चलेको देखिन्छ ।

पालि ग्रंथमा ४१ मात्र वर्णहरू छन् भन्ने मत पालि व्याकरणाचार्य कात्यायन को छ । तर अरू पालि व्याकरणाचार्यहरू ४३ अक्षरहरू छन् पनि भन्छन् । जे भए पनि कालिदासको परम्परामा घटेको नै छ । तर पालि भाषा विश्वभर बौद्ध मत प्रचार गर्न यिनै थोरै अक्षरहरूको प्रयोगबाट नै समर्थ भएको छ ।

प्राकृत साहित्य ( लौकिक साहित्य ) मा वर्णको संख्या अझ घटेको पाइन्छ । ऋ, ॠ, ऌ, ॡ, ऐ, र औ, यी उक्त छ अक्षरहरूको प्रयोग प्राकृत भाषामा छैनन् ।

पालि र प्राकृत भाषाहरूमा, श, ष, स, मध्ये एक वर्णको मात्र प्रयोग भएको छ । जस्तै—पालिमा दन्त्य 'स' को मात्र प्रयोग हुन्छ ।

मागधीमा तालव्य 'श' मात्र प्रयोग हुन्छ ।

जस्तै, ( १ ) पालिमा—कसट फलानि=कष्टफलानि । चम्म साटको=चर्मशटकः । देसनं=देशनं । सावणा=श्रावणा ( घोषणा ) । सरणानि=शरणानि आदि ।

( २ ) प्राकृत भाषामा—महाराष्ट्री र शौरसेनीमा। असेस=अशेषः। केशेषु=केसेसु। मागधीमा—केशेशु=केशेषु। आदि।

यही वर्णक्रम पछिका भाषाहरूमा पनि चलेर गए। वर्ण र व्याकरणका नियमहरूमा समयले स्वाभाविक अदली बदली, सरुवा घटुवा हुनु हाम्रै प्राचीन व्याकरणका र पश्चिमी राष्ट्रहरूका आधुनिक व्याकरणहरूले समेत सिद्ध गरेको सर्वविदितै छ।

नेपाली चन्द्रिका र मध्य चन्द्रिका आदि व्याकरणहरूमा स्वर–दीर्घ 'ॠ' र 'ॡ' समेत चौध र व्यञ्जन 'क' समेत चौंतीस छन्। यी वर्णहरूमध्ये केही वर्णहरूका प्रयोग ई. पू. ६।७ सय वर्षअगाडि नै प्रयोगबाट लोप हुँदै आएका विषय अगाडि चर्चा भै सकेकै छन्।

यास्कले "वैदिक वाणी" र अर्को 'भाषा' शब्दमा विभिन्नता जनाएका छन्। यास्कले लेखेको 'भाषा'का लक्षणहरू संस्कृत भाषाका लक्षणहरूसाथ मिल्ने देखिन्छ। पाणिनिले पनि निकै नियमहरू वेदवाणीका निमित्त मात्र प्रयोग हुने लेखेका छन् र केही नियमहरू भाषालाई मात्र लाग्ने लेखेका छन्। तर उनले धेरै सूत्रहरू 'वेदवाणी' र 'भाषा' दुवैलाई लाग्ने पनि बनाएका छन्।

पाणिनिको समयमा 'भाषा' शब्दको अर्थ खास एक विशेष बोली ( भाषा ) भन्ने थियो। पछिपछि कालक्रममा त्यही 'भाषा' को अर्थ साधारण सरल जन भाषा ( बोली ) भयो। 'भाषा' धातुले स्पष्ट बुझिने बोलीलाई मात्र जनाउँछ। जनताले स्पष्ट बुझ्ने बोली भएकोले यसलाई 'भाषा' भनेको हो। पछि समयको स्वाभाविक अदलीबदलीको क्रमले 'भाषा' को अर्थ व्याख्या पनि हुने भयो। यही उक्त क्रमले "स्थितप्रज्ञस्य का भाषा" मा 'भाषा' ( जन भाषा ) मा "स्थित प्रज्ञस्य" को सरल व्याख्या के हो ? भन्ने मतलब सोधिएको हो। यस्तै सादृश्य वाक्य अंग्रेजीमा पनि छ—"What is the English of it ?"

पतञ्जलिले आफ्नो महाभाष्यको भूमिकामा "केही विद्वान् व्याकरणको अध्ययन ज्यादै आवश्यक विषय होइन" भन्ने पनि छन् भन्ने राय प्रकट गरेका छन्। कात्यायनको पनि यस्तै भनाइ पाइन्छ। प्रयोगबाटै वेदवाणीको र भाषाको रूप आदि अध्ययन हुन सक्छ भन्ने मत उनीहरूको छ। संस्कृत जन भाषाकै रूपमा प्रचलित भएको समयमा उक्त विचार प्रकट भएको हो।

महान जनप्रिय लेखकले प्रयोग नगरेसम्म मात्र शब्द आदि अव्याकरणी हुन्छन्। महान जनप्रिय लेखकले प्रयोग गरेपछि अव्याकरणी प्रयोग पनि व्याकरणी बन्छन्—"उक्त मत भाषा विज्ञानको सामान्य सिद्धान्त नामक पुस्तकमा ( कलकत्ता विश्वविद्यालय संस्करण ) प्रोफेसर तारापोरवालाले प्रकट गरेका छन्। यस्तै मत संस्कृतमा

पनि पाइन्छ—"महाजनो येन गतः स पन्थाः" महान र जनप्रिय व्यक्तिले नै मार्ग देखाउँछन् । आर्ष प्रयोगको सिद्धान्तले पनि यस सिद्धान्तलाई पुष्टि गर्छ। आर्षहरूले जस्तो प्रयोग गरे त्यो त्यस्तै शुद्ध भनेर स्वीकार गर्नुपर्छ र संशोधन गर्न हुँदैन ।

पृषोदरादीनि यथोपदिष्टम्—पृषोदरः आदि गणका शब्दहरू जस्ताको त्यस्तै प्रयोग गर्नुपर्छ अर्थात् यी शब्दहरूमा व्याकरणका साधारण नियमले परिवर्तन गर्न हुँदैन ।

उक्त सिद्धान्तहरूले व्याकरणका नियमलाई भन्दा प्रयोगलाई महत्व दिएको देखिन्छ ।

संस्कृतमै पनि केशर-केसर; वशिष्ट-वसिष्ट; कोशल-कोसल आदिको प्रयोग समान शुद्ध रूप मानेर प्रचलन भएको पाइन्छ । यी र केही अरू शब्दहरूमा स, श, मा भेद भएको देखिदैन । दुवै स, श, लाई शुद्ध माने र एकै शब्दको उही एकै स्थलमा प्रयोग भएको पाइन्छ । "कोश" र "कोष" मा पनि भेद नभएको पाइन्छ ।

यो उक्त सबै सिद्धान्तहरूबाट व्याकरणी भाषाको भन्दा भाषाको महत्व ज्यादै वर्ता र महान छ भन्ने स्पष्ट हुन्छ । भाव आत्मा र भाषा शरीर मात्र हो । शरीरका कुनै अङ्ग लुलो भए पनि आत्मा बलियो भए आत्माकै महत्व छ भन्ने निष्कर्ष हो । जस्तो शरीर बराबर अदलीबदली हुन्छ त्यस्तै भाषामा पनि परिवर्तनशील तत्व छन् । स=श=ष; य=ज; ऋ=रि; ष=ख, आदिको समस्या बारेमा लिपि-विज्ञानको ११८ र २१५ पृष्ठमा हेर्नुहोस् ।

समन्वय मार्ग लिई नेपाली लिपि सुधार गर्न खास अठोट गरे नमिल्ने देखिदैन । वर्णको समस्या सुधार गरेर थोरै र सरल वर्णहरूबाट काम चलाउने विषयमा अगाडि चर्चा भएकै छन् ।

बाईमात्रा कान्दानी ( कान ) र तरकुल्ल्या आदि सुधारको पनि समन्वयात्मक सरल बाटो फेला पार्न सक्ने देखिन्छ । ह्रस्व र दीर्घ ईकार र ऊकारको सुधार पनि गर्न सकिन्छ । "कि" र "की" को कान्दानी मात्र काटिदिए पनि ह्रस्ववादी र दीर्घ-बादी दुवैको झगडा मेटिन्छ ।

## जस्तै—

"कि" र "की" बराबर "के" "के" । "कि" "की" को बाइमात्राको कान काटेपछि एक यस्तो "के" मात्र प्रयोगमा चलाए ह्रस्ववादी र दीर्घवादी दुवैको अनु-कूल हुन्छ । "के" लाई स्थानअनुसार दीर्घ सम्झे पनि भयो या ह्रस्व सम्झे पनि भएकै छ । सरलता र प्रचारका निमित्त समन्वय मार्ग अपनाउन पहिले दृढ संकल्प गरेर कम्मर मात्र कस्नुपर्छ । समय क्रमले सब पूर्ण गर्छ ।

यस्तै तरकुल्ल्या र वर्धन्येमा पनि सुधार हुन सक्तछ। "ु" र "ू" दुवैको सट्टामा एक "एक" "ू" मात्र प्रयोगमा चलाए ह्रस्ववादी र दीर्घवादी दुवैको स्थान अनुसार चित्त बुझ्ने हुन्छ। अर्थात दीर्घ ऊ को मात्रा "ू" को लामो खुट्टो ठीक ठाउँ-मा काटेर र चलन गरेर दुवै ह्रस्व र दीर्घ उकारको काम लिने। दीर्घ चाहिन्छ भन्नेले चाहिने स्थलमा दीर्घ सम्झने र ह्रस्व चाहिन्छ भन्नेले उपयुक्त स्थलमा ह्रस्व सम्झिने उक्त सुधारले दिने भएकोले, यो मार्ग समन्वयात्मक देखिन्छ। यसले सरलता र शीघ्रता लिपिमा छिटै ल्याउँछ। भाषा र लिपि केवल बाहिरी शरीर मात्र हुन्। खास भित्री कुरो भाषाबाट ज्ञान आर्जन गर्नु हो।

अनेक ज्ञान विज्ञान आदिका क्षेत्रहरूमा विशिष्ट स्तरको ज्ञान आर्जन गरेर विश्व भाषामा अटूट नाम दर्ता गरेको अंग्रेजी भाषामा स्वर वर्ण पाँच र व्यञ्जन वर्ण एक्काईस मात्र छन्। शुभ भाव विस्तार नै खास शिक्षा हो।

नेपाली चन्द्रिका र मध्य चन्द्रिका व्याकरणहरूमा दीर्घ 'ॠ' र 'ॡ' समेत स्वर वर्ण चौध र व्यञ्जन 'क' समेत चौतीस छन्। यी वर्णहरूमा क्रमिक मार्गले केही वर्णहरूको प्रयोग ई० पू० ६।७ सय वर्षअगाडि नै प्रयोगबाट लोप हुँदै गएको विषयमा अगाडि नै चर्चा भएकै छ। १३ रौं शताब्दीका वोपदेवको मुग्धबोध भन्ने भाषासंबन्धी पुस्तकको ध्येय पनि सरलता र संक्षेपकै निमित्त छ। विद्या प्रचारका निमित्त वोपदेवले यो ध्येय लिएका हुन्।

वैदिक समयका ६४ वर्णहरू सरलता र शीघ्रताका निमित्त समयको क्रममा घट्तै गएर महाकवि कालिदासको समयमा ४६ मात्र प्रयोग भै पालि प्राकृत र अपभ्रंश र आधुनिक भाषाको समयमा अझ घट्तै गएको माथि चर्चा भएकै छ। यसले लिपि सुधार हुने क्रम वैदिक कालदेखि नै चलेको रहेछ भन्ने स्पष्ट नै छ। पाणिनि व्याकरण पनि उसै समयको पठन पाठनको सरलता र शीघ्रताका निमित्त सिर्जना भएको र यसपछि पनि सरलता र शीघ्रताका निमित्त अनेक व्याकरणी परंपरा चलिआएको पनि चर्चा भएकै छ। लिपि सुधार र व्याकरण सुधार गर्ने हाम्रो परंपरा ई० पू० ७०० अगाडिदेखि नै चलेर आएको छर्लङ्ग देखिएको छ। त्यसैले वर्तमान समयमा पनि हाम्रो परंपराले लिपि र व्याकरण सुधार गर्नमा कुनै रोकावट पाइँदैन। तर अबुझ बनेको बुझलाई बुझाउने उपाय भने केही छैन, आफ्नो स्वार्थ र ढिपी नै उसको आधार सिद्धान्त हुन्छ।



२. अति प्राचीन मिस्री लिपि ।





३. ई० पू० छैटौं शताब्दीको हेब्रू लिपि ।



५. पिपू लिपि । पालिको सबभन्दा प्राचीन लेख।



b

६. ज्यादै प्राचीन चीनी कविताको लिपि । ई० पू० १६ रौं शताब्दीतिरको ।

७. ई० पू० दशौं शताब्दीतिर सेमेटिक व्यापारीले ग्रीकहरूको फोनेसियन लिपि क्रमिक रूपमा सार्दै गए र त्यही लिपि यूरोपतर्फ पनि प्रचार हुँदै गयो भन्ने मत पनि छ। त्यही मतको पुष्टि, माथि ७ को, ई० पू० सातौं शदीको शुरूतिरको, ग्रीकलिपिको माथिको नमूनाले पनि गरेको देखिन्छ।

८. नवौं शताब्दीको याङ्गलो-स्याक्सन समयको लिपि। '7' उपरोक्त चिह्नले and ( र ) जनाउँछ।



